# आशाकाजी स्मृति विम्ब

## २०७३



**स्वर्गीय आशाकाजी बासुकला**
**(२००६ – २०५७)**

प्रकाशक :

**आशाकाजी बासुकला स्मृति प्रतिष्ठान**
भक्तपुर

ग्रन्थ : **आशाकाजी स्मृति बिम्ब**

प्रकाशक : आशाकाजी स्मृति प्रतिष्ठान २०७३

सम्पादक : कुमार भक्त रञ्जितकार

संयोजक : डा. जुनु मैयाँ बासुकला रञ्जितकार

सम्पादन सहयोगी : ज्योति किरण बासुकला, ई. राज किरण बासुकला, ई. रोजा किरण बासुकला

व्यवस्थापन : जुनेली किरण बासुकला, बिनेश मुनंकर्मी, जेनी किरण बासुकला, राजीव किरण बासुकला

प्रकाशन मिति : ने.सं. ११३७ थिंला चौथि
वि.सं. २०७३ पौष २ गते शनिबार
ई.सं. २०१६ डिसेम्बर १७

कम्प्युटर : भुविन महर्जन (९८५११३२६४०)

मुद्रक : यू-टर्न प्रिन्टर्स, कुलेश्वर।

## प्रतिष्ठानका पदाधिकारीहरू

| | |
|---|---|
| संरक्षक | : नकली बासुकला |
| अध्यक्ष | : ज्योति किरण बासुकला शिल्पकार |
| उपाध्यक्ष | : जुनेली किरण बासुकला मगजु |
| सचिव | : ई.राज किरण बासुकला |
| कोषाध्यक्ष | : डा. जुनु मैयाँ बासुकला रञ्जितकार |
| सह-सचिव | : ई. रोजा किरण बासुकला कर्माचार्य |
| सह-कोषाध्यक्ष | : राजिव किरण बासुकला |
| सदस्य | : जेनी किरण बासुकला राजलवट |
| सदस्य | : ई. लक्ष्मी सैंजु बासुकला |
| सदस्य | : ई. सृजना गोसाईं बासुकला |

सम्पर्क :
चोछैं, भक्तपुर नगरपालिका-९
०१-६६१०१५०
ashakaji.smriti@gmail.com

# हाम्रो परिवार



**स्व. निलकुमार बासुकला**
बुबा



**स्व. रत्नदेवी वैद्य बासुकला**
आमा



**केशरी बासुकला सुवाल**
ठूली दिदी



**स्व. गोविन्द सुवाल**
ठूलो भिनाजु



**विष्णु माया बासुकला सुवाल**
माइली दिदी



**स्व. कृष्णराम सुवाल**
माइला भिनाजु



**गुण केशरी बासुकला मुनंकर्मी**
साहिंली दिदी



**विश्वराम मुनंकर्मी**
साहिंला भिनाजु



**स्व. आशाकाजी बासुकला**



**नकली सितिखु बासुकला**
श्रीमती



**आसमाया बासुकला कोजु**
बहिनी



**राम भक्त कोजु**
बहिनी ज्वाइँ



**ज्योति किरण बासुकला शिल्पकार**
स्नातक नर्सिङ
नर्सिङ अधिकृत
त्रि.वि. शिक्षण अस्पताल
महाराजगञ्ज, काठमाडौं



**ई.राजाभाई शिल्पकार**
स्नातकोत्तर ई.सिभिल
उप-प्रबन्धक
अपर तामाकोशी
हाइड्रोपावर प्रोजेक्ट
नेपाल विद्युत प्राधिकरण
लामाबगर, दोलखा



**अजर शिल्पकार**
१२ अध्ययनरत
गोल्डेन गेट इन्टरनेशनल
कलेज
बत्तीस पुतली, काठमाडौं



**अनुज शिल्पकार**
कक्षा ९ अध्ययनरत
बागमती उच्च मा.वि.
सुकेधारा, काठमाडौं



**जुनेली किरण बासुकला मगजु**
एस.एल.सी.
गृहिणी



**सुकुराम मगजु**
एस.एल.सी.
त्रिशक्ति हार्डवेयर सेन्टर
कमलविनायक, भक्तपुर



**जुल्सन मगजु**
स्नातक अध्ययनरत
(कम्प्युटर साइन्स)
ब्रुखावेन कलेज
टेक्सास, अमेरिका



**सुजा मगजु**
स्नातक अध्ययनरत
(बि.बि.ए.)
नेपाल कलेज अफ
म्यानेज्मेन्ट, काठमाडौं
विश्वविद्यालय
धोबीघाट, ललितपुर



**श्रीजु मगजु**
कक्षा १० अध्ययनरत
एभरेष्ट इङ्गलिस स्कूल
मिबाछैं, भक्तपुर



**डा.जुनु मैयाँ बासुकला रञ्जितकार**
विद्यावारिधि (ने.सं.वि.)
प्राध्यापन र अनुसन्धान
पाटन संयुक्त क्याम्पस, त्रि.वि.
सेन्टर फर आर्ट एण्ड डिजाइन, का.वि.
सुगत बौद्ध महाविद्यालय, लु.बौ.वि.
विजेश्वरी उच्च मा.वि.



**कुमार भक्त रञ्जितकार**
स्नातक
समाचार सम्पादक र वाचक
(उज्यालो रेडियो नेटवर्क)
स्वतन्त्र लेखन/सम्पादन



**अग्रज रञ्जितकार**
कक्षा ९ अध्ययनरत
ज्ञान कुञ्ज उच्च मा. वि.
रविभवन, काठमाडौं



**ई.राज किरण बासुकला**
स्नातकोत्तर (शहरी विकास)
ईन्जिनीयर (आई.एल.ओ.)
जिल्ला प्राविधिक कार्यालय
रसुवा



**ई.लक्ष्मी सैंजु बासुकला**
स्नातकोत्तर (वातावरण ई.)
ईन्जिनीयर
जिल्ला प्राविधिक कार्यालय
घोराही, दाङ



**निरल बासुकला**
कक्षा १
स्युनाइटेड मन्टेश्वरी मोर्डन
एकेडेमी
घोराही, दाङ



**आरल बासुकला**
शिशु कक्षा
युनाइटेड मन्टेश्वरी मोर्डन
एकेडेमी स्कूल
घोराही, दाङ



**जेनी किरण बासुकला राजलवट**
स्नातकोत्तर (शिक्षा)
शारदा मा.वि.
यालाछैं व्यासी, भक्तपुर



**लक्ष्मी सुन्दर राजलवट**
दश जोड दुइ (व्यवस्थापन)
फाइनान्स एक्जुकेटिभ,
जी.ओ.अटोमोबाइल्स
थापाथली, काठमाडौं



**जस्मिन राजलवट**
जे.के.जी.
सनसाइन नेशनल स्कूल
दूधपाटी, भक्तपुर



**ई.रोजा किरण बासुकला कर्माचार्य**
स्नातकोत्तर इन्जिनियरीङ
(सूचना तथा संचार)
सहायक निर्देशक
दूरसञ्चार प्राधिकरण
कमलादी, काठमाडौं



**ई.किशन कर्माचार्य**
स्नातकोत्तर एम.बि.ए./बि.ई.
बरिष्ठ इन्जिनियर
नेपाल टेलिकम
धनगढी



**जेशन कर्माचार्य**
नर्सरी
सेरफ वर्ल्ड प्रि. स्कूल
दूधपाटी, भक्तपुर



**राजिव किरण बासुकला**
स्नातकोत्तर एम.बि.ए.
प्रोप्राइटर, आशा पोल्ट्री फार्म
छालिङ, भक्तपुर



**ई.सृजना गोसाई**
स्नातक इन्जिनियरीङ
ईन्जिनियर, सुबिसु केबल नेट
बालुवाटार, काठमाडौं



# नेपाल मजदुर किसान पार्टी

केन्द्रीय समिति

गोल्मढी, भक्तपुर – ७





फोन : ६६१०९७४

६६१००२६

फ्याक्स : ९७७–१–६६१३२०७

इ–मेल : nwpp@ntc.net.np


च.नं.

मिति : २०७३/०८/२४

## शुभकामना सन्देश !

राजनैतिक दल सिद्धान्ततः एक स्कूल अफ ठट (चिन्तनको निकेतन) हो । राजनैतिक दल एउटा न एउटा राजनैतिक दर्शन र वर्गको आधारमा निर्माण भएको हुन्छ । सरकारमा गएपछि तत्तत् राजनैतिक दलले आ–आफ्नो राजनैतिक दर्शनको आधारमा एक आदर्श समाजको निर्माणको थालनी गर्छ । हो, एक आदर्श समाज स्थापना गर्न एक ऐतिहासिक समय लाग्छ, ऐतिहासिक समयको अर्थ हो – ५० वर्ष, १ सय वर्ष वा शताब्दी हो । समयसँगै हार मान्नेहरूलाई साधारण जनताले पनि सोध्नेछन् – ६ महिनामा फलको आशा गर्ने हो भने धान रोप्ने हो र गहुँ छर्ने हो, १०–१२ वर्षमै फलको आशा गर्ने हो भने फलफूल (सुन्तला वा आँप) को बिरुवा रोप्ने हो, नयाँ पुस्तालाई सामान्य शिक्षित बनाउने हो भने विद्यालय र विश्वविद्यालय स्थापना गर्ने हो । तर देश र समाजको आमूल परिवर्तन गर्ने हो र एक आदर्श समाजको निर्माण गर्ने हो भने शताब्दी लाग्छ, त्यो पनि आजैदेखि आफूलाई त्यस काममा समर्पित गर्दै गएमा ! त्यसको निम्ति घरेलु, छिमेकी र अन्तर्राष्ट्रिय परिस्थिति आफ्नो अनुकूल हुनुपर्छ ।

रामायण र महाभारतका शासक परिवारहरूमा पनि शासन सत्ताको निम्ति देश निकाला र सशस्त्र युद्धहरू हुने गर्थे र ती उदाहरणहरू वा नजीरहरूलाई मानिसको मन–मस्तिष्कबाट हटाउन आदर्श रामायणहरू लेखिए–कर्तव्यपरायण पुत्र र प्रजाहरू तयार गर्न । हो, आदर्श र यथार्थमा भेद छ – यसकारण 'कल्पनालोक – सन् १५१६' थोमस मोरको साहित्य समाजमा देखियो ।

राजनैतिक दबुलीमा हरेक देश र समाजमा समयअनुसार चाणक्यजस्ता कुटील राजनीतिका पात्रहरू पनि देखा परे, पिताको विरोधमा पुत्र चन्द्रगुप्तलाई गद्दीमा राखेका घटनाहरू पनि नभएका होइनन्, यसको सिलसिला सन् १९६०–७० को दशकसम्म अरब देशमा देखियो ।

पूर्वीय देशहरूमा दास युग र सामन्ती युगमा बृहस्पति, चार्वाक र कपिलजस्ता भौतिकवादी दार्शनिकहरूको उदयले स–साना जातीय राज्यहरूका राजाहरू सत्ता त्यागेर बनवास वा चिन्तन–मननमा लाग्ने परम्परा देखियो र यसको सिलसिला महावीर वर्धमान र सिद्धार्थ गौतमको पालामा त्यस परम्परामा नयाँ पुस्ता देखा पर्‍यो । धातु युगको प्रवेशले कृषि उत्पादनको विकास, कुटीर व्यवसाय र व्यापारको विकास र सहरहरूको निर्माणले समाजमा सहरी समाज र व्यापारी वर्गको विकासले प्रवेश पायो । त्यसबेलाको युद्ध, हिंसा, लुटपाट, जातीय भेद आदिले समाजमा देखिएका अनेक विकृतिलाई महावीर वर्धमान र गौतम बुद्धका दर्शन र वचनले केही सीमासम्म मत्थर पार्ने काम गर्‍यो ।

तर पश्चिमी समाजमा पनि विजयी जुलियस सिजर (१००–४० ई.पू.) लाई उसका पराजित पक्षले सिजरकै सहयोद्धा ब्रुटसहरूलाई उचालेर वा मन्त्रयुद्धबाट उसको हत्या गरायो । तर सोभियत संघमा समाजवादको विरोधमा प्रतिक्रान्ति गराउन र सोभियत संघलाई नै छिन्नभिन्न पार्न संरा अमेरिका र नाटोका साम्राज्यवादी देशहरूले सुरुमा किरोभजस्ता क्रान्तिकारीको हत्या गराए र पछि ख्रुश्चेभ र गोर्भाचोभहरूबाट सोभियत संघ र पूर्वी युरोपेली समाजवादलाई पटाक्षेप गराए ।

नेपाल पनि विश्व राजनीतिक चेस बोर्डको एक कोठा हो । यसकारण नेपालका शासक परिवारमा पश्चिमेली शक्ति राष्ट्रहरूमार्फत् कुटील राजनीतिको हतियारबाट सम्पूर्ण परिवारको भ्रातृ हत्या गराइयो । त्यस्तै शासक दलहरूमा नेतृत्वको माझमा अनेक फूट र एकीकरणको चालहरू गरिरहनु स्वाभाविक हो । संरा अमेरिका र नाटो देशहरूले आफ्नो प्रभाव क्षेत्रको रुपमा दक्षिण एसियाको जिम्मा दिल्लीलाई सुम्पेको देखिन्छ । यसकारण नेपालको राजनीति अस्थिर छ ।

निर्वाचन, संविधानसभाको विघटन, पुनःसंविधान सभाको निर्वाचन, संविधानको निर्माण, विरोध र दिल्लीले स्वागत नगर्नु, नाकाबन्दी, सरकारको हेरफेर, संविधानको संशोधन प्रस्तावलाई दिल्लीको स्वागत आदि विश्व राजनीति रङ्गमञ्चको एक दृश्य हो । नेपाली जनताले आफूलाई दिल्लीमार्फत् ती पश्चिमी शक्ति राष्ट्रहरूको अगाडि आत्मसमर्पण



# नेपाल मजदुर किसान पार्टी

**केन्द्रीय समिति**

**गोल्मढी, भक्तपुर – ७**





फोन : ६६१०९७४
६६१००२६
फ्याक्स : ९७७-१-६६१३२०७
इ-मेल : nwpp@ntc.net.np


च.नं.

मिति : ..............................

गरेमा जसरी इतिहासमा अन्य देशहरू विश्व नक्साबाट लोप भए त्यस्तै नेपाल लोप हुने छ वा नेपाल राज्य नभई एक राष्ट्रमात्र रहनेछ ।

नेपाल मजदुर किसान पार्टीलाई शासक दलहरूले बरोबर टुक्र्याउन खोज्नु वा घात गर्नु राष्ट्रिय र अन्तर्राष्ट्रिय राजनीतिभन्दा पृथक विषय होइन । त्यस्तै नेपाली राजनीतिको दबुलीमा प्रतिष्ठित सम्झिएका पिताका पुत्र-पुत्रीहरूलाई सत्ताको हिस्सेदारहरू बनाएर अनेक भ्रष्टाचार र देश विखण्डन गराउने कार्यहरू गराउँछन् । तिनीहरूका समूहमा कति कार्यकर्ताहरू दिल्लीबाट सञ्चालित कुटील राजनीतिको भाग हुनसक्ने हुँदा राजनैतिक परिवारका सन्तानहरूको विवाह आफै एक संवेदनशील विषय हुन्छ । भारत, म्यानमार, नेपाल र अन्य एसियाली देशहरूको राजनैतिक परिवार आफै अध्ययनको विषय हो ।

आशाकाजी बासुकला नेमकिपाको एक कार्यकर्ता, एक मेयर, एक सांसद र केन्द्रीय समितिका सदस्य हुन् । आफ्ना छोरीहरूको नाम जेनी र रोजाको नाम राख्नुले जेनी मार्क्स र रोजा लक्जेम्वर्गको सम्झना हुन्छ । यसकारण प्रतिक्रियावादी वर्ग र पूँजीवादी कार्यकर्ताहरूले प्रत्यक्ष र अप्रत्यक्ष रुपले आशाकाजी बासुकला परिवारका सदस्यहरू र साथीहरूलाई समेत विविध विषयमा भ्रममा पार्ने कोसिस गर्नेछन् । त्यसैले सबै साथीहरूले पार्टीका परिवारहरूबारे एकले अर्काको हेरचाह गर्ने, सहयोग गर्ने र सचेत गराइ रहनु आवश्यक छ । हाम्रा नयाँ पुस्ताले पनि क्रान्तिकारी पुस्ताको निरन्तरतालाई अगाडि बढाउँदा देश र जनता तथा नयाँ युगको समेत सेवा हुनेछ ।

साथी आशाकाजी बासुकलाजस्तै देश र जनताप्रति समर्पित जयराम बासुकला पनि बित्नु भयो । उहाँहरूजस्तै अन्य धेरै साथीहरू पनि आज हामीसँग हुनुहुन्न तर उहाँहरूलाई हामी सँधैं सम्झिरहन्छौं र नयाँ नयाँ साथीहरूले उहाँहरूका राम्रा विचार एवम् व्यवहारबाट सिक्नुहुन्छ । यस अर्थमा उहाँहरू प्रेरणाका पात्रहरू पनि हुनुहुन्छ । हो, हरेक मानिसमा राम्रा र सबल पक्षका साथै कमजोर पक्ष पनि हुने गर्छ । हामीले हाम्रा साथीहरूको राम्रा र सबल पक्षलाई उज्ल्याउनु आवश्यक हुन्छ ।

खेतमा बालीसँगै घाँसपात पनि हुन्छ, त्यसैले किसानले बरोबर गोडमेल गरेर घाँसलाई फाल्ने गर्छन् । त्यस्तै समाजमा सकारात्मक तत्वहरू र नकारात्मक तत्वहरू पनि हुन्छन् । हामीले सकारात्मक तत्वहरूसँग मेल गर्ने तथा भाँड्ने र आपसमा वैमनस्य फैलाउने तत्वहरूलाई चिन्ने र उदांग्याउने काम गर्नु हाम्रो कर्तव्यभित्र पर्छ ।

आशाकाजी बासुकला परिवारको एक सदस्य मात्र हुनुहुन्न, उहाँ समाज र नेमकिपाको एक महत्त्वपूर्ण सदस्य पनि हुनुहुन्छ । यसबारे परिवार र पार्टीका सबै साथीहरू सचेत हुनैपर्छ । परिवारका सदस्यहरू मिलेर उहाँको 'स्मृति प्रतिष्ठान' मार्फत एक 'स्मृतिग्रन्थ' प्रकाशित गर्ने योजनाले सकारात्मक सन्देश प्रवाह हुने आशा गर्दै शुभकामना सन्देश यही टुंग्याउँछु । धन्यवाद !

२०६३ २४

नारायणमान बिजुक्छें (रोहित)
अध्यक्ष, नेपाल मजदुर किसान पार्टी



# व्यवस्थापिका-संसदको सभामुखको कार्यालय




ओनसरी घर्ती
सभामुख

फोन : ४२००१५९
फ्याक्स : ४२००१३७
सिंहदरवार, काठमाडौं, नेपाल ।

प.सं.
च. नं.

## शुभकामना

लामो समय सम्म सामाजिक कार्यमा कटिवद्ध रहि संघर्षशिल जिवन यापन गर्नु भएका तथा भक्तपुर जिल्लावाट पूर्व प्रतिनिधि सभा सदस्य समेत भै सक्नु भएका स्व. आशाकाजि बासुकला स्मृतिमा प्रतिष्ठानले आशाकाजि बासुकला स्मृति ग्रन्थ प्रकाशन गर्न लागेकोमा खुसि लागेको छ । देश र जनताको नाममा लामो संघर्ष गरेका यस्ता योद्धाहरुको इतिहाँस संरक्षण गर्नु हाम्रो कर्तव्य हो । यस्ता योद्धाहरुको जिवनको कथा सवैका लागि प्रेरणादायी हुने गर्दछ र सोको संरक्षणको लागि प्रतिष्ठानले गरेको कार्य आफैमा प्रशंसनिय रहेको छ । राष्ट्रको सेवा र सामाजिक कार्यमा उहाँले पुऱ्याएको योगदानको सवैले उच्च सम्मान गर्नु पर्दछ र मैले पनि व्यातिगत रुपमा समेत उहाँले देश र जनताको लागि पुऱ्याउनु भएको योगदानको उच्च सम्मान गर्दछु ।

यस प्रतिष्ठानले प्रकाशन गर्न लागेको स्मृति ग्रन्थले आशाकाजि बासुकलाको प्रेरणदायी वास्तविक जिवन कथा सवै सामु छर्लङ्ग देखाउन सहयोग पुऱ्याएको छ । यसलाई प्रकाशन गर्न महत्वपूर्ण भुमिका निर्वाह गर्ने प्रतिष्ठान परिवार तथा ग्रन्थ प्रकाशनमा प्रत्यक्ष तथा अप्रत्यक्षरुपमा सहयोग पुऱ्याउनु हुने महानुभावहरुलाई हृदयदेखि नै धन्यवाद व्यक्त गर्दछु । यस स्मृति ग्रन्थ सवैको लागि प्रेरणदायिक रहोस भन्दै ग्रन्थ प्रकाशनको पुर्ण सफलताको कामना गर्दछु ।

मिति २०७३/०८/२२

ओनसरी घर्ती




# पूर्व सांसद मञ्च, नेपाल

(संसदको परासर्शदातृ अंग)




द.नं. १४२-०५७/०५८
पो.ब.नं. २६०७७, सुन्धारा, काठमाडौं
फोन : ०१-४२००४१०
इ-मेल : fmpsforumnepal@gmail.com

## शुभकामना

नेपाल मजदूर किसान पार्टीका तर्फबाट भक्तपुर क्षेत्र नम्बर २ बाट निर्वाचित पूर्व प्रतिनिधिसभाका सदस्य, भक्तपुर नगरपालिकाका पूर्व प्रधानपञ्च तथा आजीवन जनताका सेवक स्वर्गीय आशाकाजी बासुकलाको जन्मजयन्तीको अवसरमा **आशाकाजी बासुकला स्मृति प्रतिष्ठानले** प्रकाशन गर्न लागेको स्मृति ग्रन्थले वहाँको योगदानको कदर गरेको छ। स्मृति ग्रन्थ प्रकाशित गर्नु भएकोमा पूर्व सांसद मञ्चको तर्फबाट हार्दिक शुभकामना व्यक्त गर्दछु।

शंकरनाथ शर्मा अधिकारी
महासचिव

नेपाल सरकार
संघीय मामिला तथा स्थानीय विकास मन्त्रालय



# जिल्ला विकास समितिको कार्यालय

भक्तपुर

फोन ६६१४८२६, ६६१०९७०, ६६१२२४१, ६६१८३७८




पत्र संख्या: / ०७३/ ७४
च.नं. ६४९

मिति: २०७३।८।२६

बिषय - **शुभकामना !**

यस जिल्ला अन्तर्गत क्षेत्र नं. २ भक्तपुरबाट जननिर्वाचित पूर्व प्रतिनिधि सभा सदस्य एवम् भक्तपुर नगरपालिकाकाका पूर्व प्रधानपञ्च तथा आजीवन जनताका सेवक **स्वर्गीय आशाकाजी बासुकला**को जन्मजयन्तीको अवसरमा आशाकाजी बासुकला स्मृति प्रतिष्ठानले **आशाकाजी बासुकला ग्रन्थ** प्रकाशित गर्न लागेकोमा खुशी लागेको छ । देश र जनताप्रति गरेको योगदानलाई पुस्तकको रुपमा प्रकाशित गरी सबैलाई गुण लगाउनका लागि कृति सफल रहन सकोस् भन्ने शुभेच्छा प्रकट गर्न चाहन्छु ।

आगामी दिनका पनि ग्रन्थको निरन्तरताको कामना गर्दै प्रकाशित ग्रन्थ सम्पूर्ण पाठकहरुका लागि उदाहरणीय एवम् प्रेरणादायी बनोस् भनी हार्दिक शुभकामना व्यक्त गर्दछु ।

(ध्रुवप्रसाद कोइराला)
स्थानीय विकास अधिकारी
स्थानीय विकास अधिकारी

E-mail: ddcbhaktapur@gmail.com, Website: www.ddcbhaktapur.gov.np , Fascimile: 977-01-6613215






स्वच्छ नगरपालिका

# भक्तपुर नगरपालिका कार्यालय

दरबार स्क्वायर, भक्तपुर

**BHAKTAPUR MUNICIPALITY OFFICE**

**(DURBAR SQUARE, BHAKTAPUR)**




पत्र संख्या: १८४४
चलानी नं. २९९६

मिति:- ०६३/८/२२

## शुभकामना

नेपाल मजदुर किसान पार्टीका तर्फबाट भक्तपुर क्षेत्र नम्बर २ बाट निर्वाचित पूर्व प्रतिनिधिसभाका सदस्य, भक्तपुर नगरपालिकाका पूर्व प्रधानपञ्च तथा आजीवन जनताका सेवक स्वर्गीय आशाकाजी बासुकलाको जन्मजयन्तीको अवसरमा आशाकाजी बासुकला स्मृति प्रतिष्ठानले प्रकाशन गर्न लागेको स्मृति ग्रन्थले वहाँको योगदानको कदर गरेको छ । स्मृति ग्रन्थ प्रकाशित गर्नु भएकोमा भक्तपुर नगरपालिकाको तर्फबाट हार्दिक शुभकामना व्यक्त गर्दछु ।

रोहितराज पोखरेल
कार्यकारी अधिकृत

# शब्द श्रद्धा सुमन



जन्म र शरीर अनित्य भन्ने थाहा पाउँदा पाउँदै काम, क्रोध, लोभ, मोह आदिमा फँस्न पुग्दछ मानव। यिनै मानवीय दूर्गुणहरुका कारण समाज प्रदूषित र दूर्घन्धित बन्न पुग्दछ। त्यस्तै दूर्गन्धले समय र युगलाई नै बदनाम तुल्याउन सक्दछ। त्यस विपरीत सत्य र निष्ठाका धेरै नमूनाहरु पाइन्छन् समाज र संसारमा, एक व्यक्ति र समूहको नेतृत्वमा युग परिवर्तन गरिएका उदाहरणहरु पनि छन्। हामी त्यस्ता उदाहरणीय ऐतिहासिक पात्रहरुको खोजीमा निरन्तर लागिरहेका छौं र रहनेछौं।

नेपालको प्राचीन राजधानी भक्तपुर कला, साहित्य, संगीत, संस्कृति र सम्पदामा मात्रै अग्रणी नभई राजनीति र कूटनीतिमा पनि उदाहरणीय छ। प्राचीनकालदेखि नै भक्तपुरको समाजमा विभिन्न प्रकारले विभिन्न व्यक्तित्वले विभिन्न क्षेत्रमा योगदान दिएका छन्। मल्लकालमा कला, साहित्य, संगीत, संस्कृति र सम्पदाले उन्नत अवस्थामा पुगेको भक्तपुरमा आधुनिककालमा आइपुग्दा पनि धेरै व्यक्तित्वहरुले विभिन्न प्रकारले योगदान दिँदै समाजलाई अगाडि बढाएका छन्।

राणाशासन विरोधी आन्दोलनदेखि पञ्चायत व्यवस्था विरोधी आन्दोलनसम्म पनि भक्तपुरले आफ्नो छुट्टै विशेषता सहित अग्रता कायम राख्यो। नेपाल मजदूर किसान संगठनको गठन र किसान पक्षीय आन्दोलनको शुभारम्भपछि भक्तपुर देशकै नमूना अग्रणी राजनीतिक चेतनाका बाहक जिल्ला बन्न पुग्यो। सोही संगठनका एक इमान्दार योद्धा हुनुहुन्थ्यो, दिवंगत आशाकाजी बासुकला।

पञ्चायती व्यवस्थाको चरमकालदेखि शुरु भएको उहाँको राजनीतिक यात्रा संसदीय बदनामकालसम्म पुगेर टुंगियो। अनेकौं आरोह अवरोहबीच पनि आफ्नो निष्ठा अटल राखेर जनअधिकारका लागि यातना खप्दै जेल जीवन व्यहोर्नुभएका उहाँले संगठनका इमान्दार कार्यकर्ता र सादा जनप्रतिनिधिका रुपमा प्रधानपञ्च र सांसदको ओहोदामा स्वच्छ र सफलतापूर्वक जिम्मेवारी पूरा गर्नुभयो। उहाँको दुःखद् असामयिक निधनको १६ वर्षपछि पनि उहाँका बारे स्मरण लेखहरु पर्याप्त प्राप्त हुनुले हामीमा उत्साह बढाएको छ। यसमा उहाँका परिवारजन हामीले गरेका र भोगेका अनुभव पनि विस्तृत रुपमा प्रस्तुत भएको छ।

आशाकाजी बासुकला स्मृति प्रतिष्ठानको जन्म यस्तै समाजका कैयौं क्षेत्रबाट प्राप्त स्नेहका कारण उब्जिएको भावनाबाट भएको हो। उहाँका कृति, योगदान र लेखनहरु संकलन र सुरक्षित राख्दै सामाजिक सेवा कार्यमा निरन्तरता दिने उद्देश्यकासाथ गठित यस प्रतिष्ठान आगामी दिनमा समाजकै हितमा समर्पण रहनेछ। यसरी नै हामी उहाँप्रति श्रद्धा सुमन चढाउँदै जानेछौं।

फाराम नं ७१

# निर्वाचन आयोग

## निर्वाचन अधिकृतको कार्यालय

भक्तपुर जिल्ला, निर्वाचन क्षेत्र नं. २




## प्रतिनिधिसभा सदस्य परिचय-पत्र

नेपाल अधिराज्यको संविधान, २०४७ को धारा ४५ को उपधारा (२) बमोजिम गठन हुने प्रतिनिधिसभाको सदस्यको निम्ति सम्वत् २०५१ साल कार्तिक २९ गते भएको निर्वाचनमा भक्तपुर जिल्ला, निर्वाचन क्षेत्र नं. २ बाट श्री आशाकाजी वासुकला निर्वाचित हुनु भएको प्रमाणित गरी यो परिचय-पत्र प्रदान गर्दछु ।

मिति: २०५१/८/३०

निर्वाचन अधिकृत

# विषयसूची

# Biography

Name : **Ashakaji Basukala**
Life Period : 20th Dec. 1951 - 5th Oct. 2000
Address : Chochhen Tole, Bhaktapur-9, Nepal
Father's Name : Nil Kumar Basukala
Mother's Name : Ratna Devi Baidhya
Spouse's Name : Nakali Sitikhu.
No. of Children : 5 daughters & 2 sons
Religion : Hindu
Mother tongue : Newari
Academic Qualification : Bachelor in Arts. (Tribhuvan University)

**Political Career:**

- Entered in Students Activities in 1964.
- Active in peasants Movement and Susta Save Territory Movement in 1969.
- Membership received, Communist Party of Nepal in 1969.
- Active Participation in the Anti-Corruption Movement of 1969-70.
- Imprisoned for 6 months in connection of cultural Activities in 1969.
- Candidate of Ward Member of ward No. 9 in 1974.
- Warrant Issued by the then Bagamati Zonal Office in 1976.
- Arrest in the demonstration launched at Bhaktapur in support of Jugedi Struggle (Chitwan) in 1977.
- Active fo r Multiparty System in the Referendum held in 1980.
- In Police Custody in the Peaceful Movement Launched by Five Lefties Parties in 1987.
- Elected Mayor (Pradhanpancha) of Bhaktappur in 1986.
- Imprisoned for 20 month at Centre Jail, Kathmandu in the conspired case of Panchayat Regime in 1989.
- Chairman, Society for Korea Study.
- Central Member and Treasurer of Nepal Workers and Peasants' Party.
- Elected Member of the House of Representatives in 1994.



## आफ्नै बारेमा

१. राजनीतिमा लाग्नु भन्दा पहिले म विद्यार्थी थिएँ। विद्यार्थीको काम पढ्नु, लेख्नु र घर धन्दामा सहयोग गर्ने मेरो कामहरु थिए । टोल र विद्यालयका कम्युनिष्ट गुणहरुको प्रभावबाट विना सैद्धान्तिक अध्ययनले भावनाबाट राजनैतिक गतिविधिमा लागेको हुँ ।

२. शिक्षक हुनु भन्दा पहिले र शिक्षक भएपछि पनि आर्थिक गतिविधिमा लागेको थिए । भक्तपुर जिल्लामा रासयनिक मल विक्रेताहरुले कालो बजारी गरी बढी मोल लिने गरेको देख्दा मल विक्रीको डिलरसिप लिई कमिशन मात्र खाने गरी मल व्यापार गरेको थिएँ । टोलका किसान साथीहरुको सहयोग लिई खुर्सानी व्यापार र गहुँ व्यापारमा लागेको थिएँ।

३. विद्यालय र टोलका प्रारम्भिक विद्यार्थी समिति पनि बरोबर साहित्य सम्बन्धी कविता गोष्ठी हुन्थ्यो । त्यस गोष्ठीमा कविता वाचन गर्नु र देश विदेशका साहित्यकारहरु, रुसका गोर्की, भारतका राहुल सांकृत्यायन र चीनका लूश्यून जस्ता साहित्यकारहरु, साहित्यिक अध्ययनले साहित्यिक बुझेको छ। मैले के कुरा बुझेँ भने साहित्यले जनतालाई प्रभाव पारेर देशलाई परिवर्तन गर्न सकिन्छ। गाइजात्रामा साहित्यिक गीत र नाटकहरु लेखेर प्रहसनहरु पनि गरेका थियौँ ।

४. २०४३ सालमा स्थायी शिक्षक जागिर छाडेर स्थानीय निर्वाचनमा प्रधान पञ्चको उम्मेदवार भै निर्वाचन लडेको थिएँ । पार्टी र नगरवासीको विश्वासले म प्रधानपञ्चमा विजयी भएँ। नगरपालिकामा प्रधानपञ्च

भई कार्य गर्दा मैले धेरै कुराको अनुभव गरे ।
क. नगर र नगरवासीको समस्या,
ख. ऐन कानूनको त्रुटीले स्वायत्त ऐन रक्षा गर्न नसकिने र
ग. अधिकारविहीन प्रधानपञ्च भइरहने ।

५. ०४६ सालको जनआन्दोलनले पुनः प्रजातन्त्र प्राप्त भएपछि म भन्दा जान्ने बुझ्ने राजनीतिक कार्यकर्ता अगाडि आउने छन् । पहिलेको तुलनामा मैले त्यति काम गर्नु पर्दैन होला भनेर मैले विचार गरेको थिएँ । घरमा पनि सक्रिय राजनीति नगर्ने भनेर स्थानीय निर्वाचनमा लड्नु पर्ला भनेर गाउँमा बसेर कुखुरापालन व्यवसाय गरेको थिएँ । जब स्थानीय निर्वाचन नजिकिदै गयो । संकीर्ण विचारका मेरा साथीहरुले मेरो आलोचना गर्न थाले । मैले बुझेको दर्शन अनुसार कुनै साथीहरुले गल्ती गऱ्यो भने समयमै आलोचना गर्नुपर्छ । म स्थानीय निर्वाचनमा उम्मेदवार बन्छ भनेर जुन आलोचना मलाई गऱ्यो, त्यो मेरो निम्ति सहज थिएन । गाउँमा बसेर पनि पार्टीको कुनै गतिविधिममा पछि लागे जस्तो मलाई लागेन ।

प्रतिनिधि सभाको उम्मेदवार बन्न पनि चाहेको थिइनँ । मैले पार्टीको राष्ट्रिय सम्मेलनमा आफ्नो भावना व्यक्त गर्दा पार्टी इतिहास भएको व्यक्तिलाई उम्मेदवार दिनुपर्छ भनेर बोलेको थिएँ । पार्टी बैठकले पनि इतिहास भएको व्यक्तिलाई उम्मेदवार चयन गरेको थियो । त्रुटीले नागरिकता र मतदाता नामावली लिएकोमा भएको भिन्नताले गर्दा पार्टीको नियम अनुसार काठमाडौंमा उम्मेदवार चयन गर्न गएको मान्छे फर्केर उम्मेदवारी बन्नु मैले चिताएको कुरा होइन । पार्टी, दोस्रो निर्वाचनमा मलाई उम्मेदवार बनायो । त्यो मेरो कल्पना भन्दा बाहिर थियो ।

६. संसद भएर मैले १४,२०० भत्ता मैले पाउने गरेको छु । त्यस मध्ये ७० प्रतिशत भन्दा बढी पार्टीलाई नै बुझाउने गरेको छु ।

७. जहाँसम्म मैले घर जग्गामा पैसा लगानी गरेको हल्ला गरिएको छ, त्यो कुरो साँचो होइन । मैले घरजग्गाको काम गरेर आर्थिक लाभ गरेको कुनै साथीले देखाउनु भयो भन्ने त्यो साथीलाई आफ्नो हक दाबी छोडेर लेखेर दिनेछु ।

८. घर जग्गा दलाली गरेर मलाई घर बनाउनु छैन । मेरी जहानको नाममा खरीद गरेको जग्गामा घर बनेको छ । त्यही घर धितो राखेर मेरी जहानले लाखौं ऋण पनि बोकेकी छे । ने. बैं. लि. र नवदूर्गा फाइनान्स कम्पनीमा मेरी जहानको ऋण बुझे प्रष्ट थाहा हुनेछ ।

९. म घरको एक्लो छोरा हुँ । म कुनै आर्थिक लाभमा लागेको छैन ।

१०. पैसा कमाउने हो भने प्रतिनिधि सभाको सदस्य बन्नु पर्दैन । प्रतिनिधि सभाको सदस्य भएर झन् मलाई आर्थिक घाटा लागेको छ । खुलेआम आर्थिक लाभमा लागेको भए म पहिले नै धनी बन्थे । पार्टीमा लागेर मल व्यापार छोडैं । पुस्तक पसल पार्टीकै आदेशले खोलेको थिएँ । पार्टीकै आदेशले मैले पुस्तक पसल छोडैं । धान बाली र मकै वारी समेत गरी १५ रोपनी जग्गा मेरो बुबाको नाममा जोतपोत कायम छ । गाउँमा ठूलो घर छ । छुसी हाल्ने घर पनि छ । भक्तपुर नगर भित्र दुइवटा घर छन् ।

## पार्टी राजनीतिबारे



लोभी र पापीहरु पार्टी छोड्दैमा पार्टी लोप भएर जाँदैन । पार्टी र जनतामाथि विश्वासघाट गर्नेहरु पार्टीमा टिक्न सकिने छैन । पार्टीले बेला बखत मार्क्सवादी शिक्षा

अनुसार शुद्धिकरण आन्दोलनलाई व्यापक रुपले अगाडि बढाएको खण्डमा पार्टी भित्र लगिने छ र पार्टीले त्यस्ता व्यक्तिहरुलाई निष्कासन गर्नेछ ।

हाम्रो पार्टीले भन्दै आएको कुरा पश्चिमाञ्चलममा एमाले गतिविधिहरुबाट जनताले बुझ्दै आएका छन् । एमाले कम्युनिष्ट होइन । कम्युनिष्टको बदनाम गर्न कम्युनिष्ट बनेका नक्कली कम्युनिष्ट हुन् भनेर चिनिसकेका छन् । नेपाली काँग्रेस राष्ट्रिय प्रजातन्त्र पार्टीबाट टिकट नपाएका कार्यकर्ताहरुलाई आफ्नो पार्टीको टिकट सूर्य चिन्ह लिन लगाएर कतिपय व्यक्तिहरुलाई चुनाव उठाएर जिताए पनि ।

हिजोका प्रतिकार समितिका सदस्य पंचायतकालका ख्याति प्राप्त पञ्च नेपालगञ्जको दबल शमशेर जबरा जस्ता खुखार व्यक्ति आज एमालेबाट नेपालगञ्ज नगरपालिकाको मेयर पदमा निर्वाचित भएका छन् । यस किसिमबाट जिल्ला जिल्लाको स्थिति बुझ्दै लगेमा एमाले कुन वर्गको सेवा गर्ने पार्टी हो भन्ने स्पष्ट रुपमै बुझ्ने छन् ।

नेमकिपा सानो भएको र पार्टीबाट सहुलियत कहिले नपाउने, २४ सै घण्टा पार्टीको निम्ति सोच विचार गर्नुपर्ने पार्टीमा बसेर आफ्नो केही नाम हुन नसकिने कारणबाट चुनावमा विजय भएर पनि दिल्ली महत, विनोद शाही र भक्त रोकायाले पार्टी छोडे । नेमकिपाको कठोर नीतिको कारणले पार्टी छोडेर अन्य पार्टीमा मिल्न गएको हो । ठूल्ठूला पार्टीबाट मात्र कार्यकर्ता तथा नेताहरुलाई प्रलोभन मिल्छ । ती आशले मात्र पार्टी फेरेका हुन् ।

एमाले नेता र कार्यकर्ताहरुले नेमकिपाका कार्यकर्ताहरु देखेर तर्सेर अनेक माध्यमबाट जिल्ला जिल्लामा उम्मेदवारीको लागि आवेदन दिइसकेका कार्यकर्ताहरुलाई दरखास्त फाराम फिर्ता लिन बाध्य तुल्याउन कार्यहरु गरे ।

कालिकोटमा धिरज बहादुर विष्ट र दैलेखको नारायण नगरपालिकाको उप-मेयर पदका प्रत्यासी बन्ने नेमकिपाका कार्यकर्तालाई नाम फिर्ता लिन बाध्य पारे । रोहित एमालेमा नेता बन्ने भए । दिल्ली महत, विनोद शाही, रंगनाथ जोशी र अनेक रोकायाको राजनीतिमा अझ कति दिन रहने हो हेर्न मात्र बाँकी छ भनेर भ्रामक प्रचार एमालेका कार्यकर्ताहरुले गरे ।

## पार्टी बैठक, जनसम्पर्क र गतिविधिबारे



पार्टी केन्द्रिय सचिवालयको बैठक बिहान ८ बजे सुरु भयो । पार्टी बैठकले केन्द्रिय सचिवलाई समयमा बैठक नबोलाएको आलोचना गरियो । आफूले गरेको गल्तीलाई महसुस गरी सचिव क.प्रेम सुवालले आत्म आलोचना गऱ्यो । केन्द्रिय बैठक बेलुकी ८ बजेसम्मको बैठकले अर्को निर्णय लिन स्थगित गरियो ।

अगामी स्थानीय निर्वाचनबारे छलफल र पार्टी जिल्ला कमिटी र नगर कमिटीबारे सचिवालयको धारणा र गर्न पर्ने सोचाइ बारे कुराकानी गर्ने र नयाँ वन्दोवस्तको लागि सोच विचार गर्ने आपसी छलफल भएको थियो ।

सुडाल गा.वि.स.मा एकाइ कमिटीको बैठकमा भागलिन जयरामजी सँगै ताथली सुडालको भ्रमण गरियो ।

सुडालमा जि.बि.स. उपसभापति केदार अधिकारीसँग पसलमा चियापान र समसामयिक राजनैतिक विषय छलफल र आगामी स्थानीय निर्वाचनबारे पार्टीको धारणा अनुरुप सैद्धान्तिक ज्ञान र व्यवहारिक पक्ष विचार

गर्नु पर्ने ।

साथी हरिभक्त बखुन्छे र लक्ष्मी वासुसँग सम-सामयिक विषयमा छलफल गरेको । सुविधाबारे विमर्श गरेको । विकास रकमलाई कस्तो ठाउँमा प्रयोग गर्ने सार्थीहरुको बीचमा छलफल गर्नु पर्ने आवश्यकता भएको छ ।

पहिले जस्तै विकास रकम जन-सहभागिता हुने ठाउँमा प्रयोग गर्दा मात्र काम देखिने हुन्छ । त्यस कारण त्यस्तो ठाउँमा प्रयोग गर्नु आवश्यक मैले देखेको छु । तपाईहरुले पनि विचार गर्नु होला ।

नेपाल मजदुर किसान पार्टीलाई स्थानिय निर्वाचनका निर्वाचनमा स्वतन्त्र चिन्ह दिने निर्वाचन आयुक्तको निर्णय हाम्रो पार्टीको निर्वाचन चिन्ह मादल स्थानिय निर्वाचनमा पनि सोही चिन्ह कायम गर्न निर्वाचन आयोगमा अन्य १७ वटा राजनैतिक दलका साथ सहभागी भै विरोध प्रदर्शनमा भाग लिएको ।

सबै दललाई राजनैतिक मान्यता देउ । दलको आधारमा निर्वाचन चिन्ह देउ । दुई दलिय तानाशाही मुद्रावाद सबै राजनैतिक दललाई समान रुपमा राखियो ।

मध्यपुर नगरपालिका वडा नं.८ मा दुई ननीमा किसान कार्यकर्ताहरुको एक भेला भयो । उक्त भेलामा ने.का.यु. संघ केन्द्रिय समितिका ज्ञान सागर प्रजापती उपस्थित हुनु हुन्थ्यो ।

उक्त ठाउँमा किसानहरु नयाँ जाँगरका साथ भेला हुनु मै हाम्रो पार्टीको गतिविधिलाई राम्रो नजरले हेरिएको अवस्था देख्यो । वरोवर गएर सक्रिय कार्यकर्ता तयार पार्नु आवश्यकता देखिन्छ ।

सन राईन क्लवको विहान ७ बजे कार्यक्रममा पुरस्कार तथा प्रमाण पत्र वितरण समारोहमा प्रमुख अतिथिको वितरण गर्नु पर्नेमा ठिक समयमा पुग्नु पर्नेमा आठ बजे कार्यक्रम शुरु भयो ।

कार्यक्रम पछि ताहाननी स्थानिय युवाहरुसँग भेटघाट र वडा नं.२ नवज्योती युवा क्लबका युवा साथीहरु बीचमा वर्तमान समसायमिक विषयमा छलफल र विधान बारे, दर्ता सम्बन्धी कुराकानी भयो ।

बिहान ७ बजे Active English School मा साथीहरुको भेला भयो । केही छलफलपछि वडा नं. ७ का साथीहरु सँग आपसी छलफल । भुलाखेलमा युवासाथीहरुसँग विकास निर्माणबारे छलफल गरियो ।

बेलुकी ७ बजे नवज्योती यूवा क्लब युवाहरुसँग भेला १ घन्टा अगाडि स्थानिय निर्वाचन बारे छलफल गरी स्थानिय यूवा साथी सूर्यकाजी म्हासेमाको घरमा भेला ।

बालकुमारी यमरोलमा श्याम सुन्दर श्रेष्ठ र श्यामकृष्ण श्रेष्ठसँग स्थानिय समस्या बारे टोलमा छलफल भयो ।

मध्यपुर नगर पालिका वडा नं. ७ का मतदाता साथीहरुसँग स्थानिय निर्वाचनबारे छलफल र भूलाखेलको इटा छपाई र पोखरीमा बार लगाउने बारेमा भूलाखेलमा ने.का.एमाले र राप्रपासँग लामो ३ घण्टा छलफल ।

स्थानिय निर्वाचन अगाडि केही सहयोग गर्न नसकिने । संसदलाई विकास कार्यमा सहभागी गराउने उद्देश्यले छुट्टाएको चार लाख रकमसम्म वितरण नगरिएको स्थानिय निर्वाचनपछि कार्यको रकम बाडफाड गर्ने ।

रविन्द्रजी सत्यनारायण भक्तपुरको इताछेबाट पुरानो ठिमीसम्म पैदल भ्रमण गरी गम्बु चिब्रमा बैठक, रविन्द्रबाट शुरु गऱ्यो ।

भूलाखेलमा नेपाली कांग्रेस महेश श्रेष्ठसँग कुराकानी गरी अझ कांग्रेससँग मेरो सूर्यकाजीको घरमा छलफल गर्न गए ।

सूर्यकाजीले लामो छलफल पछि बेलुकी संयुक्त जनमोर्चाका साथीहरुको बीचमा स्थानीय निर्वाचनबारे वैठक गर्ने वृद्ध जानकारी ।

विहान ६ बजे सुर्यविनायक जाँदा सिपाडोलमा श्याम सुवाल फेरि सिला रिजालसँग गए । भक्तबहादुर तामाङसँग मेरो स्थानिय समस्याबारे कुराकानी विद्यालयमा बनाउनु पर्ने राय । चन्द्र सुर्य उच्च मा. विद्यालय कुनै इजाजत पत्र लिनु पर्ने कुराकानी भयो । दिल बहादुर र रामकृष्णसँग भेटी ठाउँ ठाउँमा स्थानिय समस्या बारे छलफल गरे । गा.वि.स.मा गोकर्णेश्वर महादेव निमार्ण गर्नुपर्ने राय दिनु भयो ।

आज बिहान ६ बजे पकुनेपाटीसम्म पुगेर चियापान गर्दै पिखेल तर्फ हिडी कार्कीजीसँग कुराकानी गर्दै रहँदा मेजर साहेव गाडीमा आउनु भो मलाई बोलाउन गरेको हेर्दा चम्पक नारायण मन्दिरमा हामी दुवै गई

त्यहाँको विग्रेको रथ बनाउन सल्लाह गरी सिकर्मीहरुले १२, १३ दिनभित्र रथ बनाउन नसकिने वचन दिनुभयो। भोलीपल्ट देखि बनाउने भन्यो।

बिहान ७ बजे चांगुनारायण गा.वि.स. वडा नं.३ का मनदाताहरुसँग कुराकानी गरी छाप गएर बुढोसँग छलफल गरे।

काठमाडौं देशको राजधानी हो। देशको हिमाल, पहाड र तराई सुन्दर दृश्य हेर्न आउने पर्यटकहरुको निम्ति काठमाडौं शहर पर्यटक द्वार हो।

२०-३० वर्ष अघि काठमाडौं उपत्यका स्वच्छ शान्त र पर्यटकिय आकर्षक केन्द्र थियो। आज काठमाडौं उपत्यकाका दूषित अशान्त र कुरुप बनिरहेछ।

उपत्यका भित्रका कलकारखानाहरुबाट सयौं टन हानिकारक रासायनिक पदार्थ र अन्य सडे गलेका बस्तुहरु खोला र नदीमा दैनिक मिल्काई रहेका छन्।

काठमाडौं उपत्यकामा चल्ने हजारौं गाडी वाहनहरु भण्डै सयौं चिम्नी भट्टाहरु, अन्य खानी र उद्योगहरुबाट अशिक्षित परिणाममा धूलो र धुवाँ आकाशमा उडिरहेको छ।

उपत्यकाको कुना काप्चा जताततै पक्की भवनले ढकिल्दै छन्। बाँकी भएका वन जंगलहरु मासिंदै छन्।

## आफ्नै घरबारे



जनधारणा साप्ताहिक वर्ष ६ अंक ३० मार्ग ५ गते प्रकाशित "भक्तपुरमा पनि कामरेडको महल" भन्ने शीर्षकको समाचार पढ्न पाएँ। त्यसबारे पत्रिकाबाट तोडमोड गरी केही स्वार्थी व्यक्तिहरुको बहकाउमा भ्रामक प्रचार गरेका देख्दा आश्चर्य लाग्यो। यस कारण पत्रिकाबाट खण्डनको लागि लेख्दैछु। यथार्थ व्यहोरा यस प्रकार छ।

मेरो घर श्रीमतीले २०४८ साल आश्विन महिनामा तुल्सीराम वैद्य र इन्द्र प्रजापतिसँग ०-६-१-१ जग्गा प्रति रोपनी २,००,००० (दुई लाख) को दरले जम्मा ८४,००० (चौरासी हजार) रकम तिरेर पास गरी लिईएको हो।

२०४९ साल भाद्र महिनामा नक्सा दरखास्त राखी मार्ग महिनामा भक्तपुर नगरपालिकाबाट नक्सा पास गरी पौष महिनादेखि निर्माण कार्य थालनी गरेको हो।

एक तल्ला भवन ढलान गरी सकेपछि बासु मा.वि.लाई ठाउँको बहाल नलिने, पैसाको व्याज नतिर्ने गरी ५० (पचास) ५० (पचास) हजारको चेक बुझेर जम्मा १ लाख लिई बिद्यालयलाई पठनपाठन कार्यमा दिएको हो। सो बिद्यालयले दिएको रकम पनि बिद्यालयमा नै खर्च गरी दोस्रो तल्ला ढलान गरी तेस्रो तल्लाको पिलर उठाएको हो।

२०४८ साल आश्विन महीनातिर बिहान सबेरै स्वर्गीय राम बहादुर सुवालको पसलमा चिया पिउन गएको थिएँ। त्यही चिया पसलमा मालपोत कार्यालयका कर्मचारीसँग मेरो भेट भयो। त्यही कर्मचारीले मेरो पकेटमा रुपैयाँ भएको अनुमान गरी मसँग २५ हजार रुपैयाँ माग गऱ्यो। मैले पैसा दिने विचार गरेको थिएन। धेरै जोड गरी आपत्तिको कुरा गरेपछि तिमीलाई पैसा दिए मलाई के फाइदा हुन्छ भन्दा तपाईंलाई ५, १० दिन भित्रै पैसा फर्काउँछु। व्याज समेत दिन्छु भनेर बार बार कर गरेपछि त्यसको आपतीलाई देखेर मैले मेरो खल्तीमा भएको ४०,००० (चालीस हजार) रुपैयाँ त्यस व्यक्तिलाई दिएको थिएँ।

१०, १५ दिनपछि पनि त्यस पैसा नफर्काएकाले

मलाई बेईमान गर्ला भनेर सोचेको पनि थिएन । एका बिहान त्यही कर्मचारीले अकस्मात् भेट भयो । मलाई देख्ने बित्तिकै त्यस कर्मचारीले भन्न थाले तपाईंलाईं भेटन पनि साह्रै मुश्किल रै छ । भेट्न सकिएन । तपाईलाईं पैसा दिन आएको थिएँ । आज पैसा नल्याएको बेलामा तपाईंसँग भेट भयो । पर्सि बिहान यही पसलमा दिने बचनबद्ध भयो ।

## मिबाछेँ टोल सुधार समिति

भक्तपुर नगरपालिका वडा नं. १५ मिबाछेँ टोल सुधार समितिका उपस्थित महानुभावहरु बीच एक छलफल कार्यक्रम भयो । उक्त छलफल कार्यक्रममा उपभोक्ता समितिका अध्यक्ष रत्नकाजी नायभारीले १०० मिटर भन्दा बढी इट्टा छपाईं गरेको जानकारी गऱ्यो र इट्टा छपाई कार्यक्रम भएको आम्दानी खर्चको विवरण प्रस्तुत गऱ्यो । बाँकी इट्टा छपाईंको निमित्त वडा समिति मार्फत् भक्तपुर नगरपालिकामा निवेदन दिई अनुरोध गर्ने निणर्य गऱ्यो ।

वडा नं १५ को वडा बजेटबाट रू. ७०,०००।-

टोल सुधार समिति ४३ जनाबाट रू. ५४,६००।-

रू. १,२५,६००।-

रू. १,१०,६००।-

आम्दानी

| | |
|---|---|
| भ.न.पा. | - ७०,०००।- |
| एभरेष्ट स्कूल | - १०,०००।- |
| श्याम सुवाल | - ३,०००।- |
| विष्णु बहादुर सुवाल | - २,०००।- |
| सूर्य नारायण ताम्राकार | - ३,०००।- |
| जनश्रमदान | - ३२००।- |

(३२ जना ज्यामी × १००)

जि.टि.जेट प्राविधिकबाट सहयोग भएन।

सडक विभाग आफैले गर्दैछ।

## मिबाछेँ निर्माणबारे

**मिबाछेँ टोलमा इट्टा छपाइको लागि खर्च**

| | | |
|---|---|---|
| इट्टा | २६००० | - ४१,९९०।- |
| सिमेन्ट | १० बोरा | - ३०३०।- |
| डोरी | | - १३१।- |
| धागो टेप | | - ९८।- |
| बालुवा | | - १०,४९०।- |
| सिमेन्ट | १० बोरा | - २९८०।- |
| पाइप पोलीथीन | | - ४८०।- |
| " | | - ६०।- |
| बालुवा ६७५४८० | | - ११८०।- |
| ज्याला | | - १४२००।- (१४२५५ फाराममा) |

(डकर्मी ४४ जना २००।- र ज्यामी ५४ जना १००।-)

| | |
|---|---|
| इन्टलेट कभर | - ११७८ |
| जम्मा | - ७५८२४ |

## प्रणिधि इङ्गलिस स्कूलको संक्षिप्त परिचय

बलम्बु गाउँ विकास समिति, बाग्मती अञ्चल काठमाडौँ जिल्लाको ऐतिहासिक दृष्टिकोणले महत्वपूर्ण एउटा गाउँ हो । यो गाउँको पुरानो नाउँ भास्तिपुर हो । यहाँको जनसंख्या करीब ६ हजार छ। यो काठमाडौँबाट



करिब ७ कि.मि. पश्चिममा पर्दछ । यस गाउँ विकास समितिको सबैभन्दा होचो भूभाग समुन्द्री सतहबाट १५०० मि. (४९२० फि.) र सबैभन्दा अग्लो भूभाग १८५० मि. (५९२० फि.) को ऊँचाइमा पर्दछ। यस गाउँ विकास समितिको क्षेत्रफल २५० हेक्टर छ । प्राकृतिक बनावटको दृष्टिले यस गाउँ विकास समितिको पूर्वमा

नैकाप, तीनथाना गाउँ विकास समितिहरु, उत्तरमा दहचोक गा.वि.स., दक्षिणमा सतुंगल तथा मातातीर्थ गा.वि.स. र पश्चिममा थानकोट गा.वि.स. पर्दछ । यस गा.वि.स.मा नेवार, बाहुन, क्षेत्री, सार्की आदि जातिका मानिसहरुले बसोवास गरेका छन् । यहाँका मानिसहरु खास गरी हिन्दू र बौद्ध धर्म मान्ने गर्दछन् । यहाँका जनजीवन कृषि पेशामा नै निर्भर गर्दछन् । यस गाउँका बासिन्दा कृषि पेशामा धान, गहुँ, मकै, खेतीका अलावा सिजनमा च्याउ खेतीको पनि काम गर्दछन् । च्याउ खेती गर्ने प्रविधि करिब १२-१५ वर्ष अघिदेखि मात्र आएको भए पनि यसले मेहनती किसानहरुको आर्थिक अवस्था उकास्न महत्वपूर्ण काम गरेको छ । खेतबारीको काम सकाएर घरमा बस्ने समयमा गर्न मिल्ने यो काम किसानहरुका लागि ज्यादै उपयोगी सिद्ध भएको छ । घरैमा अलि अलि गर्ने र ठूलो परिणाममा गर्नेहरुको हिसाब गर्ने हो भन्ने करिब ७५-८० प्रतिशतले यो खेती गरेका छन् । वर्षभरिमा उत्पादन हुने आलु र अण्डा भन्दा बढी च्याउ नै भएको देखिन्छ । त्यसकारण यो गाउँले च्याउ उत्पादनमा अग्रणी गाउँ भएको छ ।

यो गाउँमा घरेलु उद्योगको रुपमा कोही कोही हातले नै कपडा बुन्ने, पछ्यौरा बुन्ने काम पनि गर्दछन् । यो बलम्बु गाउँलाई चिनाउन विहारले पनि ठूलो योगदान गरेको छ । धेरै पहिलेदेखि नै यस गाउँमा विहार भएको कारणले बौद्ध सम्प्रदायका धेरै जसो नेपालीहरुले यो गाउँबारे जानकारी राखेका छन् ।

शिक्षा क्षेत्रमा यो गाउँ छिमेकी गाउँहरुको तुलनामा अत्यन्तै पछाडि परेको छ । राजधानी नजिकको गाउँ भएपनि अहिलेसम्म यहाँको कोही पनि निवासी डाक्टर, इन्जिनीयर, पाइलट, प्रोफेसर, वकिल भएका छैनन् । यहाँ केही वर्ष अघिसम्म बलम्बु मा.वि. र वनदेवी प्रा.वि. गरी जम्मा दुइ ओटा मात्र साधारण स्कूलहरु थियो । कुनै इङ्गलिस बोर्डिङ्ग स्कूल थिएन । त्यसकारण स्तरीय इङ्गलिसको आवश्यकता महसुस गरी शिक्षाप्रेमी साथीहरुको बीचमा विचार विमर्श गरी स्कूल स्थापना गर्ने अठोट भयो । त्यसको लागि साथीहरुसँग विचार विमर्श गरी ८-९ जनाको संचालक समिति गठन गरी २०५० साल माघ महिनामा नर्सरी, के.जी., वान, र टु मा जम्मा ६५ जना विद्यार्थीहरुबाट प्रणिधि इङ्गलिस स्कूलको स्थापना भयो । चार ओटा क्लास र चारै जना शिक्षकको व्यवस्था मिलाई स्कूल संचालन भयो । संचालन गर्दै जाँदा बीचमा अनेक झमेला कठिनाइसँग स्कूलले सामना गर्नु पर्‍यो । शुरुमा ८-९ जना संचालक समितिका साथीहरुको ४-५, ४-५ हजार रुपैयाँ लगानीबाट संचालन भएकोमा रकम नपुग भई थप्दै लगियो ।

स्कूल स्थापना भएको दुइ वर्षपछि पाटन पुल्चोक निवासी श्री सिद्धि बहादुर शाक्य एकजना समाजसेवीसँग स्कूलको विषयमा कुराकानी भयो र सम्पर्क बढ्यो । वहाँले स्कूल राम्रो र स्तरीय बनाउन आफूले सक्दो सहयोग गर्ने वचन दिनु भयो । त्यसै अनुरुप समय समयमा जापानी दाताहरुलाई सकूलमा ल्याई अवलोकन गराउनु भयो र २०५२ साल माघ २ गते स्कूलको जन्म जयन्तीको शुभ अवसरमा जापानी दाता नाकामुराबाट यस स्कूलको लागि जग्गा किनेर भवन बनाउन नेपाली रु १०,०८,००० (दश लाख ८ हजार रुपैयाँ) सहयोग प्रदान गर्नुभयो । सोही रुपैयाँबाट स्कूलले १० आना जग्गा किनेर १२×१५ फीट भएको पिलर सिस्टमको चार ओटा कोठाहरु भएको भवन बनाउन सफल भयो । त्यस पश्चात् चार ओटा क्लास स्कूल भवनमा र बाँकी पहिलेकै बहालको भवनमा संचालन भयो ।

जापानी दाता श्री नाकामुरा गएको मंसिरमा स्कूलको अवलोकन गर्न आउनु भयो । विद्यालयको प्रगतिबाट सन्तुष्ट हुनु भई वहाँले पुनः रू. ८८,००० (अठासी हजार) रकम सहयोग प्रदान गर्नु भयो । त्यस रकमबाट विद्यालय भवनमा तीन ओटा कोठाहरु निर्माण गरियो । ढलान गर्न बाँकी रहयो ।

जापानी दाता नाकामुराबाट रू. १,७०,२५६ (एक लाख सत्तरी हजार दुइ सय छपन्न रुपैयाँ)को आर्थिक सहयोग बैंक मार्फत स्कूलको खातामा प्रदान गर्नुभयो । त्यस रकमबाट थप एउटा कोठा उठाइ दोस्रो तल्लामा ढलान गर्ने काम सम्पन्न भयो ।

प्रणिधि इङ्गलिश बोर्डिङ्ग स्कूलको चौथो वार्षिकोत्सवको यस सुखद अवसरमा यस विद्यालयलाई खुल्ला हृदयले पटक पटक आर्थिक सहयोग प्रदान गर्नु हुने मित्र राष्ट्र जापानका आदरणीय शिक्षाप्रेमी श्री नाकामुराज्यू प्रति विद्यालय संचालक समिति, विद्यालयका शिक्षक-

शिक्षिका एवं विद्यार्थीहरु तथा यस गाउँका सम्पूर्ण शिक्षाप्रेमीहरुको तर्फबाट हार्दिक धन्यवाद व्यक्त गर्दै कृतज्ञता ज्ञापन गर्दछौँ। वहाँको शिक्षाप्रेमको उदारभावमा सदा उज्ज्वल रहोस् र निरन्तर प्रगति र सुस्वास्थ्यको पनि हार्दिक कामना गर्दछौँ। साथै, त्यस स्कूलको स्थापना गर्ने सम्बन्धमा सल्लाह सुझाव र मद्दत गर्नु हुने कोटेश्वर निवासी श्री शान्ति विद्यागृह मा.वि. लैनचौर स्कूलका असिस्टेन्ट हेड श्री मुकुन्द प्रसाद श्रेष्ठ प्रति पनि विद्यालय परिवार हार्दिक आभार व्यक्त गर्दै निरन्तर सहयोगको आशा गर्दछौँ।

यस विद्यालयको उन्नतिको लागि निरन्तर लागि पर्ने र दाता जुटाइ दिनुहुने आदरणीय श्री सिद्धि बहादुर शाक्य प्रति विद्यालय परिवार हार्दिक धन्यवाद ज्ञापन गर्दै सदा कृतज्ञ रहने विश्वास दिलाउँदछौ। वहाँको उदात्त सहयोगी भावनाको उच्च मूल्यांकन गर्दै स्तरीय शिक्षा प्रचार गरेर वहाँको ऋण चुक्ता गर्न विद्यालय परिवार सदा कृत संकल्पित रहने अठोट गर्दछ।

**संचालक समितिका पदाधिकारीहरु निम्न बमोजिम छन्ः–**

| | |
|---|---|
| अध्यक्ष | - बासुदेव महर्जन |
| सचिव | - प्रेमकृष्ण श्रेष्ठ |
| कोषाध्यक्ष | - दीपक श्रेष्ठ |
| सदस्य | - धर्मरत्न महर्जन |
| सदस्य | - वीर कृष्ण महर्जन |



**भक्तपुर नगरपालिकाको प्रधानपञ्चमा विजयी भएपछि विजयी यात्राका क्रममा चैत्यराज शाक्यका साथमा आशाकाजी बासुकला**

# प्रतिनिधिसभाका बैठकहरुमा राष्ट्र र जनताका विभिन्न समस्या सम्बन्धमा सांसद आशाकाजी बासुकलाले व्यक्त गर्नुभएका समसामयिक अभिव्यक्ति तथा विभिन्न क्षेत्रबारे विचारहरु :



## अर्थतन्त्रबारे

देश र जनतालाई आशा र उत्साह दिने काम सरकारको हो। विकास कार्यलाई उत्कृष्ट ढंगले संचालन गरी उदाहरणीय बन्नुपर्ने सरकारी क्षेत्रबाट निराशा ब्यक्त गरिन्छ भने अब जनताले कसको मुख ताक्ने ? बजेट बक्तव्यमा चालु आर्थिक वर्षमा सरकारी क्षेत्रबाट गरिएको विकास खर्च निराशाजनक रहेको उल्लेख छ। विकासको आश्वासन दिएर निराश पार्ने काम सरकारको कस्तो योग्यता र क्षमता हो ? सरकारले जहिलेसम्म अर्थतन्त्रको विकास गर्न सक्दैन, तबसम्म आर्थिक स्वतन्त्रता सम्भव छैन। देशको अर्थतन्त्र बारेमा हामीले गहिरिएर सोच्यौँ भने उत्पादनशील कुरामा मात्रै बढी ध्यान दिनु पर्ने देखिन्छ।

सरकारी स्वामित्वमा रहेका संस्थानहरु घाटामा जानु, त्यहाँ विसङ्गति हुनु, तर निजी क्षेत्रका संस्थानहरु नाफा हुनु र व्यवस्थित रुपमा चल्नुको कारण के हो ? सरकारी स्वामित्वमा चल्ने संस्थानहरुमा योग्य कर्मचारी नभएर हो वा नीति नियम नमिलेर हो ? अथवा निजीकरण गराउन घाटा र विसंगति नियोजित हो ? संस्थानहरुलाई सत्तासीन पार्टीहरुले भर्ति केन्द्र बनाएकै कारणले त होइन ? भनेर प्रश्न गर्नु स्वाभाविक हो।

हाल्न जग्गा धनीहरुको जी हजुरी गर्दथे । जग्गा धनीहरु पनि बढी कूतको आशा गरेर एकले अर्को किसानलाई कमाउन दिन्थे । जग्गा धनीहरुले जग्गा जोत्ने किसानहरु फेर्दथे । किसानहरुले पनि जी हजुर गरेर जमिन जोत्न पाउँथे । आफूले जोतेको जग्गामा सिथि नखः अगाडि अर्को किसानले मल हालेको खण्डमा जमिन जोत्न नपाउने नियम जस्तै थियो । जग्गा धनीलाई खुशी पार्न सके जमिन जोत्न पाइन्थ्यो । खुशी पार्न सकेन भन्ने जमिन जोत्न पाइँदैन्थ्यो । यसले गर्दा किसानहरु हैरान हुन्थे । विर्तावाल जग्गा धनीले जसलाई मन पर्‍यो त्यस किसानलाई दिन सक्थ्यो । जमिनमा जोत्ने किसानहरुको निम्ति कुनै किसिमको ऐनको बन्दोवस्त थिएन ।



देशको राष्ट्रिय आयको मुख्य अंश कृषिबाट प्राप्त भएको कुरा वर्तमान र विगत सरकारहरुले पनि भाषण र वक्तव्यमा स्वीकारेको छ ।

कृषि र किसान समस्या समाधान नभइकन देशको समस्या समाधान हुँदैन । कृषि क्षेत्रको विकासका लागि हरेक सालको बजेटमा रकम छुट्ट्याइन्छ । परन्तु कृषि क्षेत्रको सन्तोषजनक विकास दशकौ बितिसक्दा पनि भएको छैन । रासायनिक मलको कारखाना खोल्ने माग र सुझावलाई बेवास्ता गर्दै कृषि मन्त्री र सम्बन्धित कर्मचारी भ्रष्टाचारको आरोपमा अदालत धाउनु कहाँसम्मको बुद्धिमानी हो ?

भक्तपुरका किसानहरु मेहनती छन् । खेतीमै आफ्नो जीवन निर्वाह गर्छन् । कहिलेकाहीं जमिन जोत्न किसानहरुको बीचमा होडबाजी चल्छ । बढी तिरो तिरान कबुल गरी जग्गा जोत्ने अठोट गर्छन् । जमिन जोते बापत किसानहरुले जग्गा धनी तथा साहु महाजनहरुको घर-घरमा सेवा पुर्‍याउनु पर्दथ्यो । चाडबाडमा पानी लिने काम गर्नु, घरमा पोत्ने काम गरिदिनु, अन्य स-साना काम गरेर जग्गा धनीहरुलाई खुशी तुल्याई सधैं जमिन जोत्ने आशा गरिन्छ । त्यो आशा गरेर आफूले जोतेको जमिनको कुनै भर हुँदैन्थ्यो । जग्गा धनीहरुले जुनसुकै बखत जग्गा खोज्न सक्थ्यो । किसानहरुले पनि एक्लै जग्गाधनीको मात्र भर गर्दैनथे । किसानहरुले जेठ महिनाको सिथिनखःमा मल

देशमा सामन्तवादी व्यवस्था थियो । सामन्तहरुको बोलवाला हुन्थ्यो । सामन्ती व्यवस्थामा जग्गा जमिनमा जोत्ने किसानहरु कुनै किसिमको हक हुँदैन्थ्यो । सामन्ती शोषणले गर्दा किसानहरु ज्यादै पीडित थिए । तिनीहरुको अवस्था दयनीय थियो । सामन्तवादको चरम सीमाको शोषणले देशका विभिन्न भागहरुमा सामन्तवाद विरोधी भावना जाग्दै थियो । देशमा सामन्तवाद विरोधी भावना चर्केमा समाजवाद भित्रिन्छ भन्ने डरले बेला मौकामा भूमिसुधार कार्यक्रम लागू गर्ने कुराको चर्चा परिचर्चा पनि चलेको थियो ।

सामन्तीवादी हुकुमलाई अझ बढी दरिलो बनाउन प्रजातान्धिक हक र हितलाई कुण्ठित पारे ।

सामन्त वर्गको हितको निम्ति पुराना सत्ताधारीहरुले भूमिसुधार ऐन लागू गर्‍यो । त्यस ऐनले नेपाल अधिराज्यको जग्गा जमिनको नाप नक्सा गर्ने र किसान जनतालाई मोहियानी हक प्रदान गर्ने लक्ष्य राखेको थियो । २१ सालमा भूमिमा नाप नक्सा हुँदा नेमकिपाका अग्रज किसानहरुको जग्गामा गएर जोताइ मोहीको नाम लेखाउन नापी टोलीका अधिकृतहरुलाई दबाब दिन्थे । किसानहरु आफूले जोतेको जग्गा समेत नाम लेखाउन डराउँथे ।

सामन्ती स्वभावका जग्गा धनी तथा साहु महाजनहरुले किसानहरुलाई फकाउँदै जग्गाधनी र जोताहा मोही भनेको बाबु छोरा हुन्। नापीमा मैरै नाम लेखेता पनि जग्गा जोत्ने तिमी नै हो। जग्गा तिमी आफैंले कमाउ नापीमा मेरो नाम लेखाउँछु भनेर लेखाउँथे। आफैंले जोतेको जमिनमा किसानले आफ्नो नाम समेत लेखाउन डराउँथे।

नेपाल कम्युनिष्ट पार्टीको स्थापनाकालको सँगसँगै अखिल नेपाल किसान संघको स्थापना भयो। नेपाल किसान संघको स्थापना भएता पनि देशव्यापी रुपमा किसान संघर्ष गर्न सकेन।

काठमाण्डौं उपत्यकाका किसान कार्यकर्ताहरुले अखिल नेपाल किसान संघको नामबाट संगठित शक्तिलाई मजबूत पार्न सकेनन्। त्यसले गर्दा किसानहरुमा जागरण र जोश थिएन। सामन्ती, जाली, फटाहा र सामन्ती स्वभावका साहु महाजनहरुबाट पीडित थिए। उपत्यका बाहिरका किसान जस्तै यहाँका किसानहरुको आर्थिक स्थिति कमजोर थियो। जीवन धान्नको निम्ति खेती बाहेक अर्को विकल्प थिएनन्। किसानहरुले आफ्नो जीवन निर्वाह गर्न ठूला बडा सामन्त वर्ग र सामन्ती स्वभावका साहु महाजनहरुको चाकडी गरेर जमिन उपलब्ध गर्दथे। तिरो तिरोनको कुनै ऐन कानूनको बन्दोवस्त नहुँदा रोपनी जग्गाको ३० पाथी, सरुवा चामल तिरेर पनि खेतीपाती गर्दथे। पीडित किसान भन्ने गर्दथे, तरकारी मात्र खानु परे पनि जमिन जोत्न पाउनु पर्छ। जमिन पाएको खण्डमा आफ्नो र आफ्नो परिवारको जीवन धान्न सकिन्छ। त्यसले गर्दा किसानहरुले बढी तिरो तिरान गर्ने कबुल गरी सामन्त वर्ग र सोह्र महाजनहरुसँग जग्गा उपलब्ध गरी आफ्नो गुजारा गर्दथे।

सामन्त वर्ग र सामन्ती स्वभावका साहु महाजनको जमिन जोत्ने मोहीहरुले जग्गा कमाउन पाउने कुनै ग्यारेन्टी छैन। कुनै पनि बखत त्यस जमिन खोस्न सकिन्थ्यो। जसलाई पायो त्यसलाई जमिन जोत्न दिइन्थ्यो। किसानहरु पनि जमिन जोत्न पाउनको निम्ति सामन्तवर्ग र सामन्ती स्वभावका साहु महाजनहरुसँग चाकडी गर्नु पर्दथ्यो। चाकडी गरेर मात्र जमिन जोत्न पाउँथे। जमिन जोत्ने किसानले चाडबाडमा पनि घर घरमा सहयोग गर्नु पर्दथ्यो।

## परवानीपुर सर्लाहीको (कुलो) बारे



सर्लाही जिल्ला परिवानीपुर गा.वि.स. वडा नं ३ का जनताले स्थानीय कालिन्जोर खोलाबाट तीन किलोमिटर कुलो श्रमदानबाट तयार पारेका छन्। उक्त कुलो सुचारु रुपले सञ्चालन गर्नका लागि वर्षात्को समयमा तीनवटा साना कलभर्ट र कुलोको बीचमा अत्यन्त चालु सडक पर्ने भएकोले त्यस ठाउँमा एउटा सानो पुलको निर्माण गर्नुपर्ने भएको हुँदा उक्त कार्यहरु सम्पादन गर्नको लागि बजेटको कमी आएको हुनाले त्यस गा.वि.स.का प्रतिनिधिहरु सूर्य बहादुर थापा प्रधानमन्त्री हुँदा डेलिगेशन समेत आएको र आश्वासन पाएको हुँदा अब खेतीको समय आएको र जनताबाट त्यति ठूलो काम भैसकेको ठाउँमा सरकारी स्तरबाट सानो सहयोगसम्म नहुँदा निराश भएका छन् र प्रधानमन्त्रीसम्मलाई भेटेर भन्दा समेत नहुने भएपछि अब कसको पछि लाग्ने भन्ने प्रश्न गर्न थालेका छन्। तसर्थ यस सरकारबाट त्यहाँका जनतालाई तुरुन्त आर्थिक सहयोग उपलब्ध गराउनु पर्ने देखिन्छ।

## वनबारे

वन विकासमा पहिलो वर्ष र यस वर्षको प्रगति के कति भएको छ ? यसको तथ्याङ्क कार्यक्रममा भएको भए राम्रो हुने थियो । उपभोक्ता समितिको प्रगति र २६८३ हेक्टर जमिनमा वृक्षारोपण भएको अनुमान गरिएको छ ।

सरकारी वन, सामुदायिक वन र निजी वनमा रकम खर्च भए अनुसार काम भएको छ, छैन नियमित रुपमा अनुगमन मूल्यांकन हुनुपर्छ, भन्ने मेरो सोचाई छ ।

वन सुरक्षा र जिला वन कार्यालयलाई गत वर्ष करीब २० करोड खर्च भएको छ भने चालु आर्थिक वर्षमा २१ करोड १ लाख २५ हजार वजेट व्यवस्था भएको छ । यस्तो ठूलो रकम खर्च भएर पनि वन संरक्षण र सुरक्षा भएको छ त? भनेर प्रश्न उठाउन सकिन्छ ।

वन संरक्षण सम्वर्द्धन विस्तार कार्यक्रम प्राप्त विदेशी सहायताबाट स्वदेशी विशेषज्ञ र दक्ष जन शक्ति तयार गर्न विशेष ध्यान दिनु पर्दछ ।

अकोतर्फ स्थानीय जनतालाई यस सम्बन्धी दक्षता र सीप अभिवृद्धि गर्न प्राथमिकता दिने व्यवस्था मिलाउनु पर्दछ ।

**सामुदायिक तथा नीजि वन विस्तारमा सरकारले विशेष ध्यान दिएर**

१. वन विकासमा पहिलो वर्ष र यस वर्षको प्रगतिको के कति प्रगति भएको छ तथ्याङ्क आउनु पर्छ ।
२. विदेशी लगानी भएका रकमहरु मध्य बढी लगानी वनमा भएको देखिन्छ ।
३. नेपालमा वन जङ्गलले ओगटेको क्षेत्रफल कति छ ? स्पष्ट हुनुपर्ने, क) सरकारी वन, ख) सामुदायिक वन तथा ग) नीजि वन ।
४. वन सुरक्षा र जिल्ला वन कार्यालयलाई गत वर्ष करीब २० करोड खर्च भएको छ भन्ने चालु आर्थिक वर्षमा २१ करोड १ लाख २५ हजार बजेट व्यवस्था भएको देखिन्छ । यो ठूलो रकम खर्च भएर पनि वन संरक्षण र सुरक्षा भएको छ त ?
५. वन संरक्षण सम्बर्द्धन विस्तार कार्यक्रमहरु प्राप्त विदेशी सहायताबाट स्वदेशी विशेषज्ञ दक्ष जनशक्ति तयार गर्न विशेष ध्यान दिनुपर्ने र स्थानीय जनतालाई यस सम्बन्धी दक्षता र सीप अभिवृद्धि गर्न प्राथमिकता दिने र सोको व्यवस्था हुनु पर्ने ।
६. सामुदायिक तथा निजी वन विस्तार र विकास भएमा आम जनताले यसबाट विशेष फाइदा लिन सकिने भएकोले यसतर्फ विशेष जोड दिनुपर्ने ।
७. नेपालमा उत्पन्न हुने जडिबुटीहरु नेपालमा औषधि उत्पादन गर्ने कम्पनीहरुले नै प्रयोग गर्न सकिने वातावरण सृजना हुनुपर्ने । यसरी जडिबुटीहरु प्रयोग गर्दा सरकारबाट संचालित कम्पनी (शाही औषधी लिमिटेड) जस्तालाई विशेष प्राथमिकता हुनुपर्ने ।
८. हाल सरकारबाट संचालित उद्योगहरुलाई विफल पार्न निजी तथा विदेशी कम्पनीका एजेन्टहरुले विभिन्न आर्थिक प्रलोभन देखाइ गरिरहेको दखललाई सरकारले गम्भीरतापूर्वक दिई राख्नु पर्ने ।
९. वन विकास पछिको वर्ष र यस वर्षको प्रगति के कति भएको छ तथ्याङ्क आउनुपर्छ ।
१०. विदेशी लगानी भएका रकमहरु मध्ये बढी लगानी वनमा भएको देखिन्छ । वनजङ्गलले ओगटेको क्षेत्रफल कति छ स्पष्ट हुनुपर्ने । सरकारी, सामुदायिक, निजी रकम खर्च भए अनुसार कम भएको छैन । नियमित रुपमा अनुगमन मूल्यांकन हुनुपर्ने ।

वन सुरक्षा र जिल्ला वन कार्यालयलाई गत वर्ष करीब २० करोड खर्च भएको छ भने चालु आर्थिक वर्षमा २१ करोड १८ लाख २५ हजार बजेट व्यवस्था भएको देखिन्छ । यत्रो ठूलो रकम खर्च भएर पनि वन संरक्षण र सुरक्षा भएका छन् त ?

वन संरक्षण सम्बर्द्धन विस्तार कार्यक्रम हाल प्राप्त विदेशी सहायताबाट स्वदेशी विशेषज्ञ दक्षहरु तयार गर्न विशेष ध्यान दिनुपर्ने स्थानीय जनतालाई यस सम्बन्धी दक्षता र सीप अभिवृद्धि गर्न प्राथमिकता दिने व्यवस्था हुनु पर्ने ।

सामुदायिक तथा नीजि वन बिस्तार भएमा आम जनताले यसबाट विशेष फाइदा लिन सकिने भएकाले यसतर्फ विशेष जोड दिनुपर्ने ।

नेपालमा उत्पादन हुने जडिवुटीहरु नेपालमा औषधि उत्पादन गर्ने कम्पनीहरुले नै प्रयोग गर्न सकिने वातावरण सृजना हुनुपर्ने । यसरी जडिवुटीहरु प्रयोग गर्दा

सरकारबाट संचालित कम्पनी (शाही औषधी लिमिटेड) जस्तालाई विशेष प्राथमिकता दिनुपर्ने ।

हाल सरकारबाट संचाति उद्योगहरुलाई विफल पार्न निजी तथा विदेशी कम्पनीका एजेन्टहरुले विभिन्न आर्थिक प्रलोभन देखाइ गरिरहेको दखललाई सरकारले गम्भीरतापूर्वक दिई राख्नुपर्ने ।

## भाषा, कला र संस्कृतिबारे



भाषा, सबैको साझा हो । देशको भाषा, कला र संस्कृति राष्ट्रका सम्पत्ति हुन् । त्यसको जगेर्ना गर्नु र नागरिक भावना उठाउनु विविध भाषा, साहित्य समाज आफ्नो कर्तव्य ठान्दछ ।

"भाषा, कला र संस्कृति जगाऔ, राष्ट्रिय भावना उठाऔ" नारा नेपाल सम्वत् ११११८ को नव वर्षको उपलक्ष्यमा 'समेबजी' कार्यक्रमलाई विभासास (विविध भाषा साहित्य समाज) ले अगाडि सारेको छ ।

देशको भाषा, कला र संस्कृतिको उत्थान नभैकन राष्ट्रको उत्थान हुन सक्तैन । विभाससले यस कुरालाई मनन गरी भाषा कला र संस्कृतिको संरक्षण र संरक्षण गर्ने कार्यमा समेबजी कार्यक्रमबाट टेवा मिल्ने आशा गरेका छौं । आशा एवं विश्वास छ, यस 'समेबजी' कार्यक्रमबाट समाजका प्रतिष्ठित बुद्धिजीवी, समाजसेवी, मजदुर, किसान र राजनैतिक दलहरुले टेवा पुऱ्याइ विभासासको जागरणलाई हौसला बढाई त्यसबाट भएको कमी र कमजोरीलाई औंल्याइ विभासस सहयोग प्रदान गर्नु हुनेछ ।

प्राचीनतालाई जोगाऔँ, कला र संस्कृतिलाई बचाऔँ । प्राचीनतालाई जोगाउनु अर्थ पूर्खाले सिर्जेको हाम्रो कला र संस्कृति आज विश्व सम्पदाको रुपमा जोगाउनु पर्ने भएको छ ।

विशेष गरी काठमाडौँ उपत्यकामा हाम्रा पूर्खाले असंख्य अमूल्य सम्पत्ति छोडेर गएका छन् । ती सिर्जेका कला र संस्कृति आकर्षक हुनुका साथै ऐतिहासिक र पुरातात्विक पनि छन् ।

कला र संस्कृतिको अध्ययन र दृष्टिकोणबाट हाम्रा पूर्खाको दक्षता कार्यकुशलता, सीप तथा ज्ञानको जानकारी पाइन्छ ।

काठमाडौँको हनुमानढोका, भक्तपुरको सुनको ढोका र ५५ झ्याल सानो भएर पनि गौरवपूर्ण छ । सुनको ढोका सानो छ । त्यसको उत्कृष्ट कलाले हामीलाई गौरव प्रदान गर्छ । सयौँ तल्लाको घर भएका र दरबार भएका देशका पर्यटकहरु सिंहदरबार हेर्न होइन । सुनको ढोका, हनुमानढोका, बसन्तपुर दरबार, ५५ झ्याले दरबार, न्यातापोल मन्दिर, पाटनको कृष्ण मन्दिर, चाँगुनारायण मन्दिर र काष्ठमण्डप हेर्न आइरहन्छन् ।

राष्ट्रिय गौरव कला र संस्कृतिको उचित संरक्षण

भैरहेका छैन । पुरानो भएर हो वा प्राकृतिक कारणले खिइने, मक्किने, जीर्ण हुने, लोप हुने र भत्कने क्रम जारी छ । त्यो स्थिति जारी रहने हो भने भावी पुस्ताले भग्नावशेष मात्र देख्न पाउनेछ ।

## समाजवादी आन्दोलनको विकासमा साहित्य कला र संस्कृतिको भूमिकाबारे

सर्वहारावादी जन समुदायहरुले आफैं लागौं र आफैं खाऔं भन्ने र गरीब झन् झन् गरीब हुँदै जाने तथा धनी झन् झन् धनी हुँदै जाने पूँजीवादी व्यवस्थाको विरोध गर्दै जाने तथा पूंजीवादी व्यवस्थाको ठाउँमा शोषण रहित समाजवादी समाजको स्थापना गर्न समाजवादी क्रान्तिको निम्ति पाइला चाल्न थाल्दछन् । त्यस क्रान्तिको सम्पन्नताको निम्ति सर्वहारावादी जनता र श्रमिक वर्गले सबैभन्दा पहिले मानिसले मानिसको शोषण गर्ने, सार्वजनिक सम्पत्तिबाट व्यक्तिको हित गर्ने देश र जनताको हित भन्दा मुठ्ठीभर व्यक्ति र परिवारको स्वार्थको निम्ति काम गर्ने पूँजीवादी व्यवस्थाको विरोधमा संघर्ष गर्न शुरु गर्छन् ।

समाजवादको पक्षमा र पूंजीवादको विरोधमा कामदार वर्गलाई सचेत र संगठित गर्न सबैभन्दा पहिले व्यापक जनतामा पूँजीवादको उत्थान विकास र पतनबारे आवश्यक सैद्धान्तिक जानकारी दिनै पर्छ । त्यस कार्यको निम्ति समाजवादी साहित्यको महत्वपूर्ण दायित्व हुन्छ । यसकारण कामदार वर्गको महत्व, सामुहिक उत्पादन प्रणाली उत्पादनका साधनहरुमा व्यक्तिगत स्वामित्व र त्यसबाट समाजमा हुने आर्थिक असमानता एवं शोषणमा आधारित समाजको यथोचित विकासमा त्यसले उत्पन्न गर्ने बाधा व्यवधान, त्यसलाई फाल्नु जनस्तरबाटै हुने आन्दोलन र विद्रोहहरु आदि बारे साहित्यको आवश्यकता अनुभव गरिन्छ । त्यस्ता साहित्य र कलाले त्यस आन्दोलनलाई अगाडि बढाउन उर्जाको काम गर्छ ।

हाम्रो समाजमा कामदार वा गरीब जनताले आफ्नो बल र बुद्धिले अनेक राम्रा कामहरुमा योगदान दिएका हुन्छन् । तर नेतृत्व तिनीहरुको नहुँदा सबै कामको श्रेय शोषक वर्गले लिएको हुन्छ । समाजवादी साहित्य र कलाले कामदार वर्गको योगदानलाई नै अघि सारेर कसको अगुवाई र रचनात्मक शक्तिलाई थप शक्ति प्रदान गर्ने र उजिल्याउने काम गर्छ । किसानले खेती नगरेमा जनताले खान पाउँदैन र उद्योगको निम्ति कच्चा पदार्थ उत्पादन हुँदैन । माल र खाना बिना उद्योग चल्दैन । त्यस्तै मजदुर बिना खनिज वस्तुको उत्पादन हुँदैन, बाटो र सडक बन्दैन, घरहरु बन्दैनन् र अन्य निर्माण कार्यहरु चल्दैन । सारमा समाज अगाडि बढ्दैन । यस्तो महत्वपूर्ण शक्ति वा वर्ग दलित पीडित हुनाले नै मानव समाज साह्रै ढिलो अगाडि बढेको हो र मानव जातिको उपलब्धी केही मात्रै व्यापक जनताले उपभोग गर्न पाएका छन् । यसकारण हरेक क्षेत्रमा कार्यरत कामदार वर्गको पक्षमा कथा, निबन्ध, गीत, चित्र वा साहित्य र कलाका अन्य विद्यार्थीहरुलाई अगाडि बढाउनु आवश्यक छ ।

एउटा सियो बन्न पनि वर्तमान सामुहिक उत्पादनमा प्रणालीमा व्यापक कामदारहरु र क्षेत्रको महत्वबारे पनि सबैलाई सुसूचित गर्नै पर्छ । एउटा कुनै अंग वा पक्षले काम रोकी दिंदा पूरा उत्पादन नै बन्द हुन्छ । सडकमा हुने सानो व्यवधानले उत्पादित सबै समानहरु गन्तव्य स्थलहरुमा पुग्न सक्दैनन् । यसकारण व्यक्तिगत उत्पादन प्रणाली र सामुहिक उत्पादन प्रणाली र आन्दोलनमा त्यसले खेल्ने भूमिकाबारे पनि कलम शक्ति चलाएर त्यसबारे जानकारी दिने काम गर्नु आवश्यक हुन्छ ।

उत्पादनका साधनहरुमा व्यक्तिगत स्वामित्वको कारण समाजमा ठूलो आर्थिक असमानता ल्याउँछ । त्यसले समाजलाई दुइ ठूला दुश्मनको दलमा विभाजित गर्छ । समाजका अन्यत्र बहुमत जनता गरिबी, बेरोजगारी र अभावले गर्दा मानव समाजको प्रगतिमा यथोचित योगदान गर्न बञ्चित हुन्छन् र मानव सभ्यताको उपलब्धीबाट पनि बञ्चित हुन्छन् । उदाहरणकै निम्ति ८० वर्ष पछि पनि नेपालका १५ प्रतिशत जनताले मात्र विद्युत उपयोग गर्न पाएका छन् । त्यस्तै अन्य अनेकौं उपलब्धीबारे अत्यन्त बहुमत जनता बंचित छन् । उपभोगको सिमितता त्यसबारे स्वभाविक विकास र आविस्कारहरु पनि पछि परेका छन्

यसको अर्थ हो व्यापक आकारमा उत्पादन हुन सक्ने आविष्कार गर्ने श्रम शक्तिले उठन पाएन र अर्कोतिर विकासले फड्को मार्न सकेन।

मानव समाजको हुन सक्ने तीब्रतर विकास तथा भौतिक र आध्यात्मिक प्रगतिको यात्रा र व्यवधान खडा गर्ने यस पूंजीवादी व्यवस्थालाई फाल्नु र त्यसको ठाउँमा आउने समाजवादी व्यवस्थाको निम्ति भैरहेका संघर्षहरुको प्रचार प्रसार गर्ने वा सहयोग पुऱ्याउने साहित्य र कलाको सिर्जनाहरु गर्नै पर्छ। ती साहित्य र कलाकृतिको आन्दोलनको गतिमा तीब्रता थप्छ, विविधता ल्याउँछ तथा परिमार्जन ल्याउँछ। नयाँ स्थापना वा समाजको निम्ति यसले मानसिक रुपले जगको काम गर्छ। समाज ढुंगा र माटो हो भन्ने साहित्य र कला मूर्ति र कलाकृति हो। त्यसको विविधता र निरन्तरता संस्कृति हो।

निश्चित समाजको साहित्य र कला सौन्दर्य बोलीचाली, व्यवहार आचार, जीवन शैली, शिक्षा र चिन्तन, सोच र शैली त्यसको संस्कृति हो। शोषणमा आधारित समाजको संस्कृति शोषक वर्गकै सुख दुःख दृष्टिकोण विचार, जय र पराजय, तिनीहरुकै विरोध र समर्थनमा बनेको र परम्परा चलेको हुन्छ। समाजवादी समाजको निर्माणपछि समाजवादी संस्कृतिको यथोचित विकास हुन्छ। आज हामी भविष्यमा हुने समाजवादी संस्कृतिको झझल्को कल्पना सम्म गर्न सक्छौँ।

समाजवादी र साम्यवादी समाजमा सानो जात र ठूलो जात, धनी र गरिब, शिक्षित र अशिक्षित व्यक्तित्व विकासमा अवसर पाएका र नपाएका, दुर्गम र सुगम कोही प्रशंसा मात्र पाउने कोही हेला होचोमा शिकार, लोग्ने मानिस र स्वास्नी मानिस भेद, साधन सम्पन्नता र विपन्नतामा जस्तो भेद भेटिंदै जाने हुँदा त्यस समाजको कला र संस्कृति र साहित्य आजको भन्दा धेरै फरक हुनेछ। आजका समाजवादी देशहरुका कथा, उपन्यास, कविता, रचना वा अन्य कलाकृति र जीवन शैलीको अध्ययनले आउने साम्यवादी समाजको कल्पना गर्न मद्दत मिल्ने छ।

## सञ्चारबारे



हुलाकको इतिहास पढ्दा प्रापकले शुल्क तिनुपर्नेबाट प्रेषकले नै टिकट टाँस्नेमा विकास भएको छ। त्यस्तै टेलिफोनमा पनि डायल गर्नेले नै शुल्क तिर्छ। तर मोबाइलमा दुबै पक्षले शुल्क तिर्नुपर्ने हुँदा यो अहिलेको स्थितिमा उपर्युक्त छैन। यसै सन्दर्भमा एउटै परिवार वा घरमा ४-५ वटा टेलिफोन राखेको समस्या समाधान गर्ने नाममा टेलिफोन महसुल बढाउने तयारी भित्रभित्रै भइरहेको छ। सर्वसाधारणले प्रयोग गर्ने र जसोतसो सुविधा पाइरहेकोलाई महंगीको मारमा पारेर सम्पन्न र सम्भ्रान्तहरुको मोबाइल टेलिफोनको आवश्यकता पूरा गर्ने सरकारको नियत र नीतिले नेपाली कांग्रेस कसको पार्टी हो भन्ने प्रश्न उब्जाउँछ। सर्वसाधारणलाई टेलिफोनको महसुल वृद्धि गरेर र सार्क राष्ट्रहरुमा सबभन्दा सस्तो मोबाइल टेलिफोन उपभोक्ताहरुलाई उत्तेजित पार्ने काम हुनेछ। यसतर्फ सम्बन्धित पक्षले ध्यान दिने आशा छ।

## शिक्षा नीतिबारे

जिल्ला स्तरमा अनिवार्य प्राथमिक शिक्षा महिला शिक्षा र विशेष शिक्षा कार्यक्रम ०५४ को वार्षिक कार्यक्रम तय गरेको छ।

वर्तमान चालु शिक्षामा जम्मा १०० अंकमा ६८ अंक माफी गरेर ३२ अंक प्राप्त गर्ने परीक्षार्थीलाई सफल परिक्षार्थीको रुपमा लिने गरेको छ। यस परम्परालाई बन्द गरी उतीर्णको ६० पुऱ्याए मात्र शिक्षाको स्तरमा वृद्धि हुनेछ।

माध्यमिक विद्यालयलाई दिने अनुदानमा पनि १५ प्रतिशत बिद्यार्थी उतीर्ण भएसम्म विद्यालयलाई कुनै किसिमको डर छैन। ८५ प्रतिशत परिक्षार्थी



यस्तै शिक्षा व्यवस्था रहयो भन्ने धनी झन् धनी हुने, गरीब झन् गरीब हुनेछ।

निःशुल्क पाठयपुस्तकको विवरण विभिन्न छात्रवृत्तिहरु छात्रछात्रावृत्ति, गरीब जेहेन्दार छात्रवृत्ति, दलित विद्यार्थी छात्रवृत्ति जस्ता कार्यक्रमहरुबाट वितरण सम्बन्धी प्रकृयागत व्यवस्था व्यवहारिक र प्रभावकारी नभएकोले इमान्दारीपूर्वक लक्षित समूहले खास फाइदा उठाउन सकिरहेका छैनन्।

एस.एल.सी.मा असफल भएता पनि शिक्षा नियमावली अनुसार त्यस विद्यालयलाई प्रतिशत प्राप्त विद्यालयको रुपमा राखिन्छ । त्यस विद्यालयमा पढाउने शिक्षक शिक्षिकाहरुले सरकारको काम कहिले जाला घाम गरेर शिक्षण पेशा प्रति वितृष्णा पैदा गरिरहेका छन्।

सरकारी तथ्याङ्कअनुसार ४५ प्रतिशत जनता निरपेक्ष गरीबी रेखामुनि भएको देशका गरीब तथा आर्थिक सामाजिक रुपले पिछडिएका बहुसंख्यक जनताका छोराछोरीले सस्तो र सुलभ तरिकाबाट शिक्षा हासिल गर्न पाइरहेका छैनन्। गरीब जनताले महंगो शिक्षाको उपभोग गर्न सकिने सामर्थ हुँदैन।

सरकारी अनुदानबाट संचालन हुने विद्यालयहरुमा कक्षा १० सम्म निःशुल्क भनेता पनि भर्ना शुल्क, पुस्तकालय शुल्क, भौतिक सुधार शुल्क र परिक्षा शुल्क जस्ता विभिन्न किसिमका शुल्क लिने गरिएको स्तरीय तथा गुणस्तरयुक्त पठन पाठनको व्यवस्था नहुने भएकोले गरीब जनताले निःशुल्क शिक्षाको होस् वा खास फाइदा पाउन सकिरहेको छैनन्।

निजी क्षेत्रका शैक्षिक संस्थाहरुको विकास र बिस्तार भैरहेकाछन्। त्यस्ता शैक्षिक संस्थामा गरीब तथा आम जनताका बालबालिकाहरुले सरल र सस्तो रुपमा शिक्षा हासिल गर्न सकिने प्रावधान राखेर मात्र स्वीकृति दिने तर्फ सरकारले कदम चाल्नुपर्छ।

निजी क्षेत्र प्रति सरकारको यस्तै नीति रहयो भने धनीका छोराछोरीले मात्र स्तरीय शिक्षा पाउन सकिने भई गरीबका छोराछोरी स्तरीय शिक्षाबाट वञ्चित हुनेछन्।

रोजगारीमुलक शिक्षा, प्राविधिक शिक्षा तथा व्यवसायिक तालिम, साक्षरता अभियान नारामा मात्र सिमित भए जस्तो राजनैतिक प्रतिबद्धताका साथ ठोस कार्यक्रमको अभाव छ।

शिक्षा क्षेत्रमा भएको राजनैतिक हस्तक्षेपले गर्दा शिक्षामा भएको लगानी विद्यालय तह अनुरुप शिक्षकहरुलाई परिचालन गरी उनीहरुबाट देश र जनताले पाउनु पर्ने प्रतिफल पाउन सकिरहेका छैनन्।

शिक्षकहरुको पेशा प्रतिको अनाकर्षण लगाबको कारण उनीहरुको सीप र दक्षताको राम्रो उपयोग भैरहेको देखिंदैन।

सक्षम सुविधा सम्पन्न गा.वि.स., नगरपालिका, उपनगरपालिका, उपमहानगरपालिका र महानगरपालिकालाई त्यस क्षेत्रमा सरकारी अनुदानबाट संचालित सम्पूर्ण शैक्षिक संस्थाहरु संचालन गर्ने जिम्मेवारी दिने नीति अवलम्बन गनुपर्छ। बिकेन्द्रीकरण ऐन नियम अनुकूल हुनुपर्छ।

त्रिभुवन विश्वविद्यालय अन्तर्गत विभिन्न क्षेत्रका विषयमा असंख्यक सहप्राध्यापक उच्च स्तरीय जनशक्तिको सीप र दक्षतालाई प्राज्ञिक विकासको निमित्त अध्ययन अनुसन्धान लगाई स्तरीय शिक्षाको विकास र विस्तारमा सदुपयोग गर्ने नीति लिनुपर्छ। विश्वविद्यालय अनुदान आयोग खाली हुण्डी बाँड्ने समिति संस्था हुँदैछ। सार्वजनिक शिक्षा क्षेत्रमा नीजि शिक्षा क्षेत्रको दबाब बढ्दैछ।

शिक्षा मन्त्रालय आज सत्तापक्षको भर्तिकेन्द्र

हुँदैछ । शिक्षा अधिकारीहरु जिल्ला पार्टीको ठेकेदार भएका छन् । कति शिक्षा अधिकारीहरुले हाकाहाकी पैसा खाएर शिक्षकहरु भर्ना गर्ने गर्छन् ।

निर्वाचनको बेला ठूल्ठूला पूंजीवादी पार्टीहरुले प्रवेशिका परीक्षा उतीर्ण छात्र छात्राहरुलाई शिक्षक शिक्षिका बनाई दिने बचन दिएर कार्यकर्ता बनाउँछन् । प्रवेशिका परिक्षामा असफल भएका विद्यार्थीहरुलाई समेत पास भएको लब्धाङ्क उपलब्ध गराउन सत्तासीनहरुले दबाब दिने गर्छन् ।

शिक्षा क्षेत्रका यी सबै चर्तिकला हेर्दा नेपाली कांग्रेसले पंचायती शैली अपनाएको देखिन्छ भने एमालेले राणा शासनको शैली अपनाएको देखिन्छ । शिक्षा मन्त्रालय, बेलगाम घोडा बनेको छ । मन्त्री त्यसका सवार छन् ।

शिक्षामा भएको लगानी आ.ब. ०५४/०५५ मा कूल बजेटको १३.१ प्रतिशत शिक्षा क्षेत्रको लागि छुट्ट्याईएको रकम मध्य तलब भत्ता र अन्य शैक्षिक गुणस्तर वृद्धिकार्यमा के कति छुट्ट्याइएको भन्ने विश्लेषण गरियो भने शिक्षाको विकासमा खास रकम छुट्ट्याइएको छैन ।

प्राथमिक र माध्यमिक कोर्स ५ अरब शिक्षामा लगानी ठूलो छ, तर त्यस अनुसारको गुणको विकास छैन, राजनीतिकरण मात्रै भएको छ ।

## उद्योगबारे



कपडा उद्योगलाई औद्योगिकरणको ढोका भनिन्छ । सन् २००० सम्ममा कपडा उत्पादनमा आफ्नो देशलाई आत्मनिर्भर बनाउने नीति बनेको थियो । नेपाल भित्र वार्षिक ७ करोड मिटर कपडा उत्पादन हुन थालिसकेको थियो ।

आन्तरिक बजारको कुनै समस्या नभएको यो उद्योगले उचित संरक्षण पाएको भए थौरै रकमको विस्तारले २० करोड मिटर कपडा उत्पादन गर्न सकिने क्षमता हुन्थे र ५ लाख भन्दा बढी मानिसले रोजगारी पाउँथे ।

सरकारको गलत नीतिका कारण उत्पादनमा ह्रास आउदै २ करोड मिटरमा झरेको छ र अब पूरै बन्द हुने स्थितिमा पुगेको छ ।

यदि सरकारले कपडाको आयातमा यथार्थ मूल्यांकन गर्ने र चोरी पैठारी रोक्ने हो भन्ने वैधानिक प्रक्रियाको बाटोबाट आउने कपडामात्र वर्षको अरबौ राजस्व उठ्न सक्छ ।

अर्कोतिर मुलुकमा पर्याप्त बजार भएको कपडा उद्योग मुलुक भित्रै विकसित र विस्तारित पनि हुन सक्छ । यत्तातिर जानेर पनि सरकारको ध्यान जाँदैन । राष्ट्रिय उद्योगलाई मारेर भारतीय बजारलाई संरक्षित बजार दिने सरकारको कस्तो नीति हो ?

एसियाली विकास बैंकको काठमाडौँस्थित आवासीय नियोगको अनुसार सो सहयोग उद्देश्य अन्तराष्ट्रिय सन्धी सम्झौता सम्बन्धी कुराकानी तथा कार्यान्वयन वैदेशिक आर्थिक सहयोग विकास योजनाको समयमा कार्यान्वयन र सम्पूर्ण विकास प्रक्रिया संचालनमा सुधारका लागि कम्प्युटर युक्त कानूनी सूचना व्यवस्थाको स्थापना र कानूनी तालिम प्रदान गर्ने ।

एसियाली विकास बैंकले नेपालको कृषि क्षेत्रको सुधार कार्यक्रमलाई टेवा पुऱ्याउन करौडौं अमेरिकी डलर सहुलियतपूर्ण ऋण दुई किस्तामा उपलव्ध गराइएको छ भन्ने ऋण रकमको पूर्ण सहयोगको लागि संयन्त्र विकास गरिएको पनि थाहा भएको छ ।

सो ऋण कार्यक्रम सरकारले कृषि सम्बन्धी २० वर्षिय दिर्घकालिन योजनाको अंश दोश्रो कृषि कार्यक्रम अन्तरगत उपलब्ध गर्न लागिएको हो ।

एसियाली विकास बैंकको सहयोगमा तयार गरेको सो दिर्घकालिन योजनाको नीति तथा संस्थागत सुधार तथा सिंचाई तथा ग्रामीण पूर्वाधार जस्ता निश्चित क्षेत्रमा लगानी गरी कृषि उत्थानलाई बढाउने लक्ष्य राखेको छ ।

मानव जातिको इतिहास आवश्यकताको राज्यदेखि स्वतन्त्रताको राज्यसम्म निरन्तर विकास हो । यो क्रम अचल छ ।

विकसित एवं विकान्सोमुख मुलुकमा देखा परेका समस्याको समाधान गर्दै तीव्र रुपमा विकासको लहर सृजना भएता पनि सोचे अनुरुप विकासोन्मुख देशले विकासको गति अगाडि बढ्न सकेन ।

देशको अर्थतन्त्रलाई टेवा पुऱ्याउने उद्देश्यले एसियाली विकास बैंकले सरकारलाई विकास परियोजनाहरुको कार्यक्रम बजेट र व्यवस्थापन सम्बन्धी परिणाममुखि संस्थागत ढाँचा तयार पार्न प्राविधिक सहायता प्रदान गरेको छ ।

परियोजनाहरुको व्यवस्थापन सम्बन्धी सुधारबाट विकासका स्पष्ट अवधारणा अन्तर्गत परियोजनाको प्राथमिकता किटान गर्न कार्यान्वयन र मूल्यांकन गर्न सजिलो उपाय एशियाली विकास बैंकले अपनाएको छ ।

विकास सम्बन्धी मूल्य र मान्यताहरुलाई समयको परिवर्तनले प्रतिस्थापन गरिदिएको छ ।

नेपालमा उत्पादन हुने जटिबुटीहरु, नेपालमा औषधी उत्पादन गर्ने कम्पनीहरुले नै प्रयोग गर्न सकिने वातावरण सृजना गर्नुपर्ने र जडिबुटी प्रयोग गर्दा श्री ५ को सरकारबाट संचालित कम्पनी शाही औषधी लिमिटेड जस्तालाई विशेष प्राथमिकता दिनुपर्छ ।

हाल सरकारबाट संचालित उद्योगहरुलाई विफल पार्न नीजि तथा विदेशी कम्पनीका एजेन्टहरुले विभिन्न आर्थिक प्रलोभन देखाई गरिरहेको दखल बनाई सरकारले गम्भीरतापूर्वक सोच विचार गरी रोक्नु पर्छ ।

वातावरण सम्बन्धमा उपत्यका भित्रका कल कारखानाहरुबाट सयौं टन हानिकारक रासयनिक पदार्थ र अन्य धेरै सडे गलेका वस्तुहरु खोला र नदीमा दैनिक मिल्काई रहेका छन् ।

उपत्यकामा चल्ने हजारौँ गाडी बाहनहरु र सयौँ चिम्नी भट्टाहरु र अन्य सिमेन्ट, चून र मार्बलका उद्योगहरुबाट असीमित परणाममा धूलो र धुँवा आकाशमा उडिरहेको छ । उपत्यकाको कुना काप्चामा जताततै पक्कि भवनले ढाकिन्दै छन् । बाँकी भएका सीमित वन जङ्गल भासिंदैछन् । जसको परिणाम माटो, पानी र हावा विषाक्त बन्दैछन् र अनेकौँ घातक रोगहरुको प्रकोप बढीरहेछ ।

वर्तमान प्रदुषणको गतिलाई नरोक्ने हो भन्ने १,२ दशकपछि उपत्यकावासीले भीषण महामारी व्यहोर्नु पर्नेछ ।

## राजमार्गबारे



अरनिको राजमार्गसँग जोडिने पाण्डु बजारदेखि कटुञ्जे भै गुण्डु गा.वि.स. जाने बाटो ग्राभलिङ्ग नहुँदा वर्षायामले त्यस बाटोलाई छिया-छिया पारेको छ । स्थानीय वासिन्दाले सम्बन्धित ठाउँहरुमा अनुरोध गर्दा पनि चासो नलिंदा स्थानीय वासिन्दा निराश भएका छन् । त्यसकारण सरकारले पाण्डु बजारदेखि कटुञ्जे भएर गुण्डु गा.वि.स. जाने बाटो ग्राभलिङ्ग गरी बाटो बनाउनु

पऱ्यो । गुण्डु ओरालो जाने बाटोमा पुल हाल्न सम्बन्धित मन्त्रालयको ध्यान आकर्षित गर्न चाहन्छु । धन्यवाद ।

अरनिको राजमार्गसँग जोडिने सहायक मार्गका पार्टी ग्राभलिङ्ग गर्नुपऱ्यो ।

नेपाल बुद्धको जन्मभूमि हो । भगवान बुद्ध जन्मस्थल लुम्बिनीमा लुम्बिनी विकास निर्देशक जापानी धर्म गुरुको हिजो १०:३० बजे सिमापारीबाट आएका व्यक्तिहरुले हत्या गरेका छन् । भनिन्छ, ती हत्याराहरुसँग धारिला किसिमका हातहतियार छन् । धर्म गुरुमाथि हत्या गरी ६ लाख भन्दा रकमहरु लुटेर लगेको कुरा सुन्नमा आएका छन् । ती हत्याराहरु को हुन्? हत्याराहरु माथि कार्यवाही गर्नु पऱ्यो ।

विदेशी धर्म गुरु माथिको हत्याले १९९८ को पर्यटन वर्षलाई असर पर्न सकिन्छ ।

जनसंख्या नियन्त्रण गर्ने नीति बरोबर छिमेकी देशबाट ओर्लिने जनसंख्यालाई २१ प्रतिशत नियन्त्रण गर्ने ।

परिनियममा जहाँसम्म पुऱ्याउनु पर्ने हो, त्यो ठाउँमा पुऱ्याउन सकिरहेको छैन । जनसंख्या वृद्धि तराईमार्ग भएकोमा बालबच्चा भारतबाट ल्याएर पनि वृद्धि गरिरहेको छ ।

अन्तर्राष्ट्रिय दिवस मानेर विशेष कार्यक्रम संचालन गरिरहेको छैन । जनसंख्या तथा वातावरण मन्त्रालय स्थापित गरेता पनि जनसंख्या नियन्त्रण गर्न सकिएको छैन ।

जनता अभियान व्यापक रुपमा चेतना दिन गाउँघर सम्म कार्यक्रम बनाउनु पर्ने देखिन्छ । यु. एन. डि. पि. ए. ले सहयोग गरिरहेको छ । मातृ शिशु कल्याण योजना गाउँ सारसम्म पुऱ्याउन सकेमा प्रभावकारी हुन्छ ।

कम जनसंख्या एक परिवारदेखि दुइसम्म व्यवस्था गर्न पुरस्कार दिनु पर्ने । छिमेकी देशबाट आउने भारलाई रोक्ने रोक्ने देखिन्छ । जनसंख्या नियन्त्रण गर्ने ।

शहरी बसोवास गर्ने कार्यलाई होचो जग्गामा बसोवास गर्न दिनु भन्दा अनियन्त्रित बसोवासलाई पूरा नियन्त्रण गर्नुपर्छ । उपत्यकाको पहाडी क्षेत्रमा रिङ्गरोड नभई दिएको खण्डमा वातावरण

शहरी बसोवासको कारणले विकासको लागि योजनाबद्ध तरिकाबाट विकास गर्नुपर्ने ।

उपत्यकामा बाहिरी जिल्लाका मानिसहरुलाई जग्गा वेच विखन काठमाडौंमा भएको जनसंख्याको चापलाई हटाउन देशका अन्य जिल्लाहरु सहुलियत उपलब्ध गर्ने प्रावधानहरु हुनुपर्छ ।

## प्रशासनिक विकेन्द्रिकरणबारे



शिक्षा स्वास्थ्य र रोजगारी, प्रसासनिक विकेन्द्रिकरण लागु गर्नुपर्छ ।

१. भक्तपुरदेखि साँखु जाने पुल बनाउनुपर्ने । चाँगुनारायण मन्दिरसम्म कालोपत्रे भैसकेको पुनः कालोपत्र गरी मर्मत गर्नुपर्ने ।
२. भक्तपुरको दधिकोटदेखि नयाँ थिमिसम्म कालोपत्र गर्नुपर्ने ।
३. भक्तपुर र पाटन सीमाना पुल हाल्नुपर्ने । विरुवा र गुण्डुमा पनि
४. भक्तपुर व्यासीदेखि झौखेलसम्म कालो पत्र गरी पुल मर्मत गर्नुपर्ने ।
५. नखेल गा.वि.स. अन्तर्गत बाटोमा ग्राभलिङ्ग

गर्नुपर्ने ।

६. चाँगु नारायणदेखि मनहरासम्म स्वावलम्बन कार्यक्रबाट बनाएको बाटोमा ग्राभलिङ्ग गर्नुपर्ने र पुल हाल्नु पर्ने

७. लोकन्थली गा.वि.स.को उत्तरतिर घना वस्ती भएको ठाउँमा ग्राभलिङ्ग गरी कालो पत्र गर्नुपर्ने ।

अरनिको राजमार्ग दायाँ-बायाँ ३० फुटको मापदण्ड टोकेको छ । विगतको सरकारले ८२ फुट भित्रको स-साना टहरा र पर्खालहरु भक्तपुरको सल्लाघारीसम्म भत्काएको थियो ।

सरकारले ८२ फुट भित्र रहेका मोही र जग्गा धनीहरु जग्गाको लागत समेत कट्टा गरिसकेका छन् । बिना मुआब्जाले लागत कट्टा गरिंदा मोही र जग्गा धनीहरु आश्चर्य चकित भएका छन् ।

यो समस्या कसरी समाधान गर्ने हो ? यसबारेमा पनि हामीले ध्यान दिनुपर्ने आवश्यकता मैले देखेको छु ।

वेरोजगारी समस्या समाधान गर्न र देशको जनशक्तिलाई प्रयोगमा ल्याउन सकिने केही आधारहरु देखे जस्तो मलाई लाग्छ ।

यातायातको विकासले राष्ट्रलाई अगाडि बढाउँछ । केही रुपमा भए पनि रोजगारी समस्या पनि समाधान हुन्छ । तराईं क्षेत्रमा बाटा घाटा र राजमार्ग बनाउन जटिल सजिलो छ, त्यो भन्दा बढी पहाड असजिलो हुन्छ ।

हाम्रो देशको भौगोलिक वातावरणले गर्दा दक्षिणतिर बाटो घाटो बन्दोवस्त भै विकासका कार्यहरु भैरहेका हुन्छ । भन्ने उत्तरतिर त्यसको तुलनामा नगण्य रुपमा छन् । त्यसैले देशको जन शक्तिलाई प्रयोग गर्ने उत्तरी क्षेत्रमा राजमार्गको निर्माण सक लाखौं लाख मानिसहरुले रोजगारी पाउने छन् र वेरोजगार भै विदेशिनु पर्ने बाध्यता पनि आउने छैन ।

पहाडमा उत्पादित वस्तुहरुले बजार पाउनेछन् । देशमा उत्पादित फलफूलहरुलाई कुहिनबाट बचाउन सकिनेछ । किसानको उत्साह बढ्नेछ ।

पहिलो आवश्यकता, संचालन गर्न सकिने कृषिसँग सम्बन्धित उद्योगहरुको विकास गर्नु ।

क) विदेश निर्यात योग्यवस्तु उत्पादन गरेर विदेशी मुद्रा आर्जन गर्नु

ख) दोस्रो कृषिलाई सघाउ पुऱ्याउने खालको मझौला र ठूला सिंचाई र जलविद्युत उत्पादन गर्न सक्ने बहुउद्देशीय आयोजनाको विकास गर्नु ।

दोस्रो आवश्यकता, देशको सबै भागमा यातायातको मार्ग जोडी सकेपछि

क) पर्यटकहरुको विकास गर्नु

ख) कृषि र जलस्रोत देशको सबै भागसँग केन्द्रीय प्रणाली जोड्नु ।

## अदालतबारे



जिल्ला अदालतका शुरु मुद्दा प्रतिवादी परेको मितिबाट १ वर्ष भित्र फैसला गर्नुपर्ने कानूनी व्यवस्था भए पनि व्यवहारमा ४, ५ वर्ष सम्म पनि मुद्दा फैसला हुन नसकेका मुद्दाहरु पनि भएकोले सो छिटो छरिटो फछ्र्यौट गर्न सरकारले ध्यान दिएको छैन । ५० प्रतिशत भन्दा बढी मुद्दाको कारणले टुंगिन सकेन ।

पुनरावेदन अदालतका शुरु मितिले प्राप्त भएको मितिले ६ महीना भित्र फैसला गर्नुपर्ने र आवश्यक प्रमाण

बुझिसकेपछि मुद्दा छिन्न ३५ दिन भन्दा ढिलो गर्न नहुने कानूनी प्रावधान भए पनि व्यवहारमा वर्षौंसम्म मद्दा छिन्न ढिलाई भइरहेको छ। ढिला न्याय दिनु न्याय नदिनु बराबर हो कानूनी सिद्धान्तलाई सार्थकता दिन न्याय मन्त्रालयले पहल गर्न सकेको छैन।

न्याय छिटो छरितो एवं स्वच्छ रुपमा दिलाइ न्यायकर्ताहरुलाई समयानुकुल तालिमको वन्दोवस्त गर्न नसक्नाले नै न्याय सम्पादनमा ढिलाई भइरहेको छ। सरकारले त्यसलाई हटाउन कुनै उपाय अवलम्बन गर्न सकेको छैन।

सक्षम एव. स्वच्छ छबि भएका न्यायकर्ताको नियुक्तिमा सरकारले ध्यान दिएको छैन। न्यायकर्ताको नियुक्तिमा कुनै रेर्कडको आधारमा हुन नसक्दा स्वच्छ न्याय प्रदान गनका लागि चुनौती भइरहेको छ।

अदालतहरुमा सुरक्षा गार्डको व्यवस्था गर्न उल्लेख शुरु अदालतहरुमा हालसम्म पनि वन्दोवस्त हुन सकेको छैन। सवारी साधनको पनि उचित वन्दोवस्त हुन सकिरहेको छैन।

जिल्ला अदालतका भवनहरु जीर्ण अवस्थामा पुगे पनि निर्माणको तर्फ कुनै चासो लिएको छैन। यस्तो स्थितिमा न्यायकर्ता न्याय सम्पादनमा कस्तो असर पर्दछ त्यस तर्फ सरकारले ध्यान दिएको छैन।

अदालतको फैसला बमोजिम भएका जरिवानाहरु असूलउपर गर्न सरकारले तदारुकता देखाएको छैन। वर्षौ वर्षौका जरिवानाहरु असूल उपर गर्न यथावत् रहेकाले सरकारको ध्यान आकर्षण गर्दछु। कोर्टफी ऐनअनुसार कोर्टमा दाखिल गर्न नसक्ने निमुखाहरुले अन्याय परे पनि सहेर बस्नु पर्ने बाध्यता भएको छ। कोर्टफीको चर्को वृद्धिले गर्दा अन्यायमा परेकाहरुलाई पनि सरकारले विशेष व्यवस्था गरी सुविधा दिन आवश्यक छ।

## प्रचलित ऐनहरूबारे

मालपोतको न्यूनतम मूल्य कायम गरी अदालतका कोर्टफी लिने व्यवस्थाले न्याय निकै महँगो परेको महशुस भएको छ। गरीब जनताहरुले कोर्टफी कै कारण न्याय पाउन नसक्ने वर्तमान अवस्थामा परिवर्तन गर्न आवश्यक छ। अदालत मालपोत असूल गर्ने अड्डा नभै न्याय प्रदान गर्ने अड्डा हो।

फैसला कार्यान्वयनमा ढिलाइ भएको छ।

कर्मचारीहरुले अनावश्यक दुःख दिने गरेको देखिन्छ।

## सरकारी नीति तथा कार्यक्रमबारे

शोषणमा आधारित कुनै पनि व्यवस्थाको सरकारले देश र जनताको स्थितिमा मौलिक परिवर्तन ल्याउन सक्दैन भन्ने आफ्नो विश्वास भएकाले शाही सम्बोधनबाट खासै अपेक्षा थिएन। यद्यपि सरकारको नीति तथा कार्यक्रमका २९ बुँदा सुन्दा पढ्दा जे जसरी भए पनि चुनाव जित्नै पर्नेहरुले मतदाताहरुलाई चुनावी आश्वासन दिइरहेको जस्तो लाग्यो। कहिल्यै पूरा नहुने त्यस्ता आश्वासन हामीले धेरै वर्षदेखि सुन्दै आएको हुँदा सम्बोधनबाट कुनै उत्साह दिन सकेन। केवल औपचारितामा निर्वाह गर्ने परम्परा मात्र सम्पन्न भयो।

परम्परागतको शाही सम्बोधनमा सन् २००२ सम्ममा सम्पूर्ण जनसंख्यालाई खानेपानी र स्वच्छ खानेपानी सुविधा उपलव्ध गराउने आश्वासन पनि परेको छ। जलस्रोतमा विश्वमा दोस्रो धनी राष्ट्र भनिएका नेपाली जनताले ५ वर्ष पछि खानेपानीको सुविधा पाउने आश्वासन पाएको छ। तर वि.सं. २०५९ सालसम्ममा सुविधा उपलव्ध गराउने नभनी सन् २००२ सम्म भनिएकोले मनमा चिसो पसेको छ। त्यस आश्वासन कति विश्वसनीय छ भन्ने कुरा सम्पूर्ण जनसंख्यालाई खानेपानी उपलव्ध गराउन मेलम्ची खानेपानी योजना समयवद्ध रुपमा कार्यान्वयन भरिने भएबाट स्पष्ट भएको छ। मेलम्ची ले ताप्लेजुङ र हुम्ला, कञ्चनपुर र झापाका जनतालाई पनि खानेपानी उपलव्ध गराउने हो कि ?

सरकारको नीति र कार्यक्रममा नीजि क्षेत्रलाई निकै जोड दिइएको छ। यसको अर्थ देश र जनताको हितको लागि सरकारबाट गर्नुपर्ने कामहरुबाट पन्छिन खाजेको हो वा कर्तव्य निर्वाह गर्न असक्षम आफ्नो कमजोरी प्रदर्शन गरेको हो ठम्याउन गाह्रो भएको छ। जनताका न्युनतम आवश्यकताहरु र हरेक सरकारले अनिवार्य रुपमा गर्नुपर्ने कर्तव्यहरु समेत निजी क्षेत्रलाई दिने सरकारको सोचले अब सरकार पनि निजी क्षेत्रलाई

दिने सरकारको सोचले अब सरकार पनि निजी क्षेत्रलाई बोल-कबोलमा सञ्चालन गर्न दिने हो कि ? तर, अन्यथा नलिइने हो भने सांसद र मन्त्रीको हैसियतले प्राप्त हुने तर देशका सचेत नेता, बुद्धिजीवि र जनताले पटक्कै नरुचाएका सुविधाहरु भने यथावत् राख्न कथित राष्ट्रिय पार्टीहरुलाई सुझाव दिन चाहन्छु ।

लाज नभएको वा नमान्नेलाई नकचरो भनिन्छ । तर नकचरोलाई पनि लाज लाग्ने नीति र कार्यक्रमलाई के भन्ने ? सरकारले भर्खरै मट्टितेल, डिजेल, ग्याँस र पेट्रोलमा मूल्य वृद्धि गरेको छ र त्यसबाट सम्पूर्ण जनतालाई आहत पुगेको छ । मूल्यवृद्धिको विरोधका कारण स्वरहरु थामिएका छैनन् । तर शाही सम्बोधन गरेकामा मूल्यमा स्थीरता राख्ने र मूल्य वृद्धिबाट राहत प्रदान गर्ने कुरा उल्लेख छ । आफैंले मुल्यवृद्धि गर्ने र आफैंले राहतको कुरा गर्ने आफैं बोक्सी आफै धामीको यो कुसंस्कारको कहिले अन्त्य हुन्छ ?

उपभोक्ताहरु मूल्यवृद्धिबाट मात्र होइन गुणस्तरको वस्तु नपाएर पनि पीडित छन् । दोहोरो मारमा परेका उपभोक्ताहरुलाई राहत दिन हाम्रोले राखेको उपभोक्ता विधेयकलाई यो सरकारले पनि छलफलमा ल्याउने आँट गर्ला जस्तो देखिएको छैन । यसबाट यो सरकार जनताप्रति कति सम्वेदनशील छ भन्ने कुरा बुझ्न सकिन्छ ।

सरकार फेरिनासाथ शिक्षा नीतिमा हेरफेर ल्याउने परम्परालाई यो सरकारले पनि पछ्याइरहेको छ । शिक्षा क्षेत्रमा अराजकता र अन्योल स्वयं सरकारहरुले ल्याइ रहेबाट सुखद भविष्यको चाहना गर्नेहरु सबैलाई चिन्तित तुल्याउनु स्वभाविक छ ।

सरकारले गठन गरेको शिक्षा आयोगमा सबै शिक्षक संघहरुलाई समावेश नगरिएबाट त्यसले दिने सुझावले देश र जनताको चाहना कसरी पूरा गर्ला ?

देशको सांस्कृतिक सम्पदाको विस्तृत सर्वेक्षण गर्ने सम्बोधनको आश्वासन कसरी कार्यान्वयन होला त्यो हेर्न बाँकी छ । तर देशको कला संस्कृतिप्रति उपेक्षा भाव र झारा टार्ने प्रवृत्तिले अन्ततः देशको स्वाभिमान र गौरवमा असर पर्न सक्ने तर्फ सचेत हुन र हाम्रो पार्टीले राखेको कला संस्कृति विधेयक प्रति पूर्वाग्रह नराख्न आग्रह गर्दछु ।

एउटा पार्टीका निर्वाचित प्रतिनिधिलाई भ्रष्ट बनाइ आफूलाई राष्ट्रिय पार्टीको दाबी गर्नेहरुले संसदीय संस्कृतिको विकास गर्ने प्रयास अनि कथित राष्ट्रिय पार्टीको दाबी गर्नेहरुले संसदीय संस्कृतिको विकास गर्ने प्रयास अघि कथित राष्ट्रिय पार्टी राजनैतिक मूल्य र मान्यताप्रति सम्वेदनशील हुनु आवश्यक छ । संसदीय संस्कृति र प्रजातान्त्रिक मूल्य र मान्यताप्रति वितृष्णा जनाउने काम सत्ता टिकाउने र जाने नाममा भइरहेको जगजाहेर छ ।

शाही सम्बोधनमा चुनावी आश्वासन जस्तो मात्र होइन बकपत्र जस्तो पनि छ । भर्खरै सम्पन्न स्थानीय निकाय निर्वाचनमा सत्ताधारी एमालेले प्रहरी प्रशासनलाई राजनीतिकरण गरेको लगत्तै प्रशासक यन्त्रलाई राजनीतिबाट पर राखी निष्पक्ष राख्ने कुरा देश र जनतालाई मूर्ख बनाउने प्रयास हो । देश र जनताको हित भन्दा आफ्नो पार्टी स्वार्थलाई प्राथमिकता दिने संस्कार नै प्रशासन यन्त्र बिटुलिनुको मूल कारण हो । यसै क्रममा सञ्चारलाई २१ औं शताब्दीको आवश्यकता अनुरुप बनाउने गुरुयोजना पनि केवल सत्ताको तावेदारी गर्ने भन्दा बढी हुने देखिंदैन ।

शाही सम्बोधनमा असामाजिक र आतंकवादी गतिविधि कडाइका साथ समाधान गर्ने भनी माओवादी जनयुद्धलाई इंगित गरिएको छ । यदि सिंहदरबारलाई देश र परिवारलाई जनता सम्झने सोच र व्यवहारलाई सरकारले नछोड्ने हो भने भोका जनता पूर्वबाट उठ्ने छन्, नांगा जनता उत्तरबाट उठ्ने छन् । पीडित जनता दक्षिणबाट उठ्ने छन् । त्यसबेला शोषण उत्पीडन, अन्याय, अत्याचारको समाधान सरकारले होइन स्वयं जनताले आफ्नै तरिकाले गर्दै छन् । यस सम्भावनालाई हेक्का राख्न पनि आग्रह गर्दछु । ४-५ जिल्लामा अन्याय र दमन विरुद्ध उठेका जनतालाई दबाइयो भने भोलि ४०-५० जिल्लामा उठ्ने छ । जनतालाई दबाउन सक्दैन ।

## स्वास्थ्य नीतिबारे

सरकार स्वास्थ्य मन्त्रालयद्वारा सदनमा स्वास्थ्य विधेयक सम्बन्धमा,

- हालको रा.प. अनं तृतीय श्रेणीका सम्पूर्ण कर्मचारीहरुलाई तीनवर्ष पुगेकालाई रा.प. अंकित



द्वितीय श्रेणीको तह निर्धारण गरिएको

- हालको रा.प. अंकित द्वितीय श्रेणीमा तीन वर्ष सेवा पुगेकालाई रा.प. अंकित प्रथम श्रेणीको तहमा तह निर्धारण (पदमिलान) गरेको
- हालको रा.प. अंकित प्रथम श्रेणीको तीन वर्ष सेवा पुगेकोलाई वरिष्ठ पाँचौ तह निर्धारण गरेको छ भने सोही तहमा दशौं वर्षसम्म (सो भन्दा माथि बीसौं वर्षसम्म) सेवा गरेकालाई कहीं कतै केही व्यवस्था नगरेको भएकोले चालु सदनमा स्वास्थ्यमा कार्यरत निम्न वर्गीय कर्मचारीको विषयमा सो विधेयक ऐनमा संशोधनको लागि जोडदार माग गर्न
- अधिकृत स्तरमा छैठौं तहबाट बाह्रौं तहको व्यवस्था भएको देखिन्छ भने पाँचौ तहमा नियुक्ति पाएकालाई वरिष्ठ पाँचौं तह भनी आँखामा छारो हाल्ने काम भएका पाइयो। सोको लागि कम्तीमा पनि अन्तिम ५ ग्रेड मानेकोमा पूर्ववत् ग्रेड पाउने व्यवस्था हुनुपर्ने
- ग्रेडको विषयमा ऐन नियम दुबै हेरी मात्र कुरा गर्नुपर्ने देखिन्छ।

सर्वसाधारण जनताको स्वास्थ्य स्तरमा सुधार ल्याई सन् २००० सम्ममा सबैलाई स्वास्थ्य सेवा पुऱ्याउने कतिवद्धता अनुरुप नवौं योजनाको प्रथम वर्षको रुपमा रहेको आर्थिक वर्ष ०५४/०५५ मा २७ करोड ११ लाख ९६ हजार वार्षिक कार्यक्रमले तय गरेको छ।

२०५ क्षेत्रमा प्राथमिक स्वास्थ्य केन्द्र ०५४/०५५ को अन्त सम्ममा १०० वटा स्वास्थ्य केन्द्र पुऱ्याउने सरकारको विचार रहेको छ।

पहिले कुन कुन जिल्लामा खोल्ने हो त्यो कुरा सदनलाई जानकारी हुनुपर्ने हो।

## पर्यटन नीतिबारे

नवौं पञ्च वर्षिय योजनाको प्रारम्भदेखि नै पर्यटन उद्योगको विकासका लागि अन्तराष्ट्रिय बजार हरुमा पर्यटन प्रवर्द्धन संचालन गर्न आन्तरिक पर्यटन विकास गर्ने, १९९८ को नेपाल वर्षको लागि महत्व दिई पर्यटनका पूर्वाधारहरु निर्माण गर्ने ०५४/०५५ को वीर्षक कार्यक्रम तयार गरेको छ।

पर्यटन वर्ष १९९८ नजिकिंदै छ। सरकारले कुन कुन स्थानहरु पर्यटन क्षेत्र घोषणा गरेका छन्। कार्यक्रममका सो स्थान उल्लेख गरिएको भए राम्रो हुने थियो।

नेपाल वर्ष १९९८ लाई सार्थक बनाउन विमान स्थलको निर्माणले होइन, पर्यटकहरुलाई आकर्षित गर्ने स्थलहरुको निर्माणलाई प्राथमिकता दिनुपर्छ।

हवाईजहाज खरदिमा पनि गलत मानिसहरुको प्रयोग भईरहेको सुन्नमा आएको छ। जहाज खरीदमा कमिशन खाने दलालहरुले अनेकौं भूमिका बनाई रहेको सुनिन्छ। यसमा प्रधानमन्त्रीज्यू आफै होशियार रहनुपर्ने देखिन्छ।

पर्यटन क्षेत्र विकासको लागि लुम्बिनी अंचलको भैरहवा सीमामा अन्तर्राष्ट्रिय विमानस्थल बनाउनु आफ्नै खुट्टामा आफैंले वञ्चरो हान्नु हो।

आर्थिक, राजनैतिक र सुरक्षात्मक रुपले त्यो पाइला देशको विरोधमा हुनेछ।

सरकारले हिमाली पर्यटन क्षेत्रको विकासको लागि ४६ लाख ७४ हजार बजेट व्यवस्था गरेर हिमाल सफाई गर्ने पर्वतारोहण तथ्याङ्क सचना सम्बन्धी पुस्तिका प्रकाशन गर्ने सोच राखेर पर्यटन वर्षलाई सार्थक बनाउन खोजेको छ।

पर्यटन क्षेत्र विकास गर्न ५ वटा गाउँहरु सर्वेक्षण




गरेर कुन गाउँलाई पर्यटकीय गाउँको रुपमा लिने हो । कार्यक्रमबाट स्पष्ट रुपमा देखाएको छैन । सदुपयोगको तर्जुमा गर्ने र नीजि क्षेत्रको सहभागिता बढाउने कार्यक्रमले बल पुऱ्याएका छन् । साँखु, चाँगु, नाला, सूर्यविनायक र सुँडाल गा.वि.स.लाई पर्यटकीय गाउँ घोषणा गरेमा उचित हुनेछ ।

## खानेपानीबारे

भक्तपुर जिल्ला देशकै ठूलो जन घनत्व भएको जिल्ला हो । देशका ७५ जिल्ला मध्ये सबभन्दा सानो जिल्ला पनि भक्तपुर नै हो । उपत्यका भित्र अवस्थित भएर पनि जिल्लावासीहरुले अझै पछुटोपनको महसुस गरेका छन् । जिल्लामा पिछडिएका ग्रामीण क्षेत्रका समस्याहरु मात्र होइन शहरी क्षेत्रका र शहरीकरण तर्फ अगाडि बढिरहेको ठाउँहरुमा नयाँ नयाँ समस्याहरु थपिंदै छन् ।

जिल्ला प्रमुख समस्याहरुमा खानेपानी यातायात सिंचाईं कृषि स्वास्थ्य सेवा र नगर विकास हुन् ।

भक्तपुर जिल्ला भरि नै खानेपानीको ज्यादै समस्या रहेको भएता पनि विभिन्न गा.वि.स. का जनताहरुले खानेपानी उपयोग गर्न खोला नाला कुवाबाट ल्याई खानु परेको छ । जिल्लाको निमित्त वर्षै पिच्छे केन्द्रीयबाट विभिन्न गा.वि.स. को निम्ति बजेट छुट्ट्याउँदा खानेपानीको पूर्तिको राम्रो व्यवस्था नहुँदा स्थानीय जनताहरुलाई ज्यादै कठिनाई र समस्या रहेको छ । नगर तर्फ पनि आवश्यक अनुरुप खानेपानीको आपूर्ति हुन सकेको छैन । अझ मध्यपुरको समस्या त छँदैछ ।

मल्लकालिन ढुङ्गेधारा, इनार, कुँवाबाट पानीलाई नगरवासीले खाने गरी आएको छ । जिल्लावासी जनता खानेपानी आपूर्ति गर्न जटिल समस्याको रुपमा देखिरहेका छन् ।

भक्तपुर जिल्लाको सदरमुकामबाट विभिन्न गा.वि.स.हरुमा जाने सडक रहेको छ । उक्त गा.वि.स. बाट अर्को गा.वि.स.मा जानु पर्दा प्रायः कची सडकबाट जानु पर्दछ ।

योजनाबद्ध विकासको थालनी भएको धेरै वर्ष बितिसक्दा पनि देशमा अधिकांश जनता खानेपानी र सरसफाईको सुविधाबाट बंचित हुन बाध्य भैरहेका छन् । देशका अधिकांश पशिमाञ्चल भ्रमण दूर्गम भागमा अझै खानेपानी समेत आपूर्ति गर्न सकेको छैन ।

खानेपानीका प्रदूषित स्रोतहरुको उपयोग गर्नु पर्ने बाध्यता र फोहर मैलाको संकलन र उपयोगको उचित व्यवस्था हुन नसक्नाले जनस्वास्थ्य र वातावरणमा समेत प्रतिकूल असर परिरहेको छ । खेर गईरहेको समय र श्रमलाई उत्पादनमूलक कार्यमा उपयोग गर्न र जन स्वास्थ्यको स्तर वृद्धि र वातावरणीय सरसफाई कायम राख्न खानेपानी तथा सरसफाई कार्यक्रममा परिणात्मक एवं गुणात्मक सुधार गर्नुपर्ने आवश्यकता टड्कारो रुपमा देखा परेको छ ।

## निर्वाचन र सत्ता धांधलीबारे

नेकपा एमाले, नेपाली कांग्रेस र राष्ट्रिय प्रजातन्त्र पार्टीले स-साना पार्टी माथि हेला होचो गर्ने नेमकिपालाई पार्टीको रुपमा नगन्ने, तीनै ठूला पार्टीहरुको भनाई रहेको छ । ती ठूला ठूला पार्टीहरुको विरुद्धमा गलत प्रचार प्रसारको खण्डन गर्दै दिनको ३,४ ठाउँमा गाउँका साथीहरुसँग भेटघाट गर्दै बैठकहरु बस्ने गरेको थिएँ ।

नेमकिपालाई सरकारमा नजाने पार्टी, ३ प्रतिशत नल्याउने पार्टी, जागिर दिन नसकिने पार्टी, भक्तपुरे पार्टी, नेवार पार्टी र ज्यापु पार्टी भनेर अनेक लाञ्छना लगाउँदै झुठा प्रचार गर्न राष्ट्रिय पार्टीहरु एक भै उत्रे । हाम्रो पार्टीले लाञ्छना लगाउँदै आएको तीनै ठूला पार्टीहरु पूंजीवादी पार्टी हुन् । ती तीनै ठूला पार्टीहरुले राष्ट्र र जनताको हितमा काम गरिने छैन भनी हामीले ५,६ वर्ष पहिलेदेखि नै लगाउँदै आएको आरोप यसपालिको स्थानीय निर्वाचन परिणामले देखाएको छ । पश्चिमाञ्चलका हाम्रा साथीहरुलाई एमाले, राप्रपा र सद्भावना पार्टीको संयुक्त सरकारलाई मनपराएको थिएन । हाम्रा साथीहरुलाई चित्त बुझाउन गाह्रो पनि पर्‍यो ।

चुनावी संर्घषमा लागेका हाम्रा साथीहरु भए नभएका झुठा आरोपबाट वाक्क भै क्रान्ति गर्ने पक्षमा हद रहेको पाएँ । के कसो गर्दा क्रान्तिलाई अगाडि बढ्ने सकिने हो, सो कार्य हाम्रो पार्टीले चाँडै थाल्नु पर्‍यो भनी हतारिएका छन् । पश्चिमाञ्चलमा हाम्रो पार्टीको जस्तो संगठित र अनुशासित कार्यकर्ताहरु अरु कुनै ठूला पार्टीहरुको छैन । हाम्रो पार्टीको संगठित र अनुशासित पार्टीदेखि ठूल्ठूला राष्ट्रिय पार्टी भनाउँदाहरुले अनेक झुठा आरोप प्रत्यारोप लगाएका हुन् ।

हाम्रो पार्टीलाई विश्वासघाट गर्ने, भक्त बहादुर रोकाया हाम्रा अनुशासित पार्टी कार्यकर्तादेखि तर्सेर झुठा प्रचारमा लागेको कारणले गाईवस्तु पाल्ने गोठमा लुक्न पुगेका गद्दारलाई बैशाख २९ गते पक्राउ गरेर कालो मोसो दले ।

विश्वासघाती गद्धार भाग्न खोज्दा अनुशासित हाम्रा कार्यकर्ताहरुले छूट दिए । यसरी गद्धार एकातिर सँजाय गरे भन्ने अर्कोतिर हाम्रा सक्रिय कार्यकर्ताहरु एमाले, नेपाली कांग्रेस र राप्रपालाई हटाउन सक्रिय कार्यकर्ताहरु एमाले, नेपाली कांग्रेस र राप्रपालाई हटाउन सक्रिय भै लागे ।

दैलेख जिल्लाका का. हर्ष बहादुर शाहीलाई हटाउन ठुला पार्टीहरु मात्र एक भएको होइन । आफूलाई बडो क्रान्तिकारी ठान्ने मसाले समेत हाम्रा पार्टीका उम्मेवारलाई हटाउन ठूला पार्टीहरु जस्तै मसाल पनि अग्रपंक्तिमा रहेर हाम्रो पार्टीका उम्मेदवार का. हर्ष बहादुर शाहीको विरोधमा उत्रे ।

चमुच गा.वि.स.मा पराजित गर्नको निम्ति मसाल र राष्ट्रिय पार्टीहरु एक भै बबाल मच्चाए । मतदातालाई तितर वितर पार्न डोरी वाँसका किल्लाहरु फालिदिए । मतदाताहरु तित्तर वितर भए । निर्वाचन स्थगित भयो । शाही सुरक्षाकर्मीहरु मूकदर्शक भए ।

का. हर्क बहादुर शाहीलाई जिताउने मतदाताहरु देखि तर्सेर तीन ठूला पार्टीका नेता तथा कार्यकर्ताहरु तर्सेर बबाल उठायो । स्थगित गर्ने र पुनः मतदान गर्ने कार्य बारम्बार जारी रहयो । केही ठूला पार्टीहरुको केही सीप नलागेपछि रातको ७ बजे सम्म मतदान कार्य शुरु भयो ।

मतदानपछि सिलबन्दी गरिसकेको एक बाकस लुटेर लगे । प्रहरीहरुले ठूला ठूला पार्टीहरुलाई सहयोग पुर्‍याउन मुकदर्शक भए । त्यसपछि तीन ठूला पार्टी र मसालको विरुद्धमा नारा गरे ।

शोषणमा आधारित व्यवस्थामा पूंजीवादी सरकारले देश जनताको स्थितिमा मौलिक परिवर्तन ल्याउन सक्दैन । यसकारण शाही सम्बोधनबाट खासै अपेक्षा राख्न सकिन्न ।

कहिले पूरा नहुने नीति तथा कार्यक्रम हामीले धेरै वर्षदेखि सुन्दै आएको हुँदा शाही सम्बोधनबाट कुनै उत्साह दिन सकेन । यो केवल औपचारिता निर्वाह गर्ने परम्परा मात्र सावित हुनेछ ।

वर्तमान संयुक्त सरकारलाई एउटा राष्ट्रिय कार्यक्रम निर्माण गर्न सजिलो होस् भनी २२ बुँदे शर्तहरु राखी हाम्रो पार्टीले आलोचनात्मक समर्थन गरेको थियो ।

तर आज सम्म ती शर्तहरु पूरा नभएको व्यहोरा जानकारी गराउनु पर्दा हामीलाई दुःख लागेको छ । हामी आशा एवं विश्वास गर्छौं, हामीले राखेका बुँदाहरुमा यथासिघ्र सकारात्मक पाइला चाल्नु हुने छ भनी प्रधानमन्त्रीलाई एकचोटी फेरि सम्झना दिलाउन चाहन्छौं ।

स्थानीय निर्वाचनमा नेपाल मजदूर किसान पार्टी लगायत अन्य धेरै दलहरुलाई दलगत चुनाव चिन्ह दिलाइएन । नेकपा एमाले, नेपाली कांग्रेस राष्ट्रिय प्रजातन्त्र पार्टी र नेपाल सद्भावना पार्टीले मात्र निर्वाचन चिन्ह पाउनु निश्चय नै धाँधलीको शुरुआत थियो । नेपाल

अधिराज्यको संविधान २०४७ बहुदलिय प्रजातन्त्रलाई सुदृढ गर्ने प्रस्तावना विपरीत हो ।

दैलेखमा स्थानीय निर्वाचन अधिकृतले नेपाल मजदूर किसान पार्टीको लागि समयमा पर्याप्त मनोनयन पत्र र राजनैतिक दलको औपचारिक पत्र उपलव्ध गराएन भन्ने वर्तमान संयुक्त सरकारको प्रमुख घटक नेकपा एमालेले नेमकिपाका उम्मेदवारलाई सानो पार्टी तीन प्रतिशत नआएको पार्टी सरकारमा नजाने पार्टी भविष्य नभएको पार्टी जस्ता गैर राजनैतिक कुराहरु गरी हेला होचो गर्ने काम गऱ्यो ।

त्यस्तै त्यस जिल्लामा नेमकिपाका उम्मेदवार हरुलाई रोक्न नेमकिपा र एमाले एउटै हो, नेमकिपाको चुनाव चिन्ह छैन । त्यसैले सूर्य चिन्ह लिएर उठ्नु भनी एमालेले नेमकिपाको उम्मेदवारी मनोनयनपत्र दर्ता गर्न जानेहरुलाई बीच बाटोमै जबरजस्ती रोकेर मनोनयन पत्र नै दर्ता गर्न दिएन । दर्ता गरेकाहरुलाई डर त्रास देखाई मनोनयन पत्र फिर्ता लिन लगाउने काम गऱ्यो ।

मतदान अधिकृतहरुले एमालेको इशारामा उम्मेदवारहरुलाई एक लहरमा निर्वाचन चिन्ह रोज्न दिएन । यसकारण वर्तमान सरकारले निर्वाचन निष्पक्ष र धाँधली रहित सम्पन्न भयो भन्नु झुठ र असत्य हो ।

जुम्लाका विभिन्न गा.वि.स.हरुमा पनि एमालेले यस्तै व्यापक धाधली गरेको थियो ।

काठमाडौंको टोखा सरस्वती, टोखा चण्डेश्वरीमा मतगणनामा गा.वि.स. अध्यक्षको उम्मेदवारहरुलाई समेत प्रहरीले पस्न दिइएन । मतगणनामा बसेका नेमकिपाका प्रतिनिधिलाई निद्रा लाग्ने औषधी ख्वाएर निर्वाचन परिणाम एमालेको पक्षमा गऱ्यो । काठमाण्डौंको महानगरपालिका वडा नं ५ हाडीगाउँमा पनि मतपत्रको नमूना र मतपत्र फेरेर मतदाताहरुलाई झुक्याउने र एमालेलाई निर्वाचन आयोगले सघाउने काम गऱ्यो ।

भक्तपुरको छालिङ्गमा शान्तिपूर्ण निर्वाचन भैरहेको बेला नेमकिपा जित्ने पक्का भएपछि ५ बवेर १० मिनेट गैसकेपछि गोली चलाई छालिङ्ग गा.वि.स.को मतदान स्थगित गऱ्यो ।

भक्तपुरकै ताथली गा.वि.स.मा एमालेका अर्जुन थापाको नेतृत्वमा ६०० मतपत्र मतदान अधिकृतसँग लुट्ने काम भयो । अहिलेसम्म त्यस अपराधीलाई पक्राउ गरिएको छैन ।

## सरकारको नीति कार्यक्रमबारे

सरकारको नीति र कार्यक्रममा नीजि क्षेत्रलाई निकै जोड दिइएको छ। यसको अर्थ देश र जनताको हित होइन, मुठ्ठीभर पूंजीपतिहरुको हितलाई प्राथमिक दिएको छ।

तर शाही सम्बोधनमा मूल्यमा स्थीरता राख्ने र मूल्यवृद्धि गर्ने काम यो सरकारले गरेको छ।

उपभोक्ताहरु मूल्य वृद्धिबाट मात्र होइन, गुणस्तरको वस्तु नपाएर पनि पीडित छन् । दोहोरो मारमा परेका उपभोक्ताहरुलाई राहत दिन हाम्रो पार्टीले राखेको उपभोक्ता विधेयकलाई यो सरकारले पनि छलफलमा ल्याउने कुनै संकेत छैन।

यसबाट यो सरकार जनताप्रति कति सम्वेदनशील छ भन्ने कुरा बुझ्न सजिलो छैन।

सरकार फेरिनासाथ शिक्षा नीतिमा हेरफेर ल्याउने परम्परालाई यो सरकारले पनि पछ्याइरहेको छ । शिक्षा क्षेत्रमा अराजकता र अन्योल स्वयं सरकारले ल्याइरहेबाट सबैलाई चिन्तित तुल्याउनु स्वाभाविक छ।

भर्खरै सम्पन्न स्थानीय निकाय निर्वाचनमा सत्ताधारी एमालेले प्रहरी प्रशासनलाई राजनीतिकरण गरेको लगत्तै प्रशासन यन्त्रलाई राजनीतिबाट पर राखेर निश्पक्ष राख्ने शाही सम्बोधन खाली बकपत्र मात्रै हो ।

देश र जनताको हित भन्दा आफ्नो पार्टी स्वार्थलाई प्राथमिकता दिने संस्कार नै प्रशासन यन्त्र बिटुलिनुको मूल कारण हो । यस क्रममा संसारलाई २१ औं शताब्दीको आवश्यकता अनुरुप बनाउने गुरु योजना पनि केवल सत्तापक्षको 'हात्ती आयो हात्ती आयो फुस्सा' हो।

शाही सम्बोधन असामाजिक र आतंकवादी गतिविधि कडाईका साथ समाधान गर्ने भनी माओवादी जनयुद्धलाई इंगित गरिएको छ।

सिंहदरबारलाई नै देश र आफ्नो परिवारलाई नै जनता सम्झने सोच र व्यवहारलाई सरकारले नछोड्ने हो भन्ने भोका जनता पूर्वबाट उठ्ने छन् । नांगा जनता

उत्तरबाट उठ्नेछन् । पीडित जनता दक्षिणबाट उठ्ने छन् ।

त्यसबेला शोषण, उत्पीडन, अन्याय र अत्याचारको समाधान सरकारले होइन, स्वयं जनताले र क्रान्तिले आफ्नै तरिकाले गर्नेछन् । यस्तो सम्भावनालाई पनि नबिर्सन आग्रह गर्दछु ।

४-५ जिल्लामा अन्याय र दमन विरुद्ध उठेका जनतालाई राजनैतिक समाधान नगरी बलले दबायो भन्ने भोली ४०-५० जिल्लामा उठ्नेछन् । जनतालाई दबाउन सकिंदैन । दैलेख जिल्लाको लकान्द्रा, रावलकोट, लालीकाँडा, चमुण्डा, पादुका, वडलम्जी कुस्तपानी, जम्लुकाँध मेहेल तोली कामिकाँध, कालभैरव आदि गा.वि.स.हरुको निर्वाचन बदर गरी पुनः मतदान गराउनु पर्छ भन्ने हाम्रो माग हो ।

कालीकोट जिल्लाको विभिन्न गा.वि.स.मा पनि नेमकिपाका उम्मेदवारहरुलाई हतोत्साही बनाउन एमालेका मन्त्रीले एक लहरमा चुनाव चिन्ह नदिन निर्वाचन अधिकृत र मतदान अधिकृतहरुलाई दबाब दिएका थिए । एमालेकै मन्त्रीले हेलिकोप्टर प्रयोग गरी निर्वाचन आचार संहिताको ठाडो उल्लंघन गरे ।

त्यस जिल्लाको दम्चुली भर्ता, थिर्पु, कोटवाडा, लालु चुपिया आदि गा.वि.स.हरुमा निस्पक्ष चुनाव नभएको हुँदा ती गा.वि.स.हरुको निर्वाचन वदर गरी पुनः मतदान गराइनु पर्दछ ।

## श्रम मन्त्रालय सम्बन्धमा

संसदीय व्यवस्था र श्रम मन्त्रालयको विनियोजित शीर्षक माथिको छलफलमा भाग लिन रोस्टममा उभिएको छु ।

सर्वप्रथम म श्रम मन्त्रालय सम्बन्धी आफ्ना केही धारणाहरु राख्न गईरहेको छ ।

अनुगमनका लागि १० लाख रुपैयाँ छुट्ट्याएको छ । बजार नियन्त्रण गर्न सकेको छैन । सरकारले मूल्य निर्धारण गर्छ, त्यस मूल्य अनुसार बजार मूल्य हुँदैन । अनुगमन टोलीबाट बजार मूल्यलाई नियन्त्रण गर्न सकेको छैन ।

मूल्य अनुगमनको निम्ति १० लाख छुट्ट्याएको छ । तर स्थिति यस्तै अर्थात् मूल्य वृद्धि गराउँदै गर्ने हो भन्ने त्यो रकमको औचित्यता के हो ?

नेपाल आयल निगम, नेपाल कोल लिमिटेड, साल्ट ट्रेडिङ्ग कर्पोरेशन, नेशनल ट्रेडिङ्ग लिमिटेड आदि निगमहरुको संचालक समितिमा पार्टी वा मन्त्रीका मानिसहरु मात्रै राख्ने चलन छ । त्यसको ठाउँमा ती संचालक समितिहरुमा विभिन्न पार्टी र क्षेत्रका प्रतिनिधिहरुमा पनि राख्नु आवश्यक छ ।

जिल्लामा जनप्रतिनिधिहरु समेत राखेर अनुगमन टोलीहरु बनाउनु पर्दछ ।

## सरकारी आतंक सम्बन्धमा

नेपाल अधिराज्यको संविधान २०४७ को भाग १२ मा स्वतन्त्रताको हक अन्तर्गत कानून बमोजिम बाहेक कुनै पनि व्यक्तिको वैयक्तिक स्वतन्त्रताको अपहरण हुने छैन, विचार र अभिव्यक्तिको स्वतन्त्रता र शान्तिपूर्वक भेला हुने स्वतन्त्रता हुने उल्लेख भएको हामी सबैलाई जानकारी छ ।

तर आतङ्ककारी तथा विध्वंसात्मक अपराध नियन्त्रण र सजायँ विधेयक फिर्ता लिने, सांसद गाडी सुविधाको नाउँमा देशको कराडौंको राजस्व दुरुपयोग र राजनैतिक भ्रष्टाचार राक्ने, मेचीदेखि महाकालीसम्मको सीमा अतिक्रमण रोकी कालापानीबाट विदेशी सेना हटाउने, महंगी घटाउने र महाकाली नदी जस्तै राष्ट्रिय हित विपरीत पश्चिमी सेती र कर्णाली नदी तथा जलस्रोत मन्त्रालयलाई तिरबाट घेरा दिएर विदेशको हातमा सुम्पने आदि माग राखी नेकपा मसाल, नेमकिपा, नेकपा एकता केन्द्र, नेकपा मार्क्सवादी, नेकपा संयुक्त, नेसापा मालेमा, नेपाल कम्युनिष्ट लीग, राजमो नेपाल र संयुक्त राष्ट्रिय जन-आन्दोलन संयोजन समितिले संयुक्त रुपमा चलाएको शान्तिपूर्ण आन्दोलनमा एमाले, राप्रपा र सद्भावना पार्टीको संयुक्त सरकारको एमालेका गृहमन्त्रीले प्रदशर्नकारीहरुमाथि निर्मम लाठी प्रहार गरी, सयौँलाई घाइते बनाउने, हजारौँलाई पक्राउ गरी यातना दिने, शान्तिपूर्ण आन्दोलनको आह्वानमा गएकाहरुलाई माइक र मोटर सहित थुन्ने, पोष्टर टाँस्नेलाई गिरफ्तार गर्ने जस्ता ०४६ सालको जन आन्दोलनबाट प्राप्त अधिकार र संविधान प्रदत्त नागरिकको मौलिक हक समेत हनन्

गरियो ।

३० भदौका दिन काठमाडौँ भोटाहिटीबाट शुरु हुन लागेको महिलाहरुको जुलुसलाई पुरुष प्रहरी प्रयोग गरी रोक्ने, अभद्र व्यवहार गराउने, कुटपिट र चुल्ठो तानेर पछार्ने जस्ता दूर्व्यवहार पनि यो सरकारको एमाले गृहमन्त्रीबाट भयो ।



त्यस्तै भदौ ३१ गतेको मसाल जुलुसमा भोटाहिटीनेर निर्मम लाठी प्रहार गरी म समेत कयौँलाई घाइते बनाएर, टाउको फेरियो र हात खुट्टा भाच्यो ।

साउन १ गते नेपाल बन्दको दिन बिहानैदेखि शान्तिपूर्ण जुलुस समेत निस्कन नदिने काम पनि यो सरकारको गृहमन्त्रीबाट भयो। साथै प्रदर्शनकारीहरु गिरफ्तार भए ।

नेपाल मजदुर किसान पार्टीले यो संयुक्त सरकारलाई २२ बुँदे शर्तको आधारमा आलोचनात्मक समर्थन गरेको हो । महाकाली सन्धीको विरोधमा भएको उपत्यका बन्दको सिलसिलामा निस्केको शान्तिपूर्ण जुलुसमाथि यस अघिको सरकारले माइतीघर र बबरमहलको बीचमा चारैतिरबाट घेरा दिएर निर्मम लाठी प्रहार गरी दोषीलाई कारवाही गर्ने शर्त पनि यो सरकारले राखेका थियौँ । तर यो सरकारले हाम्रा एउटा शर्त पनि पूरा गर्ने प्रयाससम्म गरेन । यसप्रकार यो सरकारबाट हाम्रा कुनै पनि शर्तहरु पूरा हुने नदेखिएको हुँदा आजबाट नेपाल मजदुर किसान पार्टीले एमाले, राप्रपा र नेपाल सद्भावना पार्टीको यो संयुक्त सरकारलाई दिएको सशर्त तथा आलोचनात्मक समर्थन फिर्ता लिने हाम्रो पार्टीको निर्णय म यहाँ सुनाउन चाहन्छु ।

## भक्तपुर जिल्ला परिषदबारे

१. भक्तपुर जिल्ला विकास समितिको छैठौँ जिल्ला परिषद्को उद्घाटनको अवसरमा सर्वप्रथम म परिषद्को पूर्ण सफलताको कामना गर्दछु ।

२. देशको राजधानी नजिक रहेको भक्तपुर जिल्लालाई पर्यटन उद्योगको एक गन्तव्यस्थलको रुपमा विकास गर्नेतर्फ परिषद्का साथीहरु र जिल्ला विकास समितिले निरन्तर र इमान्दारीपूर्वक ध्यान दिनुपर्ने आवश्यक देखिन्छ । यस जिल्लामा ठूला उद्योगहरु स्थापना गर्ने संभावना न्यून रहेको र त्यस्ता उद्योगले वातावरण प्रदूषण गर्ने संभावना पनि धेरै छ । त्यसैले यहाँको परम्परागत सीप र कौशललाई संरक्षण र विकास गरी पर्यटन उद्योगमा आधारित र अन्य घरेलु उद्योगहरुलाई विकास गर्न सके वातावरण प्रदूषणबाट निकै कम प्रभावित भक्तपुरलाई पर्यटकहरुको गन्तव्य स्थल बनाउन सकिने प्रवल संभावना छ ।

३. साथै नेपाल अधिराज्यको नक्सामा सबभन्दा सानो जिल्ला भएर पनि यस जिल्लाले देशको पर्यटन विकासमा महत्वपूर्ण योगदान दिएको छ । हाम्रा पूर्खाले सिर्जेको अद्वितीय पुरातात्विक सम्पदा नै आज हाम्रो पर्यटन उद्योगको आधार भएको छ । यस आधारको समुचित संरक्षण गर्नु केन्द्रीय सरकार स्थानीय सरकार लगायत सम्पूर्ण सम्पदाप्रेमीहरुको कर्तव्य हो । यस कर्तव्यको निर्वाह गर्ने तर्फ यस जिल्ला परिषद्को यथेष्ट ध्यान पुग्ने आशा गरेको छु। यस कार्यमा केन्द्रीय सरकारबाट राष्ट्र विकासको सिलसिलाको रुपमा सहयोग दिने र ध्यान पुऱ्याउने पनि आशा गर्दछु ।

४. भक्तपुर जिल्लाका विभिन्न समस्याहरु मध्ये

खानेपानीको समस्याले पनि निकै जटिल छ । स-साना खानेपानी योजना बनाउने नाममा वितरण भएको रकमबाट खासै उपलब्धी देखिएको छैन, त्यो समाधानको दीर्घकालीन उपाय पनि होइन । त्यसैले खानेपानीको एउटा वृहत् योजना तर्जुमा र कार्यान्वयन तर्फ पनि हामीले ध्यान दिनुपर्ने आवश्यक भइसकेको छ।

## बजेटमाथि प्रतिक्रिया

१. मजदूर वर्गलाई ज्याला बढाई दिने काम गर्ने वातावरणलाई स्वस्थ्यकर बनाउने मजदूर हितका कार्यहरु गर्नुपर्ने थियो।

२. देशको आर्थिक विकासमा मजदूर र किसानहरुको ठूलो हात हुन्छ। तिनीहरुको जीवन सुधारको कुनै उल्लेख सम्म नहुनु दुःखदायी कुरा हो । यसकारण अर्थ मन्त्रीज्यूले मजदूरहरुको हितको निम्ति थप कार्यक्रमहरु अर्थात् आवास, महंगी, भत्ता, केटाकेटीहरको लालनपालन तथा पढाई बिमारी आदि बारे छुट्टै बजेट आउनु पर्दछ। तर एमालेको संयुक्त सरकारको बजेटमा मजदूर वर्गको हितको बजेट नआउनु एमालेको वर्गिय चरित्र प्रस्ट भएको छ।

३. जनतालाई संगठित गर्नुपर्ने कुरा हामीमा निर्भर छ। जहाँसम्म देशका प्रतिक्रियावादीहरुको सवाल छ, तिनीहरुलाई उखेलेर प्याँक्न जनतालाई संगठित गर्नुपर्ने कुरा हामीमा नै निर्भर छ।

४. सबै प्रतिक्रियावादीहरु उस्तै हुन्छन् । तपाईंले नहिर्काउञ्जेल उनीहरु खस्दैन । यो आँगन बढार्नु जस्तै हो। यो त स्वाभाविक छ, जहाँ कुचो पुग्दैन, त्यहाँको कसिङ्गर आफै बिलाउँदैन।

५. क्रान्ति भनेको भोज भत्तेर होइन, न लेख लेख्नु हो, न चित्रकारी गर्नु हो, न त कारचोपी भर्नु हो, यो त्यत्ति परिस्कृत हुँदैन। त्यो त्यति सुविस्ताको र नम्र हुन्दैन। त्यो त्यति शान्त, दयालु शिष्ट, संयमित र उदार हुँदैन।

क्रान्ति भनेको विद्रोह हो । हिंसाद्धारा गरिने, यस्तो क्रिया हो, जसबाट उउटा वर्गले अर्को वर्गलाई पल्टाई पल्टाई दिन्छ।

६. मानव जातिको इतिहास आवश्यताको राज्यदेखि स्वतन्त्रताको राज्यसम्मको निरन्तर विकास हो। यो कम अनन्त छ। वर्गहरु भएको कुनै पनि समाजमा वर्ग संघर्षको कहिल्यै अन्त्य हुने छैन।

वर्गविहीन समाजमा, नौला र पुराना सत्य र असत्यका बीचको संघर्षको कहिल्यै अन्त्य हुने छैन।

उत्पादनको लागि संघर्ष तथा वैज्ञानिक प्रयोगको क्षेत्रमा मावन जातिले निरन्तर प्रगति गर्दै जान्छ र प्रकृति निरन्तर रुपले फेरिँदै जान्छ।

देश र जनतालाई आशा र उत्साह दिने काम सरकारको हो। विकास कार्यलाई उत्कृष्ट ढंगले सञ्चालन गरी उदाहरणीय बन्नुपर्ने सरकारी क्षेत्रबाटै निराशा व्यक्त गरिन्छ भने अब जनताले कस्को मुख ताक्ने ?

बजेट वक्तव्यमा चालु आर्थिक वर्षमा सरकारी क्षेत्रबाट गरिएको विकास खर्च निराशाजनक रहेको उल्लेख छ। विकासको आश्वासन दिएर निराश पार्ने काम सरकारको कस्तो योग्यता र क्षमता हो ?

सरकारी स्वामित्वमा रहेका संस्थानहरु घाटामा जानु, त्यहाँ विसंगति हुनु र व्यवस्थित रुपमा चल्नुको कारण के हो ? सरकारी स्वामित्वमा चल्नेको कारण के हो ? सरकारी स्वामित्वमा चल्ने संस्थानहरुमा योग्य कर्मचारी नभएर हो वा नीति नियम नमिलेर हो ? अथवा घाटा र विसंगति नियोजित हो ? संस्थानहरुलाई सत्तासीन पार्टीहरुले भर्ति केन्द्र बनाएकै कारण त होइन ?

देशको राष्ट्रिय आयको मुख्य अंश कृषिबाट प्राप्त भएको कुरा वर्तमान र विगत सरकारहरुले पनि भाषण र वक्तव्यमा स्वीकारेको छ । कृषि क्षेत्रको विकासको लागि हरेक बजेटमा रकम पनि छुट्ट्याइनेछ। परन्तु कृषि क्षेत्रको सन्तोषजनक विकास दशकौं बितिसक्दा पनि भएको छैन । रासयनिक मलको कारखाना खोल्ने माग र सुझावलाई वेवास्ता गर्दै कृषि मन्त्री र सम्बन्धित कर्मचारी भ्रष्टाचारको आरोपमा अदालत धाउनु कहाँ सम्मको बुद्धिमानी हो।

नवौं पञ्चवर्षीय योजनाले गरीवी रेखामुनि रहेका जनताको गरिवी निवारण गर्ने उद्देश्य राखेको छ। समाजवादी देशका १-२ वटा पञ्चवर्षीय योजनाले गरिवी

निवारण गरेको प्रमाण इतिहास साक्षी छ तर हाम्रो देशको ८ वटा पञ्चवर्षीय योजना सम्पन्न भैसकेपछि गरीवी निवारण आयोग गठन गर्ने सुरसारमा छौँ । प्रस्तुत बजेटले एउटा आयोगसम्म गठन गरी आफ्नो साथर्कता सावित गर्ने जमर्को गर्ने कुरामा कुनै शंका छैन । त्यस आयोगले जनताको गरीवी निवारण गरोस्, नगरोस् परन्तु आयोगमा राखिने केही कायकर्ताको गरीवी निश्चय पनि निवारण हुनेछ । म यो पनि अनुमान गरिरहेको छु कि आयोगले दिने प्रतिवेदन विगतका आयोग, अध्ययन टोली आदिले दिएका प्रतिवेदन झैँ मन्त्रालयको रद्दीको टोकरीको शोभा हुनेछ ।

यस्तो अनुमान गर्नुको कारण गरीवी निवारणको लागि छुट्ट्याइएको रकम हो । गरीवी निवारणको लागि बजेटमा रू. ४ करोड विनियोजन गरेको छ । रू. ४ करोडले गरिवी निवारण गर्ने अर्थमन्त्रीको बौद्धिक क्षमतालाई कसरी सराहना गर्ने हो, त्यो थाहा पाउन सकिएन । मलाई लाग्छ त्यो ४ करोड रुपैयाँ नेपालीको गरिवी निवारण गर्न होइन । आयोगमा बस्ने सत्तासीन पार्टीका कार्यकर्ताहरुको गरीवी निवारणको लागि मात्र हो । अन्यथा ४५ प्रतिशत अर्थात् करबि ९० लाख गरवी रेखामुनिका जनतालाई रू. ४ करोड मात्र छुट्ट्याउने थिएन । अझ २६५ जना सांसदहरुलाई पजेरो सुविधा दिन साढे ३३ करोड राजस्व घाटा व्यहोर्ने सरकारले ९० लाख जनताको लागि रू. ४ करोड विनीयोजन गर्ने थिएन । बजेट वक्तव्य अनुसार नवौँ योजनाको अन्त्यसम्म अर्थात् ५ वर्ष अर्थात् २०५९ साल सम्ममा गरीवी रेखा मुनि रहेका ३ लाख जनताको गरीवी निवारण हुनेछ । आगामी ५ वर्षमा गरीवी रेखामुनिको संख्या नबढेमा गरीवी निवारणको लागि करीब २०, ३० करोड खर्च गर्ने देखिन्छ भने हामी सांसदहरुको लागि मात्र कति खर्च गर्छ हिसाब गर्ने जिम्मा अर्थमन्त्रीज्यूलाई नै दिन्छु ।

सरकारमा बस्नेलाई लाज लाग्दैन भन्दैमा हामी जनप्रतिनीधिहरुलाई जनता माझ जान अप्ठ्यारो पार्ने काम गर्नु भएन । लुगा लगाएको छु भनेर नैतिकता, इमान्दारी र कर्तव्यको क्षेत्रमा दिगम्बर हुनु भएन । अर्थमन्त्रीज्यू निकै बुद्धिमान हुनुहुन्छ । त्यसैले मेरो इशारालाई बुझ्नु हुनेछ । तर लाटो एक बल्ड्याङ खान्छ, बाठो तीन बल्ड्याङ खान्छ भन्ने कुरा स्मरण गर्न पनि आग्रह गर्छु ।

माओवादी गतिविधिबाट प्रभावित जिल्लाहरुमा रू. ४ करोड विनियोजन गरेर अर्थमन्त्रीज्यूले त्यहाँका गरीब, अभाव, दमन र उत्पीडित जनतालाई फकाउन खोज्नु भएको छ । बन्दूक समातेर ज्यान हत्केलामा राख्ने कसैको रहर हुन सक्दैन । बाध्यताबाट उत्पन्न स्थितिलाई नियन्त्रण गर्न यो बजेट पूर्णतया असफल देखिन्छ । ती क्षेत्रमा सरकारी आतंकबाट बनेको घाउ रू. ४ करोडको मल्हमले कसरी निको हुन्छ ? त्यसैले यो बजेट प्रतिवद्धताबिहीन बजेट हो ।

महेन्द्र राजमार्गको कुरा यो बजेटमा पनि आएको छ । अपराध घटेमा प्रहरीको जागिर जाला भनेर चिन्तन लिन्छन् रे । महेन्द्र राजमार्ग पनि त्यस्तै हो । त्यो सम्पन्न भएपछि त्यसबाट हुने आम्दानीले झनै डर यातायात मन्त्रालयलाई छ । त्यसैले त्यो कहिल्यै पूरा हुँदैन । महेन्द्र राजमार्ग भ्रष्टहरुको मागी खाने भाँडो हो ।

शाही सम्बोधनमा सन् २००० सम्ममा खानेपानी आपूर्ति गर्ने उल्लेख छ, देशकै राजधानीमा खानेपानीको हाहाकार छ तर खानेपानीको कुनै योजनालाई बजेटले प्राथमिकता दिएको देखिएन । ठूल्ठूलो आश्वासन दिने तर पूरा नगर्ने यो कुसंस्कारबाट सत्तासीन पार्टीहरु कहिले मुक्त हुने हो थाहा छैन ।

सरकारी स्वामित्वमा रहुञ्जेल घाटामा जाने उद्योगहरुको सूचीमा कागज उद्योग पनि रहेको छ । नीजि कारण भए पछि प्रगति गरेको जानकारी प्रकाशमा आइसकेको छ । यसै क्रममा न्यूज प्रिन्टमा मूल्य वृद्धि नगर्न आग्रह गर्दा गर्दै पनि व्यवसायिक पत्रकारितालाई संस्थागत विकास गर्न भाषण गरेर नथाक्ने यो सरकारले थप करको व्यवस्था गरेको छ । यसबाट पत्रिकाले मूल्य वृद्धि गर्ने छ । पाठक घट्ने छ र सुसूचित हुने संवैधानिक अधिकारबाट बञ्चित हुनुपर्ने छ । त्यसैले न्यूजप्रिन्टमा लगाइएको कर हटाउनुपर्दछ ।

बजेटले कर्मचारीहरुलाई राष्ट्रसेवकको संज्ञा दिएको छ, ४२.८ प्रतिशतसम्म तलब वृद्धिको घोषणा पनि गरेको छ । तर वास्तवमा तलब वृद्धि भने सरदर १३ प्रतिशत मात्र भएको छ । १३ प्रतिशत तलब वृद्धि गर्न ४२.८ को ठूलो संख्या किन ? यो इमान्दारी अभिव्यक्ति

होइन छलछाम र बेइमानी हो ।

विगतको बजेटले दिएको महंगीलाई भरथेग गर्न दिइएको महंगी भत्तालाई यस सरकारले समायोजन गरेर ४२.८ प्रतिशत तलब बढाएको जस पाउन खोज्नु काम गर्ने हनुमान जस पाउने ढेडुको चाला जस्तो छ। बजेट र अगावै ५०-६० प्रतिशत महंगी बढाइ १३ प्रतिशत तलब बढाएर ४२ को धाक लगाउनु कर्मचारीहरुलाई झुक्याउनु हो। सरकारबाट झुक्याइएका कर्मचारीबाट राम्रो कामको आशा गर्नु सिस्नु रोपेर तुलसीको आशा गरे जस्तै हो।

धेरै प्रतिशत तलब बढाएको जस पाउन खोजने अर्थमन्त्रीको लोभले सर्वसाधारण जनताले ठूलो मूल्य चुकाउनु पर्ने देखिन्छ । ५-७ प्रतिशत तलब वृद्धि हुँदा २०-३० प्रतिशत मूल्य बढ्ने परम्परा हेर्दा यसपटक कुन हिसाबले महंगी बढ्छ ? जहाँसम्म मुल्य नियन्त्रणको सरकारी कर्तव्यको कुरा छ, त्यो आजसम्मका सरकारको क्षमता भन्दा बाहिरको कुरा हो।

## भक्तपुर नगर परिषद्बारे

पूर्खाले सिर्जेको सम्पत्ति हाम्रो कला र संस्कृतिको नारालाई सार्थक दिन अगाडि बढेको नगरपालिकाको प्रथम नगर परिषद्को उद्घाटन समारोहमा मलाई दुइ शब्द बोल्ने मौका दिनु भएकोमा सर्वप्रथम आयोजक समितिलाई धन्यवाद दिन चाहन्छु।

भक्तपुर नगर प्राचीन नगर भैकन पनि यसको प्राचीनतालाई अझ राम्रो दिन सकेको छैन। नगरपालिकाको प्राचीन शहरको रुपमा विकास गरी विदेशी पर्यटकहरुलाई लोभ्याउने खालको यहाँको कला संस्कृतिको झल्काई दिएको खण्डमा अझ यसले कला र संस्कृति व्यापकतालाई अगाडि बढाउँदै लाने छ।

कला र सांस्कृतिक नगर घोषणा गराउन नेपाल मजदूर किसान पार्टीले स्थानीय निकास ऐनको संशोधनमा प्रस्ताव राखेको थिए । निकास तथा संचार समितिमा राखेको उक्त प्रस्तावलाई नबुझि लिंदा सांस्कृतिक नगर घोषणा गराउन नगरपालिका स्वयं सक्षम हुनु पर्ने कुरा अगाडि राखी त्यस प्रस्तावलाई पारित गराउन सकेन।

सांस्कृतिक नगर बनाउन छुट्टै किसिमको ऐन कानूनको व्यवस्था, कला र संस्कृतिको पहिचान र त्यसको संरक्षण ऐन बन्दोवस्त हुने भएको हुँदा पुर्खाले सिर्जेको सम्पत्तिलाई नगरवासीहरुले आफ्नो नगर भन्ने भावना जगाउन सकेको खण्डमा यस नगर भित्रको सरसफाई अगाडि बढाउन सकिने छ। नगरको सरसफाई भएको खण्डमा नगरवासीहरुको स्वास्थ्य स्वस्थ हुने कुरा स्वाभाविक छ । नगरका नगरवासीहरुको साझा संस्थालाई नगरपालिका पदाधिकारीहरुले आजसम्म नगर र नगरवासीको राय सुझावलाई अँगाल्दै अगाडि जान सकोस् र यस प्रथम नगर परिषद्को सफलताको कामना गर्दै बिदा हुन्छु, नमस्कार।

## भाषा, साहित्य र संस्कृतिबारे

१. भाषा सबै साझा हो। विभिन्न जात जातिले बोल्ने भाषा पनि राष्ट्रिय भाषा हुन्छ। नेपाली भाषालाई मात्र विशेषाधिकार प्रयोग गरेर विकास कार्यमा षड्यन्त्र गरिएको छ।

२. मानव सभ्यत्ता र संस्कृतिको विकासमा सबै भाषा भाषीहरुको योगदान छ। सबै देशका कला संस्कृति, मजदूर र किसान वर्गको आ-आफ्नो योगदान भएको हुँदा संकुचित विचार लिनु हुँदैन।

*- कविवर पूर्ण वैद्य*

३. कुहिरै कुहिरो<br>फेरि कुहिरोले ढाकेको मेरो बिहान<br>आफ्नै देश पोलेर खाने केही मानिसको समूह<br>आ-आफ्नै राम्रो अनुहार भनेर हिँड्नेहरु हर व्यवहारमा<br>आफैं अनुहार पग्लिंदै गैरहेको छ।

*- कवि अगिंमथः*

४. सुखदायीक जीवनको निम्ति मानिस कति दिन बाँच्ने हो। आँखाले हेर्नु मन पराएर हेर्नु हो। - सुन्दर मधिकर्मी

५. मेरो जिन्दगीलाई तिमीले कहाँ कहाँ लाने हो म आफैलाई थाहा छैन, पशुतुल्य बनाई कहाँ लाने हो। मैले कहिले मुक्ति पाउने हो मलाई थाहा छैन।

*- कविताबारे नन्द किशोर प्रधानको भनाई*

६. कथा वस्तुबारे - लाभ रत्न तुलाधर - लाखौंलाख मानिसहरुले भोज खान्छन्, सितै भन्ने कसैले होइन।

७. मेरो आफ्नो भाषा बारे

आफ्नो भाषा छोडी अरु भाषा बोल्ने पशुतुल्य हुन्छ।

८. प्रतिसरा सायमि - दुइनी तताया आज र भोलि
दरिद्रता पन्छाउन खोज्दा पनि पुनः बाँधिएका
हामी, च्यातिएको पटुका जस्तै आफ्नो भविष्यलाई
पोको पारेर अगाडि मुटु राखेर दुइनी तता आउँदै हुनुहुन्छ।

९. आसनारायणको रुपमा - नःलि वज्राचार्य
अर्काको बनेपछि आफ्नै बनाउनु पर्नेछ र अगाडि र पछाडि बगैंचा र तरकारी बनाउने सपना,

१०. सबै मानिसहरुले सपनालाई देखेको छ । सपना फरक हुन्छ। पूरा होस् अधुरो कसैलाई चासो छैन। सपना देख्नु विडम्वना हो। निबन्ध, रेवतीरमणानन्द

११. रचनात्मक कार्यको साथै भाषिक अधिकार फिर्ता लिऔं।

१२. जितेन्द्र ध्वजुको सपना नामको कविता भावहीन भएर आजभोलि वागमतीलाई हेर्दै रहयो । खोला जस्तै बगेको मेरो मुटु।
पित्याया कुत्या - भोकाएको धुँवा - विमल ताम्राकार

१३. मदन श्रेष्ठ - दुइ गजल
विष पिई राखेपछि छट्पट् हुँदै औषधि भाडा खोज्नै जाने।

मार्नु पनि छैन । मर्नु पनि छैन । बाँच्नु होइन, डरले बाँच्नु छैन । कसैलाई मारेर बचाउने नसकिने भए पनि अरुलाई मारेर बाँच्ने इच्छा छैन।

## सरकारी योजनाबारे

हाम्रो जस्तो थोरै पूँजी भएको देशमा ग्रामीण सडक कसरी निर्माण भन्ने समस्याको रुपमा देखा परेको छ। उपभोक्ता समिति पनि प्रभाकारिता होस्। समितिबाट सुधार कार्य होस्। जनतालाई प्रभावित गराउन उपभोक्ता कमिटीलाई सक्रिय गराउनुपर्दछ। जो उपभोक्ता बाटोको



स्वार्थसित गाभेको छ । राजनैतिक पूर्वाग्रहबाट नगरिने हो भन्ने हराउन लागेको जन सहभागितालाई जुटाउने आवश्यकतालाई मैले देखेको छु।

गएको १७ गते प्रस्तुत सरकारको नीति तथा कार्यक्रम सुनिरहेका हामी सबैलाई विगतको कुनै भाषणको पुनः सम्बोधन भइरहेको अनुभव भएको थियो। तर प्राप्त कार्यक्रम पुस्तिकामा २०५५ नै छापिएकोले त्यसलाई पुरानै प्रति हो भन्न मिलेन यद्यपि पुरानै नीति र कार्यक्रमहरुलाई भाषा र शैलीमा हेरफेर मात्र गरी पुनः प्रस्तुत गरिएको हो भन्दा अन्यथा हुने छैन।

दशमा हरेक बिहान आज कि भोलि आम चुनाव घोषणा हुने चर्चा व्यापक छ। तर वार्षिक नीति र कार्यक्रममा दुइ वर्ष र ५ वर्ष मात्र होइन दशकौ समयको कार्यक्रम उल्लेख भए बाट आफै अव्यवहारिक भएको प्रमाणित हुन्छ । सरकारको आयु भन्दा लामो समयको नीति र कार्यक्रम दिनु आफैमा हास्यापद छ।

वि.सं. २०४६ अघि र पछि देशको राजनीतिक व्यवस्थामा परिवर्तन भएको छ । तर सरकारको नीति र कार्यक्रममा किन परिवर्तन आउँदैन ? के सत्तासीन दलहरुले यस तर्फ सोच्ने बेला आएको छैन ? यदि पुरानै नीति र कार्यक्रम दोहऱ्याइ, तेहऱ्याइ पढ्नु छ भने परिवर्तनको औचित्य के रह्यो ? यसतर्फ सरकारको ध्यान आकर्षित गर्न चाहन्छु।

राष्ट्रिय र सहमति दुइ शब्द सुन्दा सुन्दा हामीलाई दिक्क लागेको महसुस वर्तमान अल्पमत

सरकारलाई भैसकेको रहेछ । त्यसैले राष्ट्रिय सहमतिमा आम शब्द थपेर ल्याएको छ। विगतमा भएको कथित राष्ट्रिय सहमतिबाट पजेरो अपसंस्कृति भित्रेको थियो, राष्ट्रघाती महाकाली सन्धि भएको थियो। त्यसैले स्वार्थी राजनीतिक दलहरुको कथित राष्ट्रिय सहमतिबाट पीडित नेपाल र नेपाली जनता आम राष्ट्रिय सहमतिबाट सतर्क र सचेत रहन म नेपाली जनतालाई आग्रह र अनुरोध गर्दछु।

नेपाली कांग्रेसले गरीबको तस्वीर झुण्ड्याएर शासन गर्ने भनेको हो वा गरीबलाई नै झुण्ड्याएर धेरैलाई ठम्याउन गाह्रो भएको छ। गरीब र गरीबीका कारणलाई ध्यानमा राखेर शासन गर्ने नेपाली कांग्रेसको हो भने विगतमा र अहिलेको नीति र कार्यक्रमहरुबाट गरीबी उन्मूलनका कुरा मात्र गर्ने थिएन। केवल औपचारिकता पुऱ्याउन भनिएका आर्थिक सुधार र गरीबी उन्मूलनले गरीबी बढिरहेको कुरा विद्यमान स्थितिले प्रष्ट पारेको छ।

मूल्य अभिवृद्धि करले मूल्य नबढ्ने तर नाफा खानेहरुले नाफाको १० प्रतिशत कर निकै बन्दोबस्त भनिए पनि खाद्यान्नमा र दैनिक उपभोगका वस्तुमा भ्याट नलाग्ने भन्ने कुरा व्यवहारमा लागू भएको छैन । मुल्य अभिवृद्धि करले मूल्य वृद्धि भएको छ। यसलाई नियन्त्रण गर्नेतर्फ सरकारको अकर्मण्यताले उपभोक्ताहरु पीडित छन् र भ्याटलाई वैज्ञानिक कर होइन अभिशाप भन्न बाध्य छन्।

संसारको सबभन्दा महंगो बिजुली बेच्ने जलस्रोत मन्त्रालयले विद्युत प्राधिकरणको अनावश्यक खर्च र चुहावट नियन्त्रण गर्ने कुरा कार्यक्रममा परेको छ । प्राधिकरणको आफ्नो अकर्मण्यता, भ्रष्टाचार र कमिशन तथा ढिलासुस्तीले भएको चुहावटको मार उपभोक्ताले एकातिर व्यहोरी रहेको छ भने अर्कोतिर महंगो बिजुली बेचेर असीमित तलब भत्ता खानेहरुलाई तह लगााउनेतर्फ सरकारले विशेष ध्यान दिनु पर्दछ । साथै समयमा बन्न नसकेको डि.पि.आर.को कारण म्याद नाघेको पञ्चेश्वर वृहत् आयोजनालाई राष्ट्रिय सहमतिको नाममा राष्ट्रघातलाई टेवा नदिइयोस् भन्ने आग्रह गर्दछु।

आफूलाई बहुदलवादी भन्ने नेपाली कांग्रेस र एमालेको नारा प्रतिस्पर्धा यस कार्यक्रममा पनि देखा परेको छ । नारामा प्रतिस्पर्धा गरी पञ्चहरुलाई उछिन्न खोज्नु भन्दा काम गरेर देखाउनु उत्तम, सयवटा कुरा भन्दा एउटा काम नै धेरै उत्तम भन्ने व्यवहारिक कुरा सत्तामा जाने पार्टीहरुलाई स्मरण गराउनु परेको छ। यो दुःखको कुरा हो। पर्यटन प्रवर्द्धनको कुराका कार्यक्रममा छ तर सञ्चालन भइरहेको नेपाल भ्रमण वर्ष १९९८ को नामसम्म उल्लेख नभएबाट यो सरकारको पर्यटन विकासप्रतिको प्रतिबद्धता स्पष्ट हुन्छ। सांस्कृतिकस्थल एवं पर्यटकीय गन्तव्य स्थलहरुको संरक्षण निम्ति ठोस कार्यक्रम र नीति सुझाउँदा पनि स्वीकार गर्न डराउने सरकारले पर्यटन प्रवर्द्धनको कुरा गर्नु आफैमा हास्यास्पद कुरा हो।

दैनिक उपभोग्य वस्तुहरुको सुलभ आपूर्ति र मूल्य स्थीरताको कुरा गर्दा गर्दै मूल्यवृद्धिले आकाश छोइसकेको छ। कार्यक्रम नआउँदै बजारमा मूल्यवृद्धि भइसकेको छ र बजेट आउँदासम्म कति बढ्ने हो ? सरकारले जवाफ दिनुपर्छ।

एउटै सडकलाई पटक-पटक शिलान्यास गरेर प्रगति देखाउन चाहने सरकारले सडकमा गुड्ने बाहन चालक यात्रुको समस्याहरुतर्फ पनि ध्यान पुऱ्याउन पर्छ। नवौं योजनाको अन्त्यसम्म सबै देशवासीहरुलाई स्वच्छ खानेपानी उपलब्ध गराउने भाखा राखिएको छ। यस्तो भाखा हामी मध्ये धेरैले विगतमा धेरै पटक सुनिसकेका छौं। अनि मेलम्ची भनेको कुन ग्रह वा तारामा छ, त्यसबारे कुनै उल्लेख नगरी हरेक सरकार त्यो ठाउँको नाउँ किन दोहऱ्याउने गर्छ ? थाहा पाउन सकिएन। मेलम्ची कुन ग्रह, उपग्रह वा तारामा छ ? जवाफ पाउने अपेक्षा गर्दछु।

एकातिर प्रा.वि. पूर्ण निःशुल्कको कुरा गर्ने, अर्कोतिर प्रमाणपत्रहरु हटाउँदै जाने र महंगो प्राइभेट र १०ं जोड २ लाई प्रोत्साहन दिने, अझ उच्च शिक्षाको शुल्कहरु बढाउने सरकारले शिक्षा नियोजन तर्फ षडयन्त्र गर्न थालेको छ। सर्वसाधारणको पहुँचबाट शिक्षालाई टाढा, झन् टाढा पुऱ्याउने सरकारी नीतिको जति भर्त्सना गरे पनि कम नै हुन्छ। शिक्षालाई निजिकरण गर्ने सरकारी नीतिले यो देशलाई अन्धकारमा धकेल्ने दुस्प्रयासको निन्दा नगर्नु जनताका प्रतिनिधिको अकर्मण्यता ठहरिने छ।

स्वच्छ र भ्रष्टाचारमुक्त प्रशासन दिने सरकारको कार्यक्रम सुनिरहेका जो कोही व्यंग्यपूर्वक हाँसे होलान् भन्ने मेरो अनुमान छ। शिष्टताको सीमा नभएको भए

त्यस दिन यो कोठा पनि अट्टहासले गुञ्जिने थियो । यद्यपि एकसेएक निष्कलंक व्यक्तिहरुले भरिएको सरकारको नीति र कार्यक्रमले 'हाँस्नु स्वास्थ्यको लागि लाभदायक छ' भन्ने भनाईलाई टेवा दिएको छ ।

माफियाहरुले राजनीतिलाई खेलाइरहेको विश्वास गरिएको स्थितिमा सरकारले निजीकरणलाई प्राथमिकता दिनु देशघाती काम हो, राष्ट्रद्रोही काम हो । नेपाली कांग्रेस नियोजित ढंगले यो देशद्रोही काम गर्न किन उत्साहित छ ? पूर्व मेचीदेखि पश्चिम महाकालीसम्म आज प्रश्न उठेको छ ।

यसरी सरकारको नीति तथा कार्यक्रम औपचारिक, बासी वा नवीनता नभएको मात्र होइन यसले देशलाई एक पाइला भासतिर धकेलेको छ । त्यसैले यस नीति र कार्यक्रमको हामी विरोध गर्दछौं ।

## सीमा अतिक्रमणबारे



दार्चुला जिल्ला कालापानी क्षेत्रमा १९,६०० हेक्टर नेपाली नक्साको भूभाग २०३४ सालदेखि भारतीय अतिक्रमणमा परेको छ । स्वतन्त्र, स्वाधीन तथा सार्वभौमसत्तामा फसाएको छ । चाहे १९५० को सन्धि होस्, चाहे १८१५ डिसेम्बर २ को सुगौली सन्धि होस् वा सिमाना सम्बन्धमा भएका पत्राचार वा सम्झौताका रुपमा कहलिएका १८६० को जङ्गे सन्धि हुन् । सबैमा नेपालको हक गुमेको छ ।

अब नेपालीहरुको यो सुन्दा सुन्दै पुनः मेचीमा सिमाना मिचिएको छ । जंगे पिलरहरु बिर्सेर नयाँ पिलर गाडेर अतिक्रमण भैरहेको छ । झापावासीहरु चिच्याइ चिच्याइ आफ्नो आक्रोश व्यक्त गर्दै छन् ।

एकातिर भारतीय विस्तारवादको चपेटामा परेर मुलुक "उनीहरुको लायक विकल्प खोजिरहेको" छ । अर्कोतिर कांग्रेस-एमाले भित्र हुर्किरहेका देशका उद्धार लेण्डुप दोर्जेहरु देशका नदी नालाहरु, उद्योग धन्दाहरु भारतलाई उपहार चढाएर यो देशमा शासन गर्न उभिरहेका छन् । मेचीको सम्बन्धमा सायद पुरानो बानीले उल्टयाएर हो, के.पी. भन्नेले सुल्पा तानेको भाषा बोले, त्यति महत्वपूर्ण हैन भन्ने र जनताको बीचमा भारतीय अतिक्रमण विरुद्धमा उठेका आवाजहरु निस्तेज पार्ने दाउमा एक कदम अघि सरेर अवसरवादी, निन्दनीय र घृणित् भाषा बकेर भारतको खुला दलाली गर्न के.पी. ओली ओर्लिए । कांग्रसीहरु त बनारसमै हुर्के बढेका यद्यपि मलाई याद छ, हरिसिद्धि इट्टा टायल कारखानाको निजीकरण विरुद्धमा एममाले नेता ३ फीट, ६ फुट उफ्रेर खुलामञ्चमा चिच्याए । भोलिपल्टै थाहा भयो । तिनै एमाले नेता सोही टाऊकोमा गीर खेल्न पल्केका यस्तै द्वैध नियतका नेताहरु अहिले बिगबिगीको शिखरमा पुगेका छन् । अहिलेको वर्तमान मौसममा नेपालीहरुले विभिन्न किसिमले लड्नुपर्ने थुप्रै विषयहरुको भीड यहाँ जमिरहेको छ । यसमा गुपचुपको सुत्रले नीजिकरणका नाउँमा पुनः भारतीय विस्तारवादका नेपाली दलालहरुलाई नेपालको एउटै मात्र कृषि औजार कारखाना लिमिटेड वीरगञ्ज बेच्न अर्थ मन्त्रालयले राम्रो तयारी गरिरहेको बुझिन्छ । अर्थमन्त्रीको अध्यक्षतामा उक्त कारखाना बेच्न तोकिएको मूल्य १० करोड लगभग तय भएको थियो । राम्रो पक्ष के थियो भने त्यो कारखानाको शेयर कर्मचारी वृत्तमा सहुलियत सहित दिने यौटा जिकीर लगभग प्रतिपादित अदालती नजिर झैं कर्मचारीहरुले

पनि मानिरहेका थिए । अहिले कारखानाभित्र कुरो खुल्दा थाहा लाग्यो । यो त बहाना मात्रै रहेछ । घ्यूको लड्डु मात्रै रहेछ ।

कुरो के रहेछ भने टेण्डरमा लगभग ५ करोड (सबैभन्दा बढी रकम) कर्मचारीहरुबाटै परेको रहेछ । दोस्रो, तेस्रोमा क्रमशः भाजुरत्न तथा मदनलाल र चिरञ्जिवी लालको टेण्डर परेको रहेछ । अब अर्थ मन्त्रालयले कर्मचारीलाई किस्तावन्दीमा दिंदा कमिशन नमिल्ने देखेपछि मदनलाल र चिरञ्जीवीलाललाई सेवा गरेर करौडौं कमिशन आफ्नै दाउमा उक्त टेण्डरको नामांकन गर्ने भएको कुरा एवं सोका लागि खेलकुद मन्त्री बल बहादुर के.सी. समेत दौडधूपमा लागेको कुरा अहिलेसम्म खुल्न आएको छ । अब हेरौं भारतीय विस्तारवादको नालमा लुटुपुटी नुहाउने काला गद्दार नामेहरु कति लुकी लुकी बाँदरको हड्डी तस्करी गर्न बाँदरको मृत्युमा शोकाकुल भएको अभिनय गरेर बल बहादुर के.सी. जस्ता बलिका बोकाहरुद्वारा शोक सभा उद्घाटन गराउँछन् ।

## मूल्य अभिबृद्धि करबारे

सरकारले भ्याट लागू गर्न भंसारमा सामान रोकिराखेको छ । भ्याटको विरुद्धमा व्यापारीहरुले जुलुस प्रदर्शन र यातायात बन्दका कार्यक्रमहरु संचालन गरिसकेका छन् ।

व्यापारीहरुले आजैदेखि २० प्रतिशत विक्री कर तिरेर सामान छुट्याउने कार्यमा लाग्ने कुरा सुन्नमा आएको छ । सरकारले भ्याटलाई व्यापारीवर्गमा लागु गर्न सकेन भन्ने ५ प्रतिशत उपभोक्ताले बढी तिर्नुपर्ने हुन्छ ।

यस वर्षको बजेट कार्यक्रमले कारको करमा वृद्धि गरेको छ । करमा १८ सय बढाएर ४८०० (अठ्चालिस सय) गरेको छ । तर कर तिर्न जाँदा राम्रो व्यवस्था छैन भन्ने गुनासो छ भनेर करदाताहरुले भनीरहेका छन् ।

४८ देखि ५० लाख खर्च गरेर खरीद गरेकको गाडी ४३०० सि.सी. डिजेलको छ ।

## प्राचीन मौलिक कलाबारे

वर्तमान सरकारले प्राचीन शहरहरुमा पश्चिमी शैलीका घरहरु बनाउन नदिने ऐन कानूनहरु बनाउनुपर्छ । पुराना महत्वपूर्ण नीजि घरहरुको साँझ्यः, तिकाझ्यः, म्हेखाझ्यः जस्ता कलात्मक झ्यालहरुलाई बचाई राख्नु नै राष्ट्रिय सम्पत्तिको जगेर्ना गर्नु हो ।

ऐतिहासिक एवं पुरातात्विक वस्तुहरु सुरक्षित गर्नु देशको कला र संस्कृति जोगाउनु हो भने नेपालीहरुको राष्ट्रियताको पहिचान गराउनु पनि हो । उपत्यकामा धार्मिक एवं सांस्कृतिक समिति, गुठी र पुरातत्व विभागले गरिआएको कलात्मक वस्तुले सिंगारिएका पौवा, पाटी र सत्तलहरुको मर्मत र पूनःनिर्माणमा विकेन्द्रिकरण ऐनको आधारमा स्थानीय निकायलाई पनि सहभागी गराएर वा सुम्पेर यसको विकासमा सरकारले थप टेवा दिनु पर्दछ ।

त्यसको साथै पुराना किसिमका नाचगानलाई जोगाउन स्थानीय वासिन्दालाई अभिप्रेरित गराई पुनः त्यस किसिमको नाचगानलाई दाफा, भजन गुथिद्वारा समयममा मञ्चन गर्ने व्यवस्था गर्न श्री ५ को सरकारले टेवा दिन सके कला संस्कृतिका साथसाथै ऐतिहासिक नाचगानको गौरव बढाउने प्रयत्न गर्नुपर्दछ ।

## खेलकूदबारे

युवा जगत्‌लाई राष्ट्रिय चिन्तनको मूल प्रवाहमा समाविष्ट गर्न र अनुशासित नागरिक तयार गर्न खेलकुद विकास गरी ठाउँ ठाउँमा खेल मैदान बन्दोबस्त गर्नु पर्दछ ।

खेलकूद विकासमा निरन्तरता दिलाउन, राष्ट्रिय खेलकूद परिषद्‌ले उपर्युक्त स्थानहरुमा कभर हल निर्माण गरेर युवा शक्तिलाई अनुशासित ढंगबाट खेलकुदको विकासमा स्थानीय खेलाडीहरुलाई टेवा दिनुपर्दछ । यस कार्यमा युवा खेलकुद तथा संस्कृति मन्त्रालय, त्यस दिशातिर ध्यान दिन सकेको छैन । खेलकुद क्षेत्रमा ठूलो पक्षपात हुँदैछ, त्यसलाई रोक्नुपर्दछ र खेलाडीहरुलाई अनुशासित र नैतिकवाद बनाइएन भने उद्देश्य विपरीत प्रतिफल आउँदैन ।

सार्क खेलमैदान भक्तपुरमा बनाउने हल्ला चलेको थियो । भक्तपुरमा युवाहरु, त्यस समाचारले खुशी भएका थिए । त्यस बीचमै तुहिँदा खेलाडीहरु भन्ने गर्छन्- हात्ती आयो हात्ती आयो फुस्सा भने जस्तै राष्ट्रिय स्तरका खेलाडीहरु समेत भलिबल ग्राउण्डको क्रियाकलापमा आकर्षित भएका थिए ।

## आपूर्ति व्यवस्थापनबारे

आपूर्ति मन्त्रालयको एउटा काम दैनिक आवश्यकीय वस्तुहरुलाई उपभोक्ताहरुसम्म सुलभ गराई दिनु र उपलब्ध भएका ठाउँहरुबाट उपलब्ध नभएका ठाउँमा पुऱ्याउनु हो । तर सर्लाहीमा गोलभेडा वा अन्य तरकारी कुहिन्छ, काठमाडौँमा भारतीय तरकारी बिक्री भैरहेको हुन्छ । कर्णाली अंचल र मुस्ताङ्गमा स्याऊ कुहिएको हुन्छ भने काठमाडौँमा भारतीय स्याऊले बजार लिएको हुन्छ । आपूर्ति मन्त्रालयको औचित्यता के रह्यो ?

चिनीको मूल्य सरकारले २३ रुपैयाँ निर्धारित गरेको हो । तर बजारमा २६ रुपैयाँ छ । आपूर्ति मन्त्रालयको औचित्यता के ? उद्योग वाणिज्य संघका अध्यक्ष मुलमीको भनाई अनुसार यदि सरकारले निजी क्षेत्रमा छोड्यो भने ४९५।- को दरलाई ३८०।- अर्थात् सरकारले भन्दा कम मूल्यमा दिने हाँक दिएको छ।

झापामा जग्गा खरीद गर्दा ३० लाख एमालेले चन्दा लिएको निगमको कर्मचारीहरुले १२ महिनामा १३ महिनासम्मको बोनस खाने, विवाह भत्ता, छोरा छोरीहरुको समेत भत्ता पाउने जस्ता सहुलियतको नाममा भएको लुटकै कारण पेट्रोलियम पदार्थको मूल्य बढेको हो।

सर्वसाधारण जनताको निमित्त अत्यावश्यक वस्तुहरु विदेशबाट नुन, मट्टितेल, दूध र अन्य सामानहरु आयात गरी दैनिक उपभोगका सामानहरु आपूर्ति गर्नुपर्ने हुन्छ।

विश्व बैंकको वार्षिक प्रतिवेदन अनुसार निर्यातको तुलनामा साढे तीन दोब्बर बढी आयात गर्ने मुलुक दुनियाँमा ६ वटा भन्दा बढी छैन। त्यस ६ मुलुक मध्ये हाम्रो देश पनि परेको छ। हाम्रो देशको आर्थिक स्थिति कति दरिद्र छ, त्यसै अनुमान गर्न सकिन्छ । अहिलेसम्म सरकारहरु सफलता यसैबाट थाहा पाइन्छ।

अनि देशमा रासायनिक मलको अभाव छ, सरकारले आपूर्ति गर्न सकेको छैन। मलको आपूर्तिमा कम देखिनाले कृषि उत्पादन ह्रास हुने देखिन्छ। अन्न निर्यात गर्ने देश, आपूर्ति गर्ने देशमा परिणत हुन्छ। दुइ देशको बीचमा आयात निर्यातमा पनि कमिसनको जालोले गर्दा उपभोक्ता वर्गलाई ज्यादै कठिनाई भोग्नु परेको छ।

सर्वसाधारण जनताका लागि अभावग्रस्त क्षेत्रहरुमा खाद्यान्न वा अन्य आवश्यक सामग्रीहरु पठाउनु, आपूर्ति व्यवस्थाको ठूलो महत्व छ। आपूर्ति व्यवस्थाले समयममा नै देशभरी नियमित आवश्यकीय वस्तुहरु सुलभ गर्नुपर्ने देखिन्छ।

आर्थिक वर्ष ०५४।०५५ मा दुर्गम जिल्लाहरुमा १९००० (उन्नाइस हजार) मेट्रिक टन खाद्यान्न ढुवानी गर्न सरकारले अनुदान दिने गर्दैछ। त्यसको लागि वार्षिक कार्यक्रमले १८ करोड ढुवानी अनुदानको व्यवस्था गरेको छ। आधा पनि ढुवानी खर्च हुँदैन र ठेकेदार र राजनीति कार्यकर्ताको मिलेमतोमा ढुवानी खर्च हुन्छ । खाद्यान्न भण्डारको क्षमता बढाउन आपूर्ति व्यवस्थालाई सुदृढ गर्न संस्थानको लागि ऋण लिन श्री ५ को सरकारले व्याज अनुदान दिने कार्यक्रम रहेको छ यसको निमित्त सरकारले ४ करोड ५० लाख बजेट व्यवस्था गरेको छ।

सरकारको स्वामित्वमा रहेको संस्थानहरुबाट विक्री वितरण गर्न र भौतिक व्यवस्थालाई सुदृढ र सबल बनाउन वार्षिक कार्यक्रमले १० लाख छुट्ट्याइन्छ। आर्थिक वर्षको निमित्त सरकारले २२ करोड ६० लाखको कार्यक्रमको तर्जुमा गरेको छ।

आपूर्ति मन्त्रालय समयमा आपूर्तितिर ध्यान दिन सकिन्छ भन्ने सर्वसाधारण जनताले बढी कठिनाई भोग्दैछन् । नूनको भाउ बढ्दै छ । डिजेल, मट्टितेल र पेट्रोलको भाउ वृद्धिले जनतालाई चोट पुऱ्याएको छ भन्ने बालबालिका निमित्त आयात गरिने सेरेलाक्स, लाक्टोजिन र दूध म्याद नाघि सक्दा पनि भारतीय कम्पनीहरु छाप बोकी हडम्यादको दूधलाई म्याद थपको छाप लगाईरहेका छन् । भारतीय पूंजीपति वर्ग नेपाल भित्रिएर देशका कर्णधारहरुको जीवन माथि खेलावाड गर्दा पनि आपूर्ति मन्त्रालय मौन छ।

ठूलावडाहरु आपूर्ति मन्त्रालयबाट कमिसन खान तल्लिन छन्। भारतीय बजारबाट आपूर्ति हुने, हरेक वस्तु भारतीय मूल्य भन्दा दोब्बर तेबर छ।

## गरिबी निवारणबारे

१. नेपाल एक गरीब मुलुक हो । प्राकृतिक सम्पदाले ज्यादै धनी देश भएता पनि विश्व सामु गरीब

तथा दरिद्रताको नामले यो देशलाई चिनाएको छ। आज देश निम्नतम गरीबी अवस्थामा छ। गरीबीको दायरामा पनि दिनपरदिन बढ्दो रुपमा छ। न्यूनतम आवश्यकता परिपूर्तिको लागि जति काम गरेता पनि एक छाक खान गरीब नेपालीलाई धौ धौ परिरहेको छ।

प्रथम पञ्चवर्षिय योजनाको शुरुदेखि नै गरीबी निवारणको कुरा उठेको थियो। सत्तासीनहरुले अपेक्षित सुधार गर्न नसकेको कारणले देशमा अशिक्षा महंगी भोक, रोग र पीडाबाट ग्रस्त नेपालीहरु बाँच्नका लागि रात दिन संघर्ष गरिरहेका छन्। गरीब वर्गले जति संघर्ष गरे पनि हात लाग्यो शून्य नै छ।

अनि विश्व अत्याधुनिक बन्दै गईरहेको छ भन्ने हामी कंगाल बनिरहेका छौं। आज विश्वले एकाईसौं मार्ग भनेर पर्खिरहेका छन् भन्ने हामी हावादारी कुरा गरी काल्पनिक गफ गरिरहेका छौं। नेपालमा गरीब बढ्नुको खास कारण नै अवैज्ञानिक योजना हचुवा नीति, असक्षम प्रशासन, अनैतिक राजनैतिक र अव्यवहारिक योजना नै मुख्य कारकको रुपमा रहेका छन्। जबसम्म देशमा गरीबी र सम्पन्नता रहिरहन्छ, तबसम्म गरीब निवारणका नारा जति दिइरहेता पनि पूर्ण त गरीब निवारण सम्भव छैन।

३० वर्षको पंचायती शासनकालमा सन् २००० सम्ममा देशमा गरीबी निवारण गर्ने र नेपाललाई एशियाली मापदण्ड पुऱ्याउने घोषणा नै गरेको थियो। पंचायतका अवसानपछि त्यो बिलाएर गयो।

प्रजातन्त्र पुनस्थापनापछि गरिबी निवारणमा कमी आउनु पर्नेमा झन बढ्दै गइरहेको छ। नवौ योजनाको सरकारी ओहदा अनुसार ४२ प्रतिशत गरिबी रेखामुनिका जनतालाई कम प्रतिशतमा झार्ने र ८० प्रतिशतभन्दा वढी जनतालाई कृषिमा आश्रित गराउने लक्षित गरेको छ।

२०३४ सालमा योजना आयोगको सर्वेक्षण गरे अनुसार नेपालमा जम्मा ३६ प्रतिशत गरिबी रेखामुनि रहेको र २०५४ सालसम्ममा ४२ प्रतिशतले वृद्धि भएको बताउँछ भने विश्व बैंकले नेपालमा ५३ प्रतिशत गरिबी रेखामुनि रहेको बताउँछ।

विश्वको मान्यता अनुरुप आफ्नो आम्दानीको ७० प्रतिशत भन्दा बढी खान र बस्न खर्च गरिनेलाई गरिब भन्ने हो भने त केहीलाई छाडेर सबै नेपाली गरिबी रेखामुनि पर्ने स्पष्ट छ। देश गरिबी निवारणका लागि हरेक बर्ष बार्षिक बजेटले ठूलो हिस्सा लगानी गरेको छ। तैपनि हामीकहाँ गरिबी भयावह रुपमा बढी रहेको छ। सीमित जनसङ्ख्याको कम प्रतिशत मात्र धनी भइरहेका छन्। यी धनीहरुले सम्पत्ति थुपारीरहेका छन्। बहुसङ्ख्यक गरीब जनता कंगालबाट महाकंगाल बनिरहेका छन्। धनी झन् झन् धनी हुने र गरिब झन् झन् गरीब हुने मापनले नेपाललाई गरीबी निवारणको विपरीत दिशातिर लागिरहेको छ।

हामीकहाँ गरीबी निवारणका कुरा सिंहदरबारको राष्ट्रिय योजना आयोगमा मात्र उठ्ने गर्छ। वास्तविक दूर्गम क्षेत्रमा कहिले पाइला नटेकेका योजनाकारले योजना बनाउँछन्। गरीबी र भोका नांगाहरुको विकास बारे ठूल्ठूला पाँचतारे होटलहरुमा छलफल गरिन्छ। ब्राण्डी र व्हिस्की घुट्कोमै योजना बगाइन्छ र छलफल टुंगिन्छ।

गरीब को हो ? गरीबी कस्तो हुन्छ ? गरीब किन गरीब भएको छ ? कसले गरीब बनायो। योजनाकारलाई गरीबको दुःख दरिद्रबारे ज्ञान छ कि छैन ? आज नेपालका योजनाकारहरु राष्ट्रको सम्पत्तिमा मौजी गरी गरीब जनताको धज्जी उडाइरहेका छन्। नेपालको कुनै पनि योजना शत प्रतिशत सफल नहुनुले यो कुराको पुष्टी गरिरहेको छ।

आज देशमा लामो समयसम्म राजनीतिक जीवन व्यतीत गर्ने नेताहरु प्रजातन्त्र पुनः स्थापनापछि राजनीतिक पीडित सहायता कोष खडा गरेर मुआब्जा लिन्छन्। तर जनता भने प्रजातन्त्रका लागि रगत बगाउँछन्। नेपाली जनता प्रजातन्त्रलाई हेरी गरीबीलाई सहेर चूपचाप स्वीकारी रहेका छन्। हाम्रो प्रजातन्त्र अन्योल अनिर्णय दिशाहिनतातिर गइरहेको छ। यहाँ कुनै सफलता र असफलता कुरै गर्न नहुने सामन्ती प्रवृत्तिको दबदबा बढेकै छ। मानवीय भावना मरिसकेको छ। तराई, पहाड र दूर्गम क्षेत्रतिरबाट गरीब जनताको प्रतिनिधित्व गर्ने जनप्रतिनिधि देशको सम्पत्ति लुटेर ऐश आराम गरेर पजेरो गाडीमा सवार हेर्दा अलिकति पनि हिनताबोध हुँदैन। देशमा भ्रष्टाचार शोषण असमानता गैर जिम्मेवारीपन्ना र स्वार्थीपनाको मानसिकताको अन्त्यको

निमित्त राजनैतिक नेता तथा कार्यकर्ता सोच्दैन भन्ने प्रशासनमा आमूल परिवर्तन कसरी हुन्छ ? यसबारे सोध्नु अत्यन्तै जरुरी भएको छ ।

नेपालमा गरीब बढ्नु तथा प्रतिव्यक्ति नेपालीले आठ हजार ऋणको भार बोक्नु गरीब नेपालीको हात होइन । यो त जानकार शिक्षित व्यक्तिहरुबाट नै भएको हो ।

गाउँका जनता हिजो पनि बाहिर थिए, आज पनि बाहिर नै छन् । देशका ठूला बडा शिक्षित व्यक्तिहरुले गरीब व्यक्तिहरुलाई भऱ्याङ्ग बनाएर गरीबको सम्पत्ति लुटिरहेका छन् । देशलाई हरि कंगाल बनाइरहेका छन् ।

देशको उन्नति र विकास गर्ने हो भन्ने गरीबी हटाउनुपर्छ र गरीबी कम गर्ने योजना बनाई व्यवहारमा लागू गर्दै आमूल परिवर्तनको ढोका घच्घच्याउनै पर्छ । अब बन्ने नीति योजना र तिनको कार्यान्वयन गरीब र पिछडिएका जनजातिहरुमा आधारित हुनुपर्छ र सही नीति र वास्तविकताको आधार अपनाउन सकेमा गरीब निवारण सरल र सुगम तरिकाले गर्न सकिन्छ भन्ने कुरा द्विविधा हुन सक्दैन ।

## शाही सम्बोधनमाथि प्रतिक्रिया

१. शोषणमा आधारित व्यवस्थामा पूंजीवादी सरकारले देश र जनताको स्थितिमा मौलिक परिवर्तन ल्याउन सक्दैन । यसकारण शाही सम्बोधनबाट खासै अपेक्षा राख्न सकिन्न ।

कहिले पूरा नहुने नीति र कार्यक्रम हामीले धेरै वर्षदेखि सुन्दै आएको हुँदा शाही सम्बोधनबाट कुनै उत्साह दिन सकेन । यो केवल औपचारिकता निर्वाह गर्ने परम्परा मात्र सावित हुनेछ ।

वर्तमान संयुक्त सरकारलाई एउटा राष्ट्रिय कार्यक्रम निर्माण गर्न सजिलो होस् भनी २२ बुँदे शर्तहरु राखी हाम्रो पार्टीले आलोचनात्मक समर्थन गरेका थियौँ । तर आजसम्म ती शर्तहरु पुरा नभएको व्यहोरा जानकारी गराउनु पर्दा हामीलाई दुःख लागेको छ । हामी आशा एवं विश्वास गर्छौं । हामीले राखेका बुँदामा यथाशिघ्र सकारात्मक पाइला चाल्नु हुनेछ भनी एकचोटी सम्झना दिलाउन चाहन्छौँ ।

स्थानीय निर्वाचनमा नेपाल मजदूर किसान पार्टी लगायत अन्य धेरै दलहरुलाई दलगत चुनाव चिन्ह दिलाइएन । नेकपा एमाले, नेपाली कांग्रेस, राप्रपा र नेपाल सद्भावना पार्टी मात्र निर्वाचन चिन्ह पाउनु निश्चय नै धाँधलीको शुरुवात थियो र नेपाल अधिराज्यको संविधान २०४७ बहुदलीय प्रजातन्त्रलाई सुदृढ गर्ने प्रस्तावना विपरीत हो ।

दैलेखमा स्थानीय निर्वाचन अधिकृतले नेपाल मजदुर किसान पार्टीको लागि समयमा पर्याप्त मनोनयन पत्र र राजनैतिक दलको औपचारिक पत्र उपलब्ध गराएन भने वर्तमान संयुक्त सरकारको प्रमुख घटक नेकपा एमालेले नेमकिपाका उम्मेदवारहरुलाई सानो पार्टी, तीन प्रतिशत नआएको पार्टी, सरकारमा नजान्ने पार्टी, भविष्य नभएको पार्टी जस्ता गैर राजनैतिक कुराहरु गरी हेला होचो गर्ने काम भयो ।

भक्तपुरको छालिङ्ग, बालकोट, कटुञ्जे, झौखेलमा पनि निश्पक्ष भएको थिएन । भक्तपुरको ताथली गा.वि.स.मा एमालेका अर्जुन थापाको नेतृत्वमा ६ सय मतपत्र मतदान अधिकृतसँग लुट्ने काम भयो । अहिलेसम्म त्यो अपराधीलाई पक्राउ गरेको छैन ।

समाजवादी देशका २४ वटा पञ्चवर्षीय योजनाले गरिबी निवारण गरेको प्रमाण इतिहास साक्षी छ । तर हाम्रो देशको ८ वटा पञ्चवर्षीय योजना सम्पन्न भैसकेपछि गरिबी निवारण आयोग गठन गर्ने सुरसारमा छौँ । प्रस्तुत बजेटले एउटा आयोग गठन गरी आफ्नो सार्थकता सावित गर्ने जमर्को गर्ने कुरामा कुनै शंका छैन ।

जनताको गरीबी निवारण गरोस् या नगरोस्, परन्तु आयोगमा राखिने केही कार्यकर्ताको गरीबी निश्चय पनि निवारण हुनेछ । म यो पनि अनुमान गरिरहेको छु कि आयोगले दिने प्रतिवेदन विगतका आयोग अध्ययन टोली आदिले दिएका प्रतिवेदन झै मन्त्रालयको रद्दी टोकरीको शोभा हुनेछ ।

यस्तो अनुमान गर्नुको कारण गरीबी निवारणको लागि बजेटमा रू.४ करोड विनियोजन गरेको छ । रू.४ करोडले गरिबी निवारण गर्ने अर्थमन्त्रीको बौद्धिक क्षमतालाई कसरी सराहना गर्ने हो, त्यो थाहा पाउन सकिएन ।

मलाई लाग्छ, त्यो ४ करोड रुपैयाँ नेपालीको गरीबी निवारण गर्न होइन । आयोगमा बस्ने सत्तासीन पार्टीका कार्यकर्ताहरुको गरीबी निवारणका लागि मात्र हो । अन्यथा ४५ प्रतिशत अर्थात् ९० लाख गरीबी रेखा मुनिका जनतालाई रू. ४ करोड मात्र छुट्याउने थिएनन् होला । सांसदहरुलाई पजेरो सुविधा दिन साढे ३३ करोड राजस्व घाटा व्यहोर्ने सरकारले ९० लाख जनताको लागि रू. ४ करोड विनियोजन गर्ने थिएन । बजेट वक्तव्यअनुसार नवौँ योजनाको अन्त्यसम्म अर्थात् ५ वर्ष २०५९ सालसम्ममा गरीबी रेखामुनि रहेका ३ लाख जनताको गरिबी निवारण हुनेछ । आगामी ५ वर्षमा गरिबी रेखा मुनिको संख्या नबढेमा गरीबी निवारणका लागि करीब २०-३० करोड खर्च गर्ने देखिन्छ भने हामी सांसदहरुका लागि मात्र कति खर्च गर्छ हिसाब गर्ने जिम्मा अर्थमन्त्रीज्यूलाई नै दिनु राम्रो हुनेछ ।

सरकारमा बस्नेलाई लाज लाग्दैन भन्दैमा हामी जनप्रतिनीधिहरुलाई जनता माझ जान अप्ठ्यारो पार्ने काम गर्नु भएन ।

माओवादी गतिविधिबाट प्रभावित जिल्लाहरुमा रू. ४ करोड विनियोजन गरेर अर्थमन्त्रीज्यूले त्यहाँका गरीब, अभावग्रस्त, दमन र उत्पीडित जनतालाई फकाउन खोज्नु भएको छ । बन्दूक समातेर ज्यान हत्केलामा राख्ने कसेको रहर हुँदेन । बाध्यताबाट उत्पन्न स्थितिलाइ नियन्त्रण गर्न यो बजेट पूर्णतया असफल देखिन्छ । ती क्षेत्रमा सरकारी आतंकबाट उनिएको घाऊ रू. ४ करोडको मल्हमले कसरी निको हुन्छ ? त्यसैले यो बजेट प्रतिबद्धताविहिन बजेट हो ।

महेन्द्र राजमार्गको कुरा यो बजेटमा पनि आएको छ । अपराध घटेमा प्रहरीको जागीर जाला भनेर चिन्ता लिन्छन् रे । महेन्द्र राजमार्ग पनि त्यस्तै हो । त्यो सम्पन्न भएपछि त्यसबाट हुने आम्दानी घट्ने डर यातायात मन्त्रालयलाई छ । त्यसैले त्यो कहिले पूरा हुँदैन । महेन्द्र राजमार्ग भ्रष्टहरुको मागी खाने भाँडो हो ।

शाही सम्बोधनमा सन् २००२ सम्ममा स्वच्छ खानेपानी आपूर्ति गर्ने उल्लेख छ । देशको राजधानीमा खानेपानीको हाहाकार छ । तर खानेपानीको कुनै योजनालाई बजेटले प्राथमिकता दिएको देखिएन । ठूल्ठूला आश्वासनहरु दिने तर पूरा नगर्ने यो सरकारबाट सत्तासीन पार्टीहरु कहिले मुक्त हुने हो थाहा छैन ।

सरकारी स्वामित्वमा रहुञ्जेल घाटामा जाने उद्योगहरुको सूचीमा कागज उद्योग पनि रहेको छ । नीजिकरण भएपछि प्रगति गरेको जानकारी प्रकाशममा आइसकेको छ । यसै क्रममा न्यूजप्रिन्टमा मूल्यवृद्धि नगर्न आग्रह गर्दागर्दै पनि व्यवसायिक पत्रकारितालाई संस्थागत विकास गर्दै भाषण गरेर नथाक्ने यो सरकारले थप करको व्यवस्था गरेको छ । यसबाट पत्रिकाले मूल्यवृद्धि गर्नेछ । पाठक घट्नेछ र सुसूचित हुने संवैधानिक अधिकारबाट बंचित हुनुपर्नेछ । त्यसैले न्यूजप्रिन्टमा लगाएको कर हटाउनु पर्दछ ।

बजेटले कर्मचारीहरुलाई राष्ट्र सेवकको संज्ञा दिएको छ । ४२.८ प्रतिशतसम्म तलब वृद्धिको घोषणा पनि गरेको छ । तर वास्तवमा तलब वृद्धि भने सरदर १३ प्रतिशत मात्र भएको छ । १३ प्रतिशत तलब वृद्धि गर्न ४२.८ को ठूलो संख्या किन ? यो इमान्दारी अभिव्यक्ति होइन, छलछाम र बेइमानी हो ।

विगतको बजेटले दिएको महंगीलाई भरथेग गर्न दिइएको महंगी भत्तालाई यो सरकारले तलबमा समायोजन गरेर ४२.८ प्रतिशत तलब बढाएको भनी जस लिन खोज्नु काम गर्ने हनुमान जस पाउने ढेडुको चाला जस्तो सावित भएको छ ।

बजेट अगावै ५०, ६० प्रतिशत महंगी बढाई १३ प्रतिशत तलब बढाएर ४२ को धाक लगाउनु कर्मचारीहरुलाई झुक्याउनु हो । सरकारबाट झुकिएका कर्मचारीहरुबाट राम्रो कामको आशा गर्नु सिस्नो राजेर तुल्सीको आशा गरे जस्तै हो ।

४२ प्रतिशत तलब बढाएको भनी जस पाउन खोज्ने अर्थमन्त्रीको लोभलाई सर्वसाधारण जनताले ठूलो मूल्य चुकाउनु पर्ने देखिन्छ ।

५-७ प्रतिशत तलब वृद्धि हुँदा २०-३० प्रतिशत मूल्य बढ्ने परम्परा हेर्दा ४२ प्रतिशत तलब वृद्धि नाटक गरी आकासिने महंगीलाई टेवा दिनु हो । जहाँसम्म मूल्य नियन्त्रणको सरकारी कर्तव्यको कुरा छ, त्यो आजसम्मका सरकारको क्षमताभन्दा बाहिरको कुरा हो । त्यसकारण मूल्य वृद्धिलाई नियन्त्रण गर्छु भन्नु चुकेर सूर्यलाई निभाउन

खोज्नु जस्तै हो ।

सानो देशले ठूलो देशलाई हराउन सक्छ भन्ने कुरा विश्वको इतिहासले सावित गरिसकेको छ । आज नेपालको भूभागमाथि भारतले सिमामा अतिक्रमण गर्दैछ । नेपाली जनता त्यसको विरोधमा छन् । तर सरकारले देशको सीमा रक्षा गर्न सकिरहेको छैन । आफ्नो देशको रक्षा मामिलालाई सरकारले रक्षा गर्न सक्नु पर्दथ्यो र देशका जनतालाई मनोबल बढाउन अतिक्रमित भूमि रक्षा गर्ने मामलामा सरकार स्वयं अघि बढ्नु पर्दथ्यो ।

यस हिसाबले हाम्रो देशको सरकार रक्षा मामलामा कमजोर जस्तो देखिएको छ। कमजोर सरकारले राष्ट्र र जनतालाई केही गर्न सक्दैन ।

बेलायत सानो छ, कति ठूला ठूला राष्ट्रहरुलाई आक्रमण गरेर आफ्नो साम्राज्यलाई फैलाएको थियो ।

सानो राष्ट्र भियतनामले अमेरिकी साम्राज्यवादलाई धपाएको थियो । सानो देशको उदाहरण हुँदाहुँदै पनि आज नेपालले कालापानीबाट भारतीयसँग फर्काउन सकिरहेका छैनौं । पूर्व मेचीदेखि पश्चिम महाकालीसम्म अतिक्रमित भूमिलाई हामीले रक्षा गर्न सकिरहेका छैनौं ।

विदेशमा फिर्ता पठाउन र अतिक्रमित भूमि रक्षा गर्न सरकारले जनताको मनोबल बढाउने उपायहरु सोच्ने बेला आएको छ । नेपालको १ इञ्च जग्गा पनि मिच्न दिन्नौं भन्ने भावनालाई साकार गर्नु पऱ्यो । देशको भूभागलाई सरकारले रक्षा गर्ने गर्छ ।

## भक्तपुरमा खानेपानी व्यवस्थापनबारे

भक्तपुर खानेपानी संस्थान भक्तपुर शाखाले भक्तपुर नगरपालिका वडा नं २ जगातीमा पर्याप्त पानीको अभावको कारणले पाइप लाइन बिछ्याई धारा वितरण गर्न सकेको छैन भने अर्कोतिर केही कर्मचारीहरुको लापरवाहीले भक्तपुरबाट चाँगु जाने देकोचामा सार्वजनिक स्थानमा धारा जडान गरी विना महसुल सीमित व्यक्तिहरु कहाँ पानी आइरहेको छ ।

सार्वजनिक स्थानमा धारा रहेता पनि मर्मतबाट कर्मचारीको संलग्नतामा चोरिएको धारा पनि भनिन्छ । त्यस धाराबाट खानेपानी संस्थानलाई स्थानीय व्यक्तिहरुले समयमा खबर गर्दा पनि कुनै कदम नचालिएको हुँदा जानकार व्यक्तिहरु निराश भएका छन् ।

खानेपानी संस्थान भक्तपुर शाखाका इन्जिनीयर तिलक मोहन राजभण्डारीले पानी वितरण गर्न पोलिथिन पाइप प्रयोग गर्न नदिएको र जी.आई पाइपको प्रयोगले पानीको चुहावट कम देखिएता पनि संस्थानमा दर्ता भएको एक धाराबाट डेढ किलोमिटर पोलिथिन पाइप बिछ्याई कुखुरा फर्ममा पानी प्रयोग गर्दा खानेपानी संस्थान मौन छ ।

भनिन्छ, कुखुरा फर्मका प्रोप्राइटर कोष तथा लेखा नियन्त्रक कार्यालयका कर्मचारी भएको र संस्थान प्रमुखको आफ्नो पुरानो टोलवासीको नाताले कुनै कदम चाल्न सकेको छैन ।

भक्तपुर नगरभित्र पोलिथिन पाइपबाट वितरित धाराहरुमा पानी चुहावटलाई विशेष ध्यान दिनुको सट्टा प्लम्बरहरु धारा जडान कार्यबाट पैसा बटुल्नु, व्यस्तताको कारणले ठाउँ ठाउँमा मेन लाइनबाट चुहावट भैरहेको पानी रोकथाम गर्न सकेको छैन ।

खानेपानी चुहावटलाई छिटो रोकथाम गर्ने र लगत नभएका धाराहरुलाई सक्दो छिटो धारा जडान कार्य गर्न जनताको भनाई रहेको व्यापक रुपमा चर्चा छ ।

जन स्वास्थ्यको स्तर वृद्धि र वातावरणीय सरसफाई कायम गर्न गा.वि.स. र नगरपालिकाहरुले महत्वपूर्ण भूमिका खेल्नुपर्ने हुन्छ ।

आज नेपाली जनताले आवश्यक शुल्क तिरेर पनि समयमा खानेपानी र बिजुलीको उपभोग गर्न पाएको छैन ।

बरु स्वास्थ्यलाई नोक्सान हुने खानेपानीको आपूर्ति भैरहेका छन् । यसको तत्काल रोकथाम गरी स्वच्छ खानेपानी प्रबन्ध गर्न सम्बन्धित निकायलाई ध्यान आकर्षित गराउने कार्य आजका प्रमुख अतिथि सूर्य बहादुर थापाले कदम चाल्नु हुनेछ भन्ने आशा गर्दछु ।

भक्तपुर जिल्लाको गाउँ तथा नगरका जनता अझै पनि खानेपानी र सरसफाईको सुविधाबाट लाभान्वित हुन सकेका छैनन् ।

अधिकांश गाउँ तथा नगरका वडाहरुमा अझै

पनि खानेपानी आपूर्तिका लागि घर परिवारको समय खेर गैरहेको छ।

हाम्रो देश आज वन विनाश, भूक्षय, फोहर पानी र धुवाँलाई नियन्त्रण गर्ने अग्रिम वन्दोवस्तको अभावमा उद्योग खोल्न दिने काम र गाउँ र नगरपालिकाहरुले फोहर पानीलाई स्वच्छ बनाउने काममा देखाएको वेवास्ताले गर्दा प्रदूषणको प्रकोप बिकराल हुँदैछ। यसको रोकथाम गर्न अति आवश्यक भैसकेको छ।

प्राकृतिक मूलबाट उपलब्ध हुने पानी बिना प्रशोधन जस्ताको तस्तै उपभोक्ताहरुलाई उपलब्ध गराएको छ। यसबाट जन स्वास्थ्यमा खराब असर पर्न सकिने सम्भावना छ।

प्राकृतिक पानीको शुद्धताको जाँच गरी स्वच्छ तथा सफा पानी उपभोक्ताहरुलाई उपलब्ध गराउनमा सम्बन्धित निकायहरु दत्तचित्त भै लाग्नु पर्ने देखिन्छ।

## देशमा व्याप्त अस्तव्यस्तताबारे

१. हालै राजधानीको व्यस्त क्षेत्रहरुमा भएको हत्याकाण्डले गर्दा आम जनता यहाँ कुनै पनि समयमा जे पनि हुन सक्छन् भनी भयभीत छन्। सरकारले शान्ति सुरक्षा कायम गर्न सकेको छैन। प्रधानमन्त्रीले शान्ति सुरक्षालाई पहिलो प्राथमिकता दिने भनिए पनि सो वचन पालना गर्न सरकार पूर्णतया असफल भएको छ।

२. माओवादी समस्या राजनैतिक रुपबाट समाधान गर्नु पर्ने। माओवादीको नाममा विशेष व्यक्तिहरुलाई मार्न, थुनछेक गरी दुःख दिने कार्य बन्द गर्नुपर्ने।

३. लागू पदार्थ दुरुपयोग नियन्त्रणको लागि प्रत्येक वर्ष बजेट छुट्याई कार्यहरु भएता पनि लागु पदार्थ दुव्यसनीहरुको संख्या कमको सत्ता झन् झन् बढैरै आइरहेको पाइन्छ। कार्यक्रम सम्बन्धी सबै निकायको समन्वयमा प्रभावकारी रुपमा संचालन गर्नुपर्ने। लागु पदार्थ विक्री वितरण ओसारपसार, सेवन गर्नेहरुलाई कार्यवाही गर्दा विना कुनै भेदभाव कडा भन्दा कडा कार्यवाही गर्नुपर्ने।

यदि विगाहा जग्गामा गाजा खेती, अफिम खेती नष्ट गरियो भन्दैमा सरकारको कर्तव्य पूरा हुँदेन। गैर कानूनी रुपमा गाजा अफिमको खेती कसरी कहाँ कस्को संरक्षणमा भएको छ सो को सघन रुपमा अध्ययन विश्लेषण गरी त्यसमा प्रोत्साहन संरक्षण दिने व्यक्ति राजनैतिक, सामाजिक आदीलाई ऐन नियम बमोजियम कडा से कडा कार्यवाही गर्न सरकार पछाडि पर्नु हुँदैन। यसरी यो समस्या समाधानको लागि उपचारात्मक भन्दा प्रतिसहायक कदम चाल्नु पर्ने।

४. भ्रष्टाचार नियन्त्रण गर्ने व्यवस्था भएको विशेष प्रहरी विभाग निस्क्रिय छ। यो निकायलाई आवश्यक अधिकार तथा साधन सम्पन्न गरी प्रभावकारी रुपमा क्रियाशील नगर्ने हो भने विभागको निमित्त सरकारले ठूलो संख्यामा रहेको अधिकृत कर्मचारीहरुको व्ययभार बोक्नु औचित्यहीन छ।

५. बजार भाऊ नियन्त्रण, कालो बजारी नियन्त्रणमा स्थानीय प्रशासन निस्क्रिय छ।

६. दैवी प्रकोप, आकस्मिक कोष अन्तर्गत आर्थिक सहायता वितरणमा राजनैतिक पूर्वाग्रह राखी विवरण दिने गर्दै आइरहेको छ। विना पूर्वाधार खास आवश्यक व्यक्तिहरुलाई आर्थिक सहायता वितरण गर्ने व्यवस्था हुनु परेको छ।

७. देशको शान्ति सुरक्षाको जिम्मा लिएको गृह मन्त्रालयको बजेट गत वर्ष भन्दा चालु आर्थिक वर्षमा करीब रू. ४४ करोड ५० लाख अर्थात् १६ प्रतिशतले वृद्धि भएको छ। तर विडम्वना देशमा शान्ति सुरक्षाको स्थिति झन् झन् गए गुज्रेको अवस्थामा छ।

## जलविद्युतबारे

१. ८३ मेगावाट क्षमता भएको देशमा कुनै एउटा जलविद्युत केन्द्रमा गडबड हुनासाथ वर्षा महिनामा पनि लोडसेडिङ्गको मार खानुपर्ने अवस्था छ। करौडौं, अरबौं लागतबाट निर्मित जलविद्युत केन्द्रमा जडान भैरहेका यन्त्रहरुको नियमित रुपमा निरीक्षण सुपरिवेक्षण हुनुपर्ने र लापरवाही गर्ने कर्मचारी विशेषज्ञहरु कडा से कडा कार्यवाही हुनुपर्ने। सो बारेमा सरकारको ध्यान पुगेको देखिंदैन।

२. जलविद्युत तथा अन्य उर्जाको विकास गर्दा नवौं योजनाको गरीबी निवारण गर्ने उद्देश्यलाई दृष्टिगत

गरी ग्रामीण क्षेत्रको विकासलाई लक्षित गरेर कार्यक्रमहरु कार्यान्वयन गर्नुपर्ने, जसबाट आर्थिक, सामाजिक रुपबाट पिछडिएका जनताहरुले बढी से बढी फाइदा लिन सकोस्।

३. ठूला जलविद्युत आयोजना भन्दा स-साना जलविद्युत योजनाहरुलाई प्राथमिकता दिनुपर्ने देशको हितलाई सर्वोपरी ठानी संचालन गर्नुपर्ने र जलविद्युत आयोजनाहरु अतिरिक्त स्थानीय सीप, साधन, श्रम र प्रविधि प्रयोग गरी लघु-जलविद्युत परियोजनाहरुको विस्तारको साथै गोबर ग्याँस प्लान्ट, सौर्य विद्युत उर्जा प्लान्ट वायु उर्जा जस्तै वैकल्पिक उर्जा प्लान्ट स्थापना गर्नेतर्फ प्राथमिकता दिई कार्यक्रमहरु हुनुपर्नेमा ध्यान दिनु पर्दछ।

४. सिंचाईको लागि प्रयोग हुने विद्युतमा महसुल घटाए जस्तै घरायसी प्रयोगको लागि प्रयोग हुने विद्युतमा पनि यथासिघ्र महसुल घटाउनु आवश्यक छ। त्यसले चुहावट घट्छ।

५. विद्युत महसुल वृद्धिको एउटा काण्ड विद्युत चुहावत पनि भएकोले विद्युत चुहहावत रोकथाम कार्यक्रमलाई प्रभावकारी रुपमा संचालन गरी चुहहावत रोक्नु आवश्यक छ। विद्युत चुहावत प्राधिकरण कै कर्मचारीहरुको प्रमुख हात रहने हुँदा यस्ता गैर कानूनी कार्यमा संलग्न हुने जो सुकैलाई पनि बिना भेदभाव कडा से कडा कार्यवाही हुनुपर्छ।

६. ठूल्ठूला होटेलहरु औद्योगिक प्रतिष्ठानहरुद्वारा विद्युत चुहावत गर्नुको अतिरिक्त करौडौं करौड रकमको शुल्क पनि नतिर्ने र त्यस्तै सरकारी स्थानीय निकायहरुबाट पनि लाखौं करौडौंको शुल्क बाँकी राख्ने गरिएको देखिन्छ। प्राधिकरणले त्यस्ता निकायहरुलाई नियमानुसार कार्यवाही गरी शुल्क अशुल गर्नुको सट्टा विद्युत महसुल बढाई साधारण जनताहरुलाई दुःख दिने कार्य गरिँदै आएको छ। यस्तो कार्यलाई नियन्त्रण गरी विद्युत महसुल घटाउनु पर्छ।

७. नेपाल विद्युत प्राधिकरण व्यापारिकरणकको लागि (कुल लागत ११ करोड ८ लाख ७२ हजार) विश्व बैकको सहयोगमा आर्थिक वर्ष ०५३/५४ देखि शुरु भएको यो आयोजनाको रणनीति तयार भएको कार्यक्रम पुस्तिकामा उल्लेख छ। प्राधिकरणलाई व्यापारिकरण गर्न संचालित यस परियोजनाले तयार गरेको रणनीतिबाट सर्वसाधारण जनता तथा श्री ५ को सरकारको गतिविधि निवारण गर्ने प्रयासमा के कस्तो सहयोग प्राप्त हुने या प्रभाव पर्ने हो स्पष्ट हुनु आवश्यक छ।

मोडी खोला जस्तो विद्युत आयोजनालाई प्राथमिकता दिएर यस किसिमका आयोजनाहरु अन्य स्थानमा पनि संचालन गर्नुपर्ने उपयुक्त देखिन्छ। आफ्नै पूंजी, प्रविधि, अफ्न सीप देशले अनुभव पनि प्राप्त गर्नुछ।

भक्तपुर जिल्लामा विद्युत तालिम केन्द्रको निम्ति अधिग्रहण गरेको जग्गाबाट ठेकेदार, ठूल्ठूला कर्मचारीहरु र घर जग्गाको दलाली गर्ने व्यक्तिहरुले मात्र फाइदा प्राप्त गर्ने गरेको र जिल्लाको बजेटबाट २५ करोड विनियोजन गरेता पनि स्थानीय भक्तपुरवासीलाई कुनै फाइदा नहुने कार्य भइरहेछ। जग्गा जिल्लाको, बजेट जिल्लाको, ठूल्ठूला कर्मचारीदेखि ठेकेदार र घर जग्गा दलाली गर्नेहरुलाई पोस्न दिई भक्तपुरका जनतालाई ५० करोडको घाटा हुने भएको छ। ५० प्रतिशत मोही र जग्गा धनीलाई छुट्याउनु पर्नेमा जग्गा प्राप्ती ऐनको नामबाट किसानलाई अन्याय भएको छ। द्वैध स्वामित्वको सिद्धान्त बाफिएका सबै ऐन खारेज हुनुपर्नेमा अहिलेसम्म भएको छैन। यसको निमित्त कानून मन्त्रालय र जलस्रोत मन्त्रालयका सचिवहरु जिम्मेवार छन्।

वन र कृषि जस्तै देशको सम्पदा जलस्रोत नै हो। जलस्रोतको उचित उपयोग नहुँदा हर साल देशको लाखौं करौडौं धन वा शक्तिलाई सित्तै बगाउँदैछौं।

नदीलाई नियन्त्रण गर्ने आवश्यक व्यापक योजना नहुँदा धनजनको ठूलो राशीको क्षति पनि देश र जनताले हरेक वर्ष भोग्न बाध्य छन्।

देशमा विद्यमान जलस्रोतको परिमाण ठूलो भएता पनि हालको जल विद्युतको उत्पादन क्षमता माथि दृष्टिगत गर्दा सम्भाव्य क्षमताको दाँजोमा यसको उत्पादन नगण्य छ। देशको जलविद्युत उत्पादन शक्तिको क्षमता ८३००० मेगाबाट रहेको छ भन्ने हाल नेपालमा विभिन्न संचालित जल विद्युत केन्द्रहरुबाट जम्मा २५३ मेगाबाट मात्र उत्पादित भैरहेका छन्। देशको क्षमता भन्दा साह्रै न्यून छ। जुन सम्भाव्य क्षमताको ०.३ प्रतिशत मात्र छ।

देशको जलशक्तिको भण्डारलाई मित्र राष्ट्रहरु

सँग मिलेर देशको मुहार फेर्न सकिन्छ । विद्युत प्रचूर उत्पादनलाई छिमेकी देशलाई बेचेर आवश्यक वस्तु आपूर्ति गर्ने, दाउरा कोइला र तेलको ठाउँलाई बिजुलीबाट पूरा गरी वन विनाश वायु प्रदुषण र विदेशी मुद्राको ठूलो राशीलाई रक्षा गर्ने नीति अगाडि लैजानुपर्छ । सरकारी नीति तथा कार्यक्रमको बजेट राम्रोसँग ध्यान दिन सकेको छैन ।

जनशक्तिको विकासबाट यातायात, उद्योग, कृषि र दैनिक जीवन अर्थात् देशको चौतर्फी विकास गर्ने पक्षमा  सरकारले ध्यान पुऱ्याउन सकिरहेको छैन । तर यस्तो महत्वपूर्ण सम्पत्ति र शक्तिलाई कुने पनि पार्टीका सरकारले देश र जनताको हित विरुद्ध प्रयोग गर्न नदिन देशका अन्य राजनैतिक दलहरु सचेत हुनुपर्दछ । यस शक्तिलाई कुनै पनि मित्र राष्ट्रहरुबाट ठग्न दिनु हुनु भन्ने सोचाई प्रत्येक नेपालीले मनन गर्नुपर्दछ ।

कोशी र गण्डकी जस्ता योजना भारतले नेपाल ठगिए जस्तै अन्य नदी नालालाई बचाउनु पर्दछ भन्दा भन्दै पुनः एक चोटी महाकाली सन्धीबाट नेपाल ठगिएको छ ।

नेपाल नदीनाला नियन्त्रण गर्नुपर्ने, जलस्रोत भण्डारलाई उपयोग गरेर देश विकास कार्यमा कुनै पनि अगाडि देखा पर्न गइरहेको छैन ।

जलविद्युत विकासमा नीजि क्षेत्रलाई अरु आकर्षित गर्ने र यस क्षेत्रको भूमिकालाई वृद्धि गर्ने तर्फको अध्ययन कार्यलाई जारी राख्नेछ । नवौं योजना कालमा यी कार्यहरुमा ६ अर्ब ७२ करोड ९३ लाख खर्च हुने अनुमान गरेको छ ।

## वन व्यवस्थापन र प्रदूषणबारे

१) जिल्ला वन कार्यालयमा छिन्न बाँकी मुद्दा कति छन् ? र त्यस मध्य २ वर्ष नाघेका कति छन् ?

२) वन ऐन २०४९ मा प्रतिवादीको लागि थुन छेक गर्ने प्रावधान नै नभएकोमा अहिले सम्म सशोधन गर्ने तर्फ विधेयक प्रस्तुत गर्ने तर्फ सरकारको के सोचाई रहेको छ ।

नेपालमा बनेका ऐन मध्यमा सबभन्दा वढी विदेशी रकम लगानी भै बनेको ऐन हो यो ।

३) हालसम्म नेपालको कति जग्गामा कति संस्थामा वृक्षारोपण भैसकेको छ ?

४) प्रत्येक वर्ष सरकारी र नीजि वन नर्सरीहरुबाट कति विरुवा उत्पादन हुन्छ ?

५) अहिले गतिमा वृक्षारोपण गर्ने हो भन्ने नेपाल अधिराज्यमा कति वर्षमा रुख विरुवाले भरिन्छ ?

६) नेपाल अधिराज्यको सरकारी वन जंगल क्षेत्र, नदि किनार र सार्वजनिक क्षेत्रका बाँझो जग्गामा वृक्षारोपण कार्य सम्पन्न नगरिकनै बारा जिल्लाको विशाल जंगल फडानी गरी विदेश निर्यात गर्ने र फडानी गरेको जग्गामा वृक्षारोपण गरी वातावरण सन्तुलन गर्ने र स्थानिय जनताको आय आर्जन गर्ने राजश्व वृद्धि गर्ने कार्यक्रम कुन प्रकारको विकास मोडेल हो ? सालको जंगल फडानी गरेर विदेश निर्यान गर्ने र राजश्व बढाउने नीति घर जलाएर आगो ताप्ने र खरानी प्राप्त गर्ने जस्तो माग हुने हो होइन ? कति जंगल क्षेत्रमा त वृक्षारोपण गरी सकेको छैन भन्ने जंगल फडानी गर्नुको औचित्य के हो ?

७) वृक्षारोपण गर्न सकिने पनि बाँझो जग्गा अधिराज्यभर कति छ ?

८) विभिन्न जिल्ला वन कार्यालय र टिसीएनले सर्वसाधारण जनतालाई काठ दाउरा नबेची ठूलो ठुलो लटमा लिलामी प्रकृयाबाट काठ बेच्ने सर्वसाधारण उपभोक्तालाई मार परेको र राजश्व पनि भनेको कुरा वन मन्त्रीज्यूलाई थाहा छ कि छैन । छ भने सुधार गर्ने तर्फ के कदम चालिदै छ ।

९) वनजंगल जोगाउन घरेलु इन्धन दाउराको बिकल्प सोच्ने तर्फ सरकारको कार्यक्रम के छ ?

१०) प्रत्येक पटक गैडाको विवाद ल्याउनु भन्दा बरु नेपालको राष्ट्रिय निकुञ्जहरुमा बढी भएको भए खुल्लम खुल्ला टेण्डर गरेर नै प्रतिवर्ष गैडा र अझ वन्यजन्तु समेत पारदर्सी रुपमा बिक्री गर्नेतर्फ सरकारको के सोचाई र कार्यक्रम छ ?

वन विकासमा पहिलो वर्ष र यस वर्षको प्रगति के कति भएको छ । यसको तथ्याङ्क कार्यक्रममा उल्लेख भएको भए राम्रो हुने थियो । कार्यक्रममा उपभोक्ता समुहको प्रगति देखिन्छ ।

२७३१ हेक्टर वृक्षारोपण गर्ने लक्ष्य रहेकोमा

२६८३ हेक्टर जमिनमा वृक्षारोपण भएको अनुमान गरिएको छ।

सरकारी वन सामुदायिक वन र नीजि वनमा रकम खर्च भए अनुसार काम भएको छ छैन नियमित रुपमा अनुगमन मूल्यांकन हुने पर्ने देखिन्छ।

वन सुरक्षा र जिल्ला वन कार्यालयलाई गत वर्ष करिव २० करोड खर्च भएको छ भन्न चालु आर्थिक वर्षमा २१ करोड एक लाख २५ हजारको बजेट व्यवस्था भएको देखिन्छ।

यत्रो ठूलो रकम खर्च भएर पनि वन संरक्षण र सुरक्षा भएको छ त ?

वन संरक्षण सम्वर्दन विस्तार कार्यक्रम प्राप्त विदेशी सहायताबाट स्वदेशी विशेषज्ञ र दक्ष जनशक्ति तयार गर्न विशेष ध्यान दिनु पर्दछ।

अर्को तर्फ स्थानिय जनतालाई यस सम्बन्धि दक्षता र सीप अभिवृद्धि गर्न प्राथमिकता दिने व्यवस्था भएमा कार्यक्रमको लक्ष्य सार्थक हुने थियो। सामुदायिक तथा नीजि वन विस्तारमा आम जनताले नेपालमा उत्पादन हुने जडीबुटीहरु नेपालमा औषधी उत्पादन गर्ने कम्पनीहरुले नै प्रयोग गर्न सकिने वातावरण सृजना हुनु पर्ने देखिन्छ।

यसरी जडीबुटी प्रयोग गर्दा श्री ५ को सरकार संचालित कम्पनी शाही औषधी लिमिटेड जस्तालाई विशेष प्राथमिकता दिनु पर्छ।

हाल सरकार संचालित उद्योगहरुलाई विफल पार्न नीजि तथा विदेशी कम्पनीका एजेन्टहरुको विभिन्न आर्थिक प्रलोभन देखाई गरिरहेको दखललाई सरकारले गम्भीरतापूर्वक सोच विचार गरी रोक्नु पर्ने हो। सो कार्य गर्न सकेको छैन। सरकारले यस तर्फ ध्यान दिन पऱ्यो।

निलवाराही, नखेल, चाँगुनारायण र नगरकोटमा जलधार क्षेत्र घोषण गर्नुपर्ने।

उपत्यका भित्रका कल कारखानाहरुबाट रसायन हानिकारक रासायनिक पदार्थ र अन्य धेरै सडेगलेका वस्तुहरु खोला र नदिमा दैनिक मिल्काई रहेका छन्।

उपत्यकामा चल्ने हजारौं गाडी र झण्डै १०० यौ चिम्नी र अन्य सिमेन्ट र मार्वल खानी उद्योगहरुबाट असिमित परिमाणमा धुलो र धुवा आकाशमा उडिरहेको छ।

उपत्यकाको कुना काप्चा जताततै पक्की भवनले ढाकिंदै छन्। बाँकी भएका सीमित वन जंगल मासिंदै छन्। जसको परिणाम माटो पानी र हावा विषमय बन्दैछन्। र अनेकौं घातक रोगहरुको प्रकोप बढी रहेछ।

वर्तमान प्रदुषणको गतिलाई नरोक्ने हो भने १, २ दशक पछि उपत्यका बासीले भिषण महामारी व्यहोर्नु पर्नेछ।

यस प्रकोपलाई रोक्न वृक्षारोपण गर्ने, भू-क्षय रोक्ने, प्रौढ शिक्षा, महिला शिक्षा र पाठयक्रममा समेत वृक्षारोपण र भू-क्षय रोक्ने शिक्षा दिने र व्यापक जनतालाई वृक्षारोपण आन्दोलनमा सक्रिय गराउने कार्यमा सरकार दत्तचित भै लाग्नुपर्ने देखिन्छ।

सरकारले ध्यान दिन नसक्दा अवैध रुपले रुख ढाल्ने सेउला काट्ने नाममा रुख बिरुवा विनास गर्ने डढेलो लगाउनेलाई आवश्यक कार्यवाही गर्न नसक्नाले वन सुरक्षाकर्मीहरु असफल देखिए। यसतिर सरकारको ध्यान जाओस्।

भक्तपुर जिल्लाको नंखेल ,मध्यपुर नगरपालिका वडा नं. १ को निलबाराहीमा भैरहेको भूक्षय, दधिकोट र दुवाकोटमा भएको भूक्षयलाई रोक्न मंत्रालयको ध्यान गएको देखिन्न।

वनविनाश विना योजनाको वढ्दो शहरीकरण जनसंख्याको अनियन्त्रित वृद्धि औद्योगिक देशहरुको विवेकहीन नीतिले गर्दा प्राकतिक श्रोतहरु लोप हुदै गैरहेका छन्।

हाम्रो देश आज वनविनाश भूक्षय, फोहोर पानी र धूवाँलाई नियन्त्रण गर्ने अग्रिम वन्दोवस्तको अभावमा उद्योगहरु खोल्न दिने काम र नगरपालिकाहरुले फोहोर पानीलाई स्वच्छ बनाउने काममा देखाएको वेवास्ताले गर्दा प्रदुषणको प्रकोप विकराल हुँदैछ।

यसलाई समयमै रोक्न सकिएन भने विकास स्वयं भस्मासुरलाई वरदान हुनेछ।

हजारौं संख्यामा वृक्षारोपण कार्यमा नयाँ कर्माचारीहरु नियुक्ती गरेर वन विकास संरक्षण र रोजगारको नयाँ संघार खोल्ने।

भान्साको कामको निम्ति सस्तोमा बिजुली

उपलब्ध गराउन वैज्ञानिक चुलो सौर उर्जाबाट संचालित चुल्होहरु सस्तो र सुलभ तरिकाले बिक्री वितरण गरी काठ, दाउरा जोगाउन र धूवाँ कम गराउन नदी र पोखरीहरुलाई सफा राख्न शहरबाट बग्ने फोहोर पानीलाई उपचार पोखरीहरु वन्दोवस्त गर्ने कारखानाका दुषित पानी नदीमा बग्न नदिई त्यसको पनि उपचार पोखरी बनाउन कार्यमा सरकारले तत्काल ध्यान दिनुपर्ने देखिन्छ।

बस्ती नजिक वा बस्ती तिर धूवाँ नजाने हिसाबले मात्रै कारखानाहरु स्थापना गर्न स्वीकृत दिने नीति अपनाउनु पर्छ र हाल उद्योगहरुबाट भैरहेको प्रदुषण हटाउन एक उच्चस्तरिय जाँच आयोग स्थापना गरी आयोग मार्फत कारखाना अन्यत्र सार्ने हो वा प्रदुषण रोक्ने उपायहरुमा सरकारका ध्यान छिटो भन्दा छिटो जाओस्।

## शिक्षा योजनाबारे

नवौं योजनाको गरिबी निवारण गर्न जनताको जीवनस्तरमा सुधार ल्याउने र जिल्ला स्तरमा अनिवार्य प्राथमिक शिक्षा विशेष शिक्षा कार्यक्रम महिला शिक्षा अभिवृद्धी कार्यक्रम समेत समावेश गरी वार्षिक कार्यक्रमले अगाडि सारेको छ।

आज देशले पूंजीवादी शिक्षालाई अंगालेको छ। पूंजीवादी शिक्षाको विकासले गर्दा आज विभिन्न क्षेत्रमा जनता वितृष्णा भैरहेका छन् भने शैक्षिक क्षेत्र पनि त्यसबाट मुक्त छैन।

पूंजीवादी शिक्षा सीप मुलक र वैज्ञानिक छैन। महंगीले गर्दा झन् गरिब जनताले शिक्षाको उपभोग गर्न सकिरहेका छैन।

आज हाम्रो देशको शिक्षा नीतिमा १०० अंकको परिक्षा हुन्छ। त्यस १०० अंकको परिक्षामा ६८ त माफी गरेको हुन्छ मात्र ३२ अंक प्राप्त गर्ने परिक्षार्थी पास गरेको हुन्छ।

अझ व्यक्तिमात्र होइन एस.एल.सी. दिनलाई माध्यमिक विद्यालयले १४% मात्र पास गरे। विद्यालयको इज्जत जोगिने अनुदान दिने शिक्षा नियामावली उल्लेख भएको हुँदा ८५% विद्यार्थी फेल भए पनि त्यस विद्यालयको निम्ति अनुदान पाईनै रहेको हुन्छ।

शिक्षालाई उत्पादन श्रमसँग मिलाउने नीतिअनुसार हेड स्कूल, प्राविधिक स्कूल, अन्य रोजगार मुलक शिक्षालाई जोड दिदै प्राथमिक र माध्यमिक शिक्षाको खर्चलाई उच्च शिक्षाको हाराहारीमा पुऱ्याउनु आवश्यक छ।

शिक्षाको विविध क्षेत्रहरुको रकमलाई राम्रो सदुपयोग गर्ने हो भने माध्यमिक शिक्षा मात्रै होईन उच्च शिक्षा समेतलाई निशुल्क गर्न सकिन्छ र पूर्व प्राथमिक शिक्षामा नयाँ पाईला चलाउन दिन कार्यक्रमले सोच्नु पर्ने थियो। त्यो सोचाई कार्यक्रममा रहेन।

प्राथमिक देखि उच्च शिक्षासम्म निशुल्क तर स्तरिय शिक्षाको पक्षमा दृढ रहनेछ। दूर्गम जिल्लाहरुमा निम्न माध्यमिक विद्यालयहरुमा निशुल्क छात्रवासको व्यवस्था गराउन अंग्रेजी, गणित र विज्ञान जस्ता विषयको शिक्षाको स्वर विकास गर्न, शिक्षकहरुको सघन तालिम कार्यक्रमलाई चलाउन प्रौढ शिक्षा, महिला शिक्षा, अन्य शैक्षिक तालिम चलाउन, ती तालिम प्रचारात्मक जस्तो नभई स्तर उठाउन जोड दिनुपर्छ। शिक्षक भएर पनि शिक्षा पेशाप्रति वितृष्णा भएका शिक्षकहरुलाई आ-आफ्नो रुची र योग्यता अनुसारको पेशामा पठाउनु पर्छ। उच्च शिक्षाका शिक्षकहरुको मेहनतलाई पूर्ण रुपले उपयोग गराउनु पर्छ।

पुरातात्विक र ऐतिहासिक महत्व भएका स्थल, कलात्मक वस्तु मठ-मन्दिरहरुको संरक्षण कार्यमा आवश्यक तदारुकता पुगेको छैन। प्राचीन नाचगानलाई संरक्षण र विकास गर्न सास्कृतिक एकेडेमीको व्यवस्था गर्न देशको काष्ठकला, मूर्तिकला, वास्तुकला र नाचगानलाई लोप हुनबाट बचाउने मात्र होईन। विकास गर्न पनि महाविद्यालयहरु स्थापना गराउनु आवश्यक छ।

प्राथमिक शिक्षा मातृभाषामा नै दिलाउने र मैथली अवधी, भोजपुरी, नेवारी, गुरुङ्ग, मगर, राई लिम्बु, तामाङ्ग, थारु आदि सबै राष्ट्रिय भाषा र साहित्यको विकास गर्न वहुभाषी साहित्य एकेडेमीको स्थापना गर्नुपर्छ र भएको प्रज्ञा-प्रतिष्ठानलाई अझ व्यापक बनाउनु पर्छ। सबै क्षेत्र र वर्गका युवा जनताको शारिरीक विकासको निम्ति खेलकुदको विकास गर्न सम्बन्धित संस्थालाई पूनः निर्माण गराउन र त्यसमा भएको भ्रष्टाचार र अनिमियताको व्यापक जाँच बुझ गराउनु पर्छ।

## उद्योग मन्त्रालय र उद्योग नीतिबारे

देशको औद्योगिक प्रकियालाई अगाडि बढाउन र औद्योगिक वृद्धि गर्न आ.व. ०५४/०५५ मा उद्यमी विकास तालिम प्रशिक्षक प्रशिक्षण, व्यवस्थापन सुधार तालिमको निम्ति ५० लाख २६ हजार र कार्यशाला गोष्ठी र कर्मचारीहरुलाई तालिम प्रबिधि सम्बन्धि अवलोकन भ्रमण जग्गा खरिद र कार्यालय भवन निमार्णको निम्ति ५१ लाख ७५ हजार वार्षिक कार्यक्रममा तय गरिएको छ।

काभ्रे, नवलपरासी र महेन्द्र नगरमा औद्योगिक क्षेत्र स्थापना सम्बन्धी प्रारम्भिक कार्य गर्न ७ लाख ७५ हजार छुट्याएको छ।

तालिम अवकोलन जग्गा खरीद कार्यालय भवन निर्माण र उद्योग स्थापनाको प्रारम्भिक कार्यले छुट्टयाएको आर्थिक वर्षको कार्यक्रमले उद्योगको विकास कसरी गर्न खोजिएको हो। स्पष्ट रुपमा सरकारले अगाडि सारेको छैन।

देशबाट गरिबी निवारणका लागि घरेलु तथा साना उद्योगको विकास विस्तारले पार्ने महत्वपूर्ण भूमिका निर्वाह गर्ने भएकोले यही उद्देश्य यस क्षेत्रको विकासमा बढी से बढी गरीब तथा कम आयस्तरका जन समुदायलाई समेटेर ग्रामीण क्षेत्रमा लक्षित गरेर कार्यक्रमहरु संचालन हुनु पर्ने।

हाल खुल्ला सिमानाका कारण अनियन्त्रित रुपमा भारतीय सामानहरु नेपालीहरुको दैनिक अति आवश्यकीय सामानहरु भित्री रहेको र यहाँ उत्पादित सामानहरुले ती भारतीय सामानसँग गुणस्तर मूल्य आदिमा प्रतिस्पर्धा गर्न सकिरहेको देखिंदैन।

यसकारण नेपाली घरेलु उद्योग तथा साना उद्योग संरक्षणको लागि उपयुक्त नीति तथा कार्यक्रमहरु आउनु पर्ने।

औद्योगिक उत्पादनको गुणस्तर आयम गर्न कडा ऐन कानुनको व्यवस्था हुनु पर्ने।

औद्योगिक उत्पादनमा हाल राख्ने गरी आएको उपहार कुपन प्रथालाई पूर्ण रुपमा बन्द गराउनु पर्ने।

नेपाली औद्योगिक उत्पादनले अन्तर्राष्ट्रिय क्षेत्रमा बजार पाउन सामानको गुणस्तर durability, quality आदिको साधन हुने भएकोले यसतर्फ विशेष ध्यान दिनु पर्ने।

यहाँका उद्यमीहरुले पनि नयाँ नयाँ प्रविधिबारे ज्ञान हासिल गरी व्यवहारमा ल्याउने सकियमा गुणस्तर युक्त तथा अन्तर्राष्ट्रिय प्रतिस्पर्धामा जान सकिने सामानहरु उत्पादन गर्न सक्षम हुनको साथै उत्पादकत्व बढाउन सहयोग पुग्न जाने भएकोले प्रविधि हस्तान्तरमा गरिने कार्यक्रमलाई विशेष प्राथमिकता दिई संचालन गर्नुपर्ने।

धेरै वर्ष देखि पेट्रोलियम अन्वेषणको कार्य भैरहेको भरमा के कति खर्च भयो, के कस्तो उपलब्धी स्पष्ट हुनु पर्ने अहिले सम्म उपलब्धी सन्तोषप्रद नभएमा प्रत्येक वर्ष बजेटमा छुट्टयाउने कार्य बन्द गर्नुपर्ने।

कृषि प्रधान देशलाई उद्योग प्रधान समाजमा फेर्ने पहिले १ शताब्दी लाग्दथ्यो। यातायात संचारको तिब्रतर विकास अन्तर्राष्ट्रिय सम्बन्ध विज्ञान प्रबिधि समेत बेच्ने प्रतियोगिताको कारण नेपाल जस्तो आफ्नै विशेषता भएको देशलाई औद्योगिक देशमा फेर्न आज एक शताब्दी लाग्ने छैन। तर देशलाई औद्योगिक रुपमा अगाडि बढाउन सकिएन भन्ने सम्पन्नता र आत्मनिर्भरता पनि आकाशको फल हुनेछ।

कच्चा सामानको निम्ति जति पैसा सरकारले दिएको छ। त्यस अनुसार काम भएको छ कि छैन भने कुराको जाँच गर्ने चलन छैन। यसमा ठूलाबडा मान्छेहरु शासन सत्तामा बसेका ठुलाठूला कर्मचारीहरु विशेष अधिकार प्राप्त व्यक्तिहरु संलग्न छन्। यसलाई नियन्त्रण गर्न नसकेसम्म वर्तमान सरकार पनि उद्योग विकासमा निश्चय पनि असफल हुनेछ।

हाम्रो देशको भूगोलको हामीलाई अन्य उद्योग भन्दा पर्यटन उद्योगलाई विकास गराउन आवश्यक छ। त्यस अनुसारको काम कार्यबाही वा कला र संस्कृति जोगाउने कार्यमा सरकारले आवश्यक ध्यान दिएको छैन।

नेपालमा जुन उद्देश्यको निम्ति उद्योग धन्दा स्थापना भएको छ, त्यो उद्देश्य पूर्ति भएको छैन। साथसाथै धेरै जस्तो कारखानाहरु सीमा क्षेत्रमा भएको कारणले सार्‍है गम्भिर प्रश्न खडा छ। उद्योगहरु बन्द हुँदैछन्। भारतबाट निर्वाध रुपले आउने नीतिलाई बन्द गराउनु पर्छ। सिमा क्षेत्रमा उद्योग धन्दालाई बिस्तार गर्दा

विदेशको प्रभाव नेपालको उद्योग धन्दामा पर्नेछ । त्यस प्रभावबाट जोगाउने निम्ति र रक्षाको हिसाबले पनि हाम्रो उद्योग धन्धालाई भित्री मधेशमा लानु पर्छ । अथवा अब हुने उद्योग धन्दा स्थापना भित्री मधेशतिर हुनुपर्छ ।

हिन्दुस्तान र चीन जस्ता मित्रहरु हाम्रा दायाँ र बायाँ छन् । त्यसमा राम्रा र नराम्रा पक्षहरु पनि छन् । ठूल्ठुला रुखको छहारीमा बसेका स-साना विरुवाहरु हुर्कन पनि सक्दैन । त्यसबाट जोगिनको निम्ति ती दुवै देशहरु भन्दा विकसित देशहरु या अत्याधुनिक प्रविधि भित्र्याउनका निम्ति बहुराष्ट्रिय कम्पनीहरुलाई निम्त्याउनु पर्छ ।

नत्र चाहेर पनि नचाहेर पनि प्रत्यक्ष वा अप्रत्यक्ष रुपमा हाम्रो देश बहुउपनिवेशमै फसिरहने छ ।

दुई मित्र राष्ट्रहरुको विकासको कार्यलाई सम्झेर आफ्नो मुलुकको विकास कार्यमा आफै खुट्टामा उभिन सकिने गरी उद्योग धन्दाको विकास गर्नुपर्छ ।

## संसदीय व्यवस्था र श्रम मन्त्रालयको विनियोजनबारे

श्रमिकहरुको कार्य दक्षता अभिवृद्धि गरी राष्ट्रिय तथा अन्तर्राष्ट्रिय बजारमा हुने श्रमको माग अनुरुप आपूर्ति गर्न र समाज कल्याणका लागि विभिन्न कार्यक्रम संचालन गर्न आर्थिक वर्ष ०५४/०५५ को लागि ६ करोड ३६ लाख ४८ हजार र ऊनी गलैंचा बालश्रम निवारण अन्तर्गत अनाथ बाल-बालिकाहरुको लागि कार्यक्रम संचालन गर्न १७ लाख ३५ हजार वार्षिक कार्यक्रमले तय गरेको छ ।

श्रमजीवी महिला विकास तालिम, कमैया महिला सीप विकास तालिम, ब्यवसाय जन्य सुरक्षा तथा स्वास्थ सम्बन्धी आयोजना अनौपचारिक जनसंख्या शिक्षा कार्यक्रम, सीप विकास कार्यक्रमले श्रम तथा मजदूर कल्याण होला जस्तो लाग्दैन । किनभने विभिन्न तालिमको साथसाथै सरकारले योजना कार्य संचालन गरी श्रमिक वर्गलाई रोजगार दिने बन्दोबस्त गर्नु पर्दछ । सत्तामा बस्ने पार्टीहरुले पैसा बाँडफाँड गरी कार्यकर्ता पोस्ने काम मात्र भएको छ । जनताको भनाई छ ।

देशमा दिनानुदिन बढिरहेका वेरोजगार हटाउन विभिन्न किसिमका कार्यक्रम र तालिम संचालनले ग्रामीण र शहरी क्षेत्रमा बसोबास गरेका र २ हजार व्यक्तिहरुलाई रोजगारमुलक तालिम दिने सरकारको सोच रहेता पनि रोजगार दिन सक्ने स्थिति छैन ।

तालिम प्राप्त गरेका कतिपय ब्यक्तिहरु बेरोजगार भै गरीब जीवन निर्वाह गर्न बाध्य छैन ।

गरिबी निश्चय पनि योग्यताको प्रमाणपत्र होइन । तर मजदूर वर्गको ब्यक्तित्व विकास गर्ने समान अवसरको तगारो भन्ने निश्चय हो । यसकारण समाजमा बेरोजगार र असमानताा हटाउन र ब्यक्तित्व विकास गर्न समान अवसार प्रदान गर्नु नै प्रजातान्त्रिक सिद्धान्तको अधिकार होइन र ?

नत्र घुमाई फिराई श्रमिकहरुलाई होइन उत्पादनका साधनमा स्वमित्व प्राप्त गरेका शासक वर्गलाई अर्थात अरुको श्रममा बाँच्ने वर्गलाई नै सहुलियत प्राप्त हुनेछ ।

यसकारण श्रमिक दृष्टिकोण सरकारले नलिएसम्म सीप विकास तालिम विभिन्न आयोजनाहरुको निम्ति जतिसुकै रकम कार्यक्रमले बाँडफाँड गरे पनि श्रमिक वर्गको समस्या समाधान हुने छैन ।

यसै वर्ष कर्मचारीहरुको ४२% प्रतिशत तलब वढायो भने हल्ला गरियो । वास्तवमा कर्मचारीहरुको तलब बृद्धि १२ प्रतिशत मात्र हो ।

मूल्यबृद्धिको तुलनामा यो १३% प्रतिशत तलब घटेको सरह हो ।

माथिलो दर्जाका कर्माचारीहरुको तलब हजार भन्दा बढी हुन्छ भने तल्लो कर्मचारीहरुको २, ३ सय मात्र छ ।

घुमाई, फिराई धनीलाई धनी बनाउने, गरिबलाई गरिब बनाउने काम मात्र भएको हुन्छ ।

देशमा माल सामानको भाउ दैनिक र मासिक रुपले बढ्दै जान्छ । कर्मचारीहरुको र मजदूरहरुको तलब र ज्याला २, ४ वर्षमा केही प्रतिशत मात्र बढ्छ । यस प्रकार मजदूर वर्ग चारैतिरबाट शोषित हुन्छ ।

आफूलाई मार्क्सवादी लेनिनवादी कम्युनिष्ट पार्टी भन्ने एमालेले माथिल्लो वर्ग र आफ्ना नाता गोतालाई माथि ल्याउने बाहेक मजदूर वर्गको हितको काम गरेको छैन । यसकारण यो पूंजीवादी पार्टी हो ।

वास्तवमा यो देशको सरकार पूंजीपति वर्गको

संचालक समिति हुने गर्छ। संसदीय ब्यवस्था मन्त्रालयले प्रतिनिधि सभाका सदस्यहरुलाई बिधेयक र संसदिय गतिबिधि अध्ययन गराउने हिसाबले बैठक संचालन गर्नु पर्दछ। जस्तो मलाई लाग्दछ।

हत्तार हत्तारले बिधेयक ल्याएर संसद सदस्यहरुलाई आँखा चिम्लेर हुन्छ, हुँदैन भन्नु पर्दा हत्तारले ल्याएको विधेयक संसदले अध्ययन गर्ने फुर्सद नै हुन्छ न संसद सदस्यलाई विधेयकको ज्ञान नै हुन्छ।

यसकारण संसद सदस्यहरुले अध्ययन गर्नु पर्ने समयलाई ख्याल गरी बैठक संचालन गराउन संसदीय व्यवस्था मन्त्रीको ध्यान आकर्षित गर्न चाहन्छु।

बिच बीचमा एक दुई दिन विराएर बैठक संचालक भए, गरे अध्ययन गर्ने मौका पाउन्थे।

गाडी सुविधा पाउने संसदलाई ट्याक्सी भाँडा दिनु हुँदैन। संसदीय सचिवालयको गाडी र सरकारी गाडी सुविधा दिनु हुन भन्ने जनताको भनाई छ।

## भूमिसुधार तथा व्यवस्था मन्त्रालय तथा वाणिज्य मन्त्रालयको विनियोजन शिर्षकबारे

देशमा कृषि उत्पादन बढाउन चक्लाबन्दी कार्य प्रोत्साहन गर्न र जग्गा माथिको दोहरो हक प्रणालीलाई व्यवहारमा अन्त गर्न वार्षिक कार्यक्रमले अगाडि सारेको छ।

भूमिसुधार नापी तथा सूचनाहरुलाई एकिकृत रुपमा राख्न मालपोत कार्यालयमा रहेका भूस्वमित्वका रेकर्डहरु र नाप नक्सालाई व्यवस्थित रुप दिन ०५४/०५५ को बजेट कार्यक्रमले केन्द्रिय अभिलेखालय् स्थापना गर्नेछ।

०५४/०५५मा केन्द्रिय अभिलेखालय् स्थापना गर्ने बजेट कार्यक्रमले तय् गरेको छ। २४ करोड २४ लाख २९ हजार गरिवी तथा पिछडिएका किसानहरुको उत्थान गर्ने, कमैयाहरुलाई मुक्त गर्ने र सुकुम्वासी समस्या समाधान गर्दै लाने सरकारी सोच रहेको छ।

यो हुने कुरा होइन यसको कुनै आधार छैन, यो सम्भव छैन। ३० वर्ष पंचायती सरकारले पनि यस्तै कुरा गरेको थियो।

नापीमा पनि खास खास जोताहाको नाम छुटेको छ। हाम्रो भूमि सम्बन्धी ऐनले वास्तविक जोताहालाई जग्गा दिलाउन सकिने छैन।

भूमिसुधारको कुनै योजना छैन। भूमी सुधार तथा व्यवस्था मंत्रालयको निम्ति छुट्टयाएको रकम कार्यालयमा राख्ने र कर्मचारी पाल्ने काम मात्र हुने छ।

द्वैध स्वामित्व हटाउने नाममा ८५% मोहिहरुको मोहियानीहक खोसेको छ। कमैया र सुकुम्वासीहरु मोहीयानी हकवाट वंचित गरिएका जोताहाहरु हुन। सरकारले तिनीहरुको वन्दोवस्त गर्ने योजना झुठ र वेइमानी बाहेक केही होईन। पंचायत काल देखि यो नारा जस्ताको तस्तै छ। आमूल परिवर्तन विना यो समस्या कहिले पनि सिद्धिने छैन।

अहिलेको बजेट अन्तर्गतको भूमिसुधारले कति किसानहरुलाई जोताहा हक दिने हो ? कति जग्गा धनीहरुको जग्गा खोसी गरिवहरुलाई वितरण गर्ने हो ? सत्तामा बस्ने पार्टीहरुले आफ्नो कार्यकर्ताहरुलाई बाहेक सुकुम्वासी देखेकै छैन। त्यसैले सुकुम्वासी समस्या समाधान गर्न सर्वदलिय आयोग गठन गरी वास्तविक सुकुम्वासीलाई काम, माम र कपडाको वन्दोवस्त गर्न सरकारको विचार पुऱ्याउन पऱ्यो।

राष्ट्रिय उद्योगलाई विकास गर्न निश्चित देशबाट आउने वस्तुलाई रोक लगाउने कदम सरकारले चालेमा जसले गर्दा देशको राष्ट्रिय उद्योगहरुको विकास गर्न सकिन्छ।

T.V. हरलिक्स, टुथपेष्ट जस्ता भारतीय सामानहरुको भाउ अत्यत्र बढी लिएर बजारमा बेचिदै छन्।

Black and white एक भारतीय T.V. को मुल्य १२०० भारु हो र अनेक प्रकारको कर तथा स्वभाविक नाफा राख्दा २५०० सय मात्र त्यसको मूल्य हुनु पर्नेमा बजारमा ४००० भन्दा कम छैन।

९० रुपैयाँ जाने हरलिक्सको २०० रुपैयाँमा बेचिन्छ। भन्सारमा देखाइने मूल्य र बेच्ने मूल्यमा ठूलो भिन्नता छ। त्यसलाई कडाईका साथ नियन्त्रण गरिनुपर्छ।

निर्यात प्रबन्धको लागि नेपालमा भएको तयारी पोशाक, गलैचा र हस्तकलाका सामानहरुलाई सजिलो

तरिकाबाट निर्यात गर्ने विशेष प्रयत्न हुनुपर्छ।

विदेशबाट आयात हुने बिलासिताका सामानहरुलाई रोक लगाउनु पर्छ । हाम्रो देशको जडिबुटीहरु निर्यात गरेर त्यही जडिबुटीबाट बन्ने औषधी हामीले आयात गर्दा महंगो मूल्य तिर्नु पर्ने हुन्छ। त्यसैले हाम्रो आफ्नै देशको जडिबुटीबाट औषधी उत्पादन गरेर निर्यात गर्न सकेको खण्डमा व्यापारमा असन्तुलन घट्ने छ।

## आपूर्ति मन्त्रालयमाथि बिनियोजनबारे

सर्वसाधारण जनताको लागि अभावग्रस्त क्षेत्रहरुमा खाद्यान वा अन्य आवश्यक सामाग्री पठाउनु आपूर्ति व्यवस्थाको महत्व छ। आपूर्ति मंत्रालयको एउटा काम दैनिक आवश्यकीय बस्तुहरुलाई उपभोक्ताहरु सम्म सुलभ गराई दिनु र उपलब्ध भएका ठाउँहरुबाट उपलब्ध नभएको ठाउँमा पुऱ्याउनु हो।

सर्लाहीका गोलभेडा वा अन्य तरकारी कुहिन्छ, काठमाडौंमा भारतीय तरकारी बिक्री भैरहेको हुन्छ।

कर्णाली अंचल र मुस्ताङ्गमा स्याउ कुहेको हुन्छ भन्ने काठमाडौंमा भारतीय स्याउले बजार लिएको हुन्छ। आपूर्ति मंन्त्रालयको औचित्यता के रहयो ?

आर्थिक वर्ष ०५४/०५५मा दुर्गम जिल्लाहरुमा १९ हजार मेट्रिकटन खाद्यान दुवानी गर्न सरकारले अनुदान दिने गर्दैछ। त्यसको लागि वार्षिक कार्यक्रमले १८ करोड दुवानी अनुदान व्यवस्था गरेको छ।

आधा पनि दुवानी खर्च हुँदैन । ठेकेदार र राजनैतिक कार्यकर्ताहरुको मिलोमतोमा दुवानी खर्च हुन्छ भन्ने जनताको भनाई छ । आपूर्ति मन्त्रालयको लागि आर्थिक वर्षको निमित्त सरकारले २२ करोड ६० लाखको बजेट कार्यक्रमले तर्जुमा गरेको छ।

सर्वसाधारण जनताको लागि अत्यावश्यक वस्तुहरु विदेशबाट नुन, मटितेल, दुध र अन्य सामानहरु आयात गरी दैनिक उपभोगका सामानहरु आपूर्ति गर्नुपर्ने हुन्छ।

विश्व बैंकको वार्षिक प्रतिवेदन अनुसार निर्यातको तुलनामा साढे तीन दोब्बर बढी आयात गर्ने मुलुक दुनियामा ६ वटा भन्दा बढी छैन। त्यस ६ मुलुक मध्य हाम्रो देश पनि गनेको छ। हाम्रो देशको आर्थिक स्थिति कति दरिद्र छ। त्यसै अनुमान गर्न सकिन्छ। अहिले सम्मका सरकारहरुको सफलता यसैबाट थाहा पाइन्छ।

आज देशमा रासायनिक मलको अभाव छ । सरकारले पूर्ति गर्न सकेको छैन। मलको आपूर्तिमा कम देखिनाले कृषि उत्पादन नाश हुने देखिन्छ।

अन्न निर्यात गर्ने देश आपूर्ति गर्ने देशमा परिणत हुन्छ।

दुई देशको बीचमा आयात निर्यातमा पनि कमिशनको जालोले गर्दा उपभोक्ता वर्गलाई ज्यादै कठिनाई भोग्नु परेको छ।

आपूर्ति मंत्रालयले समयमा ध्यान दिन सकिएन भने आपूर्तिमा कमि आउन साथै सर्वसाधारण जनताले बढी कठिनाई भोग्नु पर्ने हुन्छ।

नुनको भाउ बढिसकेको छ। डिजेल, पेर्टोल र मट्टितेलको भाउ बृद्धिले जनतालाई चोट पुऱ्याएको छ भन्ने बाल-बालिकाको निम्ति आयात गरिने सेरेलाक्स लाक्तोजेन र एभ्री दे दुध म्याद नाघी सक्दा पनि भारतीय पूंजीपती वर्ग कम्पनिको छाप बोकी हद म्याडको दुधलाई म्याद थपको छाप लगाउने गरेका छन्।

भारतीय पूंजीपती वर्ग नेपाल भित्री देशका कर्णधारहरुको जीवन माथि खेलवाड गर्दा पनि आपूर्ति मंत्रालय मौन छ।

ठूला बडाहरु आपूर्ति मन्त्रालयबाट कमिशन खाने गर्दछन्।

भारतीय बजारबाट आपूर्ति हुने हरेक बस्तु भारतीय मूल्यभन्दा दोब्बर तेब्बर छ । म्याद नाघेका बस्तुहरु बजारमा बेचिदै छन्।

चिनीको मूल्य सरकारले २३ रुपैंया निर्धारित गरेको हो। तर बजारमा २६ रुपैंया छ।

आपूर्ति मन्त्रालयको औचित्यता के ?

उद्योग वाणिज्य संघका अध्यक्ष मुल्मीको भनाई अनुसार यदि सरकारले ग्याँसलाई नीजि क्षेत्रमा छोड्यो भने ४९५ को दरलाई ३८० अर्थात सरकारले भन्दा कम मूल्यमा दिने हाँक दिएको छ।

आयल निगमको झापामा जग्गा खरिद गर्दा ३०

लाख एमालेले चण्डा लिएको निगमका कर्मचारीहरुले १२ महिनामा १३ महिना सम्मको बोनस खाने बिवाह भत्ता-छोरा छोरीको समेत भत्ता पाउने जस्ता सहुलियतको नाममा भएको लुट कै कारण पेट्रोलियम पदार्थको मूल्य बढेको हो भनेर जनताको भनाई छ।

आपूर्ति मंत्रालयले मूल्य अनुगमनको निम्ति १० लाख छुट्ट्याएको छ। तर स्थिति यस्तै अर्थात मूल्य बृद्धि गराउन्दै जाने हो भने त्यो रकमको औचित्यता के हो ?

नेपाल आयल निगम, नेपाल कोल्ड लिमिटेड, साल्ट ट्रेडिङ्ग कर्पोरेसन, नेशनल टेनिङ्ग लिमिटेड आदि निगमहरुको संचालक समितिमा सत्तारुढ पार्टी वा मन्त्रीका मानिसहरु मात्रै राख्ने चलन छ।

त्यस्तो ठाउँमा ती संचालक समितिहरुमा विभिन्न पार्टी र क्षेत्रका प्रतिनिधिहरु पनि राख्नु आवश्यक छ । जिल्ला जिल्लामा जन-प्रतिनिधिहरु समेत राखेर अनुगमन टोलीहरु बनाईनु पर्छ।

नेपालको परराष्ट्र नीति पञ्चशिलतामा आधारित छ।

नेपालको निम्ति मित्रराष्ट्रहरु सँग बढ्दै गएको मित्रता र सद्भावना वास्तवमा नेपाली जनताको निम्ति हुने सहयोग पर्यटन ऋण, व्यापार र सांस्कृतिक आदान प्रदानहरुले सम्पन्नताको साँचो रुप लिने सम्भावनाहरु बढ्दै गएको छ।

हाम्रो परराष्ट्र नीतिको आधार राष्ट्रहरुको स्वतन्त्रता समानता आपसी हित राष्ट्रिय अखण्डता घरेलु मामलामा हस्तक्षेप पार्ने नीति हो भन्ने साम्राज्यवादीहरुलाई खबरदारी गर्नु पनि हो । भारत र चीन हाम्रा दुबै छिमेकी मुलुक हुन्। ती दुई मुलुक हाम्रो देशको निम्ति दुई हात र दुई आखाँ जस्तै हुन्।

हिन्दुस्तानबाट आउने मालसामान हामी रोक लगाउदैनौं । चीनबाट आउने मालसामानमा हामी रोक लगाउँछौं।

त्यसले गर्दा हाम्रो देशको अर्थतन्त्रमा असर परेको छ। मुल्य बृद्धिमा यसले मद्दत गरेको छ। व्यापार एकतर्फि हुँदैछ।

देशहरुको बीचको कटुभावले आस्थिरता र अशान्तिलाई मात्र निम्त्याउने छ।

सहयोग र सदभावना होइन । यसर्थ विश्वको कुनै पनि भूभागमा शान्तिमा खल्ल ल्याउने कुत्सित प्रयास वर्तमान युगलाई समग्र विश्वलाई नै प्रभावहिन पार्ने खालको प्रयास ठहरिने हुनाले कसैलाई उपचार गर्न वा सहुलियत दिने उद्देश्यले नै कुटनैतिक क्षेत्रमा मानिस पठाउनु हुन्न।

नेपालको परराष्ट्र नीति देशको स्वतन्त्रता र सार्वभौमिकता जोगाउने खालको तेस्रो विश्वको पक्षमा शक्ति राष्ट्रहरुको बीचमा थियो । सैनिक शक्तिको दवाबको कुटनीति वा आर्थिक नाकाबन्दीको विरोधमा लक्षित हुनुपर्छ।

## आवास तथा भौतिक योजना मन्त्रालयबारे

अब्यवस्थित आवासको निम्ति सरकार जिम्मेवार छ। खोला वा नदीको किनारामा बस्ती विकास गर्न दिएर हरेक साल लाखौं रुपैंया राहतको निम्ति, तटबन्धको निम्ति सरकारले पैसा खर्च गर्दैछ।

पुरातत्व विभाग उपत्यका धार्मिक तथा सांस्कृतिक संरक्षण समिति तथा पर्यटन मन्त्रालयसँग सम्बन्धित योजनाको बीचमा समन्वय छैन । समन्वय हुनुपर्छ र पहिले एउटा मास्टर प्लान (master plan) तयार हुनुपर्छ।

मनोहराको बालुवाका कारण चाँगुनारायण मन्दिरको डाँडा र नील बाराही डाँडाको भूक्षय हुँदैछ र खानेपानी गुम्दैछ। पानीको सतह कम हुँदा उत्पादन घट्दै छ।

उपत्यकामा जुन किसिमले आवास क्षेत्रको विकास भैरहेको छ । त्यसले गर्दा उपत्यकामा अब्बल जग्गाहरु विस्तारै घट्दै गईरहेको छ।

प्रशासन निश्पक्ष इमान्दार एवं प्रतिष्पर्धी नभएसम्म अपेक्षित दायित्व पूरा हुन सक्दैन।

राजनीति र प्रशासन सम्बन्धमा चर्चा गर्दा सँधैं उठ्ने तर सधै नै औपचारिकतामा सीमित रहने भ्रष्टाचार हो।

आज कार्यालय कार्यालयमा भै रहेको भ्रष्टाचारले सीमा नाघीसकेको छ।

अब त भ्रष्टाचारीको बहुमतले इमान्दारको अल्पमतलाई बाच्नु न मर्नु जस्तो सिथितिमा पुऱ्याउनु बेर छैन ।

प्रशासनमा भएको नाताबाद कृपावाद, भ्रष्टाचार र अनियमितलाई निर्मुल गर्न प्रशासनलाई निश्चित ठूलाबडा परिवार जाति पेवा हुनबाट बचाउनु पर्छ ।

विषय वस्तुमा दक्षता र लगनशीलता बाहेक इमान्दारी देशभक्त प्रजातान्त्रिक भावना र जनताको सेवा गर्ने भावना नै कर्मचारीको महत्वपूर्ण योग्यता हो ।

प्रशासनलाई पार्टीको प्रभाव र दलिय र राजनीतिबाट टाढा राख्नु पर्छ ।

प्रशासन यन्त्र निकम्मा छ । यसले जनताको चाहनाको पूर्तिका खातिर भन्दा आफैं अस्तित्वको लागि राम्रो काम गर्न सकेको छैन ।

राजनीतिक क्षेत्रले प्रशासनलाई र प्रशासन क्षेत्रले राजनीतिक क्षेत्रलाई देखाएर केही पुग्दैन ।

अपबादका लागि ठाउँ राखेर भन्नु पर्दा दुबै क्षेत्र चोखो छैन । मिलिभगत नै चलेको छ ।

तापनि भ्रष्टाचार अख्तियार दुरुपयोग वा अरु कुनै किसिमको आर्थिक अनुशासनहिनाताको जरा र टुप्पो चाही राजनीतिक क्षेत्रमा नै छ भन्न हिचकिचाउनु पर्दैन ।

राजनीतिक क्षेत्रको आशीर्वाद र संरक्षण अलग गर्न सकेमा सार्वजनिक प्रशासन क्षेत्रको सानो ठूलो भ्रष्टाचार निरुत्साहित गर्ने वा अचूक कार्यवाही चलाउने कार्य त्यति कठिन लाग्दैन ।

राजनैतिक क्षेत्रको भ्रष्टाचार ब्यक्तिगत रुपमा मात्र होइन, ठूलठूला पार्टीहरु संचालन गर्न आवश्यक्ताको रुपमा बढ्ने भन्दा अब घट्ने वाला छैन ।

प्रशासनिक दक्षताको हास हुने कम जारी छ । यसलाई दक्ष बनाउन गरिएको लगानीबाट समाजले उपादेयता पाउन सकेको छैन ।

दक्ष एंव प्रतिस्पर्धी कर्मचारी पनि मौजूदा कर्मचारी वातावरणमा आलस्य र अल्छी देखिएका छन् । प्रशासनमा भएको हिनता बोध र भ्रष्टाचारलाई रोक्नेको निम्ति तल्लो कर्माचारीहरुको तलब माथिल्ला कर्मचारीहरुको भन्दा धेरै गुणा फरक हुनु हुन्न ।

तल्ला कर्मचारीहरुको तलबमा शत प्रतिशत बृद्धि विभागीय कर्माचारीहरुको आवासको वन्दोवस्त तिनीहरुका केटाकेटीको स्कूलको बन्दोबस्त र पदोन्नतिको निम्ति तालिम र अध्ययनको सुविधा योग्यता र दक्षताको आधारमा बिना भेदभाव दिइनुपर्छ ।

बजार भाउ संगै कर्मचारीहरुको तलब बढाउदै लगिनु आवश्यक छ । भ्रष्टाचारलाई रोकथाम गर्न माथि देखि तलसम्म अप्रेसन गर्नुपर्दछ ।

वर्तमान सरकारद्वारा भने पनि अनियमित एवं खाली पनि अन्यायपूर्ण तरिकाले गरिएको प्राबिधिक सहायक भनिएका कर्माचारीहरु सम्बन्धी हालैको मामला राजनैतिक व्यक्तिहरुबाट भएको अधिकार, नियम एवं राजस्व दुरुपयोगको उत्कर्षकै रुपमा देखा पर्दछ ।

कतिसम्म भने परिर्वतन पछिको प्रारम्भिक कालमा नै प्रजातन्त्रमा स्वतन्त्रताको उपभोगको सीमा आफ्नै किसिमको अनुशासन हुन्छ र दलीय विभाजनलाई प्रश्रय दिई गैर अधिकृत स्तरका वहालवाला कर्मचारीहरुमै भए पनि संगठन छुट दिदा राजनैतिक नेतृत्व तह पटक-पटक असजिलोमा परेको एवं सार्वजनिक प्रशासन वा मान्यता खल बल्याउने तथा वातावरण धमिल्याउने काम गरिरहेको एउटा सबभन्दा विचारणीय क्षेत्र राजनैतिक नियुक्तिको क्षेत्र भैरहेको देखिन्छ ।

## सामान्य प्रशासन मन्त्रालयबारे

प्रशासन निरपक्ष इमान्दार एवं प्रतिस्पर्धा नभएसम्म अपेक्षित प्रशासनले दायित्व पूरा गर्न सक्दैन ।

प्रशासनमा भएको नातावाद, कृपावाद, भ्रष्टाचार र अनियमितालाई निर्मूल गर्न प्रशासनलाई निश्चित ठूलाबडा परिवार र जातिका पेवा हुनेबाट बचाउनु पर्छ ।

विषय वस्तुमा दक्ष र लगनशीलता बाहेक, इमान्दारी, देशभक्ति, प्रजातान्त्रिक भावना र जनताको सेवा गर्ने भावना नै कर्मचारीको महत्वपूर्ण योग्यता हो ।

प्रशासनलाई दलिय राजनीतिकबाट टाढा राखिनु पर्छ । प्रशासनलाई छिटोछरिटो बनाउन प्रशासनिक सुधारको खाँचो छ ।

प्रशासनिक दक्षताको दास हुने क्रम जारी छ । यसलाई दक्ष बनाउन गरिएको लगानीबाट समाजले उपादेयता पाउन सकेको छैन ।

दक्ष एवं प्रतिस्पर्धा कर्मचारी पनि मौजूदा कर्मचारी वातावरणमा अल्छी देखिएका छन् ।

प्रशासनमा भएको हिनताबोध र भ्रष्टाचारलाई रोक्नको निम्ति तल्लो कर्मचारीहरुको तलब माथिल्ला कर्मचारीहरुको भन्दा धेरै गुणा फरक हुनु हुन्न ।

तल्ला कर्मचारीहरुको तलबमा शत प्रतिशत बृद्धि विभागीय कर्मचारीहरुको आवासको बन्दोबस्त ।

तिनीहरुको केटाकेटीको शिक्षाको बन्दोबस्त र पदोन्नतिको निम्ति तालिम र अध्ययनको सुविधा योग्यता जेष्ठता र दक्षताको आधारमा बिना भेद्भाव गरिनु पर्छ ।

कर्मचारीको नियुक्तिमा लोकसेवा आयोगलाई सक्रिय बनाईनु पर्दछ ।

पक्षपात गर्ने र भ्रष्टाचारी कर्मचारीहरुलाई कार्यवाही गर्नुपर्दछ ।

जिल्ला स्तरीय कर्मचारीहरुलाई सकेसम्म पाईक पर्ने ठाउँमा नियुक्ती वा सरुवा गरी दिनु पर्दछ ।

पाइक नपर्ने ठाउँमा पहिले नियुक्ति गर्ने, पछि सरुवाको लाभ लगाउने जस्ता अब्यवहारिक कार्यलाई रोक्नु पर्छ ।

बरु आधारभूत तलब वाहेक बढी काम गरेर देखाए बापत

नैतिक तथा प्राविधिक दुबै दृष्टिकोणले आफ्नो विभागमा हुने काम प्रति मन्त्री जवाफदेही हुन्छ । गम्भीर प्रकृतिको त्रुटी हुन गएमा मंत्रीले राजीनामा दिने गर्दछ ।

पाउने थप तलब पारिश्रमिक सम्बन्धी विशिष्ट व्यवस्था तर्फ पनि विचार गर्नुपर्दछ ।

प्रशासन सम्बन्धमा जे कुरा गर्दा पनि अवसर सेवा सुरक्षा तथा तलब सुविधाको अपर्याप्ततामा नै घुमी फिरी केन्द्रित हुने गरिन्छ । यी अप्रसागिंक होईन । परन्तु सेवा सुरक्षा सम्बन्धी ब्यवस्था साँच्चै सुनिश्चित गर्न जति जरुरी छ । त्यसको तुलनामा तलब सुविधा बढाउने कुरा अलोकप्रिय बन्न नचाहने कमजोरी अथवा एउटा 'श्रृङ्गार पटार' भन्दा केही लाग्दैन ।

नेपालमा कामको संस्कृति योजनावृद्व रुपमा विकास नगरी हुन्न । काम पनि कम, तलब सुविधा पनि कम काम भने कम गर्ने, तलब सुविधा चाही बढी खोज्ने विद्यमान अल्छी संस्कारलाई कर्मचारी प्रोत्साहन गर्न मिल्दैन । कर्मचारी हुनुछ भने जोतिनु पर्दछ भन्ने पार्न सकिएको छैन ।

## शिक्षा नीतिबारे

वर्तमान अवस्थामा विद्यालय संख्या वृद्धि नौलो होइन । जिल्ला शिक्षा कार्यालयले विद्यालय प्रति ध्यान पुर्‍याउन नसक्दा विद्यालयमा अनियमितता बढेको छ भने कतिपय ठाउँमा समयमा विद्यालय नखोल्ने, पूरा समय पठन पाठन नहुने जस्ता गुनासोहरु सुन्ने गरेको पाइन्छ ।

जहाँ विद्यार्थी संख्याको कमी छ, त्यहाँ दरबन्दीको संख्या बढी छ । त्यस्तो किसिमको अराजक स्थितिले देशको शिक्षा नीतिलाई कसरी अगाडि बढाउने हो भने मन्त्रीको ध्यान गएको छैन । विद्यार्थी संख्या धेरै भएको स्कूलमा शिक्षक कोटा दिने गरेको छैन ।

काठमाडौं उपत्यकामा प्राथमिक विद्यालयमा निःशुल्क पुस्तक वितरण गर्ने सरकारको नीति रहेता पनि समयमा जिल्ला जिल्लामा पाठ्यपुस्तक पठाउन नसक्दा कुनै पनि अभिभावक वा विद्यार्थीले बिल शिक्षा कार्यालयमा पेश गर्दा पाठ्यपुस्तकले पाउनु पर्ने भुक्तानी आजसम्म प्राप्त नभएको कुरा सुन्ने गरिन्छ ।

दुर्गम जिल्लामा कस्तो होला, त्यसै अनुमान गर्न सकिन्छ । कांग्रेस पार्टी भित्र मात्र सरकार छ ।

देशभक्त अनुशासितशिल जनशक्तिको निर्माण गर्न शिक्षाले ठूलो भूमिका खेलेको हुन्छ । देशको प्रगति गर्ने शिक्षा नीतिमा देखा परेको अराजकताले गरिबी निवारण गर्नु खोज्नु काल्पनिक मात्र हुनेछ ।

मेरो विचारमा शिक्षालाई उत्पादन श्रमसँग मिलाउने नीतिअनुसार ट्रेड स्कूल र प्राविधिक स्कूल अन्य रोजगारमूलक शिक्षालाई जोड दिँदै माध्यमिक शिक्षाको खर्चलाई उच्च शिक्षाको हाराहारीमा पुर्‍याउनु आवश्यकलाई सरकारले यसमा ध्यान गएको छैन ।

शिक्षाको विविध क्षेत्रको रकमलाई साच्चिकै सदुपयोग गर्‍यो भन्ने माध्यमिक शिक्षाको साथसाथै उच्च शिक्षासम्म निशुल्क गर्न सकिने कुरालाई सरकारले वेवास्ता गरेको छ ।

शिक्षा क्षेत्रमा विभिन्न तहमा प्रशासक, व्यवस्थापक, निरीक्षक र विशेषज्ञ आदिको सेवा प्रवेश

तथा सेवाकालिन तालिमको व्यवस्था हुन सकेको छैन । अर्कोतिर व्यवस्थापन समितिको गठनमा सरकारले पटक पटक हस्तक्षेप गर्ने गरेको छ। हरेक सरकारको परिवर्तनमा व्यवस्थापन समितिलाई आफ्नो प्रभाव र नियन्त्रणमा राख्न प्रक्रियामा संशोधन गर्दा समिति कमजोर भएको छ। शिक्षा क्षेत्रमा सरकारले अपनाएको अराजनीति हो। यो एक उदाहरण मात्र हो।

मन्त्रीको तोक आदेशले शिक्षा समितिलाई अधिकार मिचेको छ भने विद्यालयलाई अराजक र अन्योलको स्थितिमा कतिपय शिक्षक शिक्षिकाहरुले ७, ८ महिनामा पारिश्रमिक समेत पाउन सकेको छैन।

महंगी, भ्रष्टाचार र काला बजारियाहरुलाई अनियश्रित रुपमा छोड्ने हो भन्ने जनता छिटो संगठित हुन्छ । उग्र रुपमा सडकमा ओर्लछन् र सरकार र ब्यवस्थाको आयु छोटिन्छ।

त्यसैले आफ्नो आयु लम्ब्याउन र जनतालाई भ्रममा पार्नु नै बेलाबखत केही व्यक्तिहरुलाई कार्यवाही गरी नियन्त्रन गर्ने गर्छन्। अर्को तथ्य के हो भन्ने भ्रष्टाचार र तस्करी भनेको पूंजीवादी व्यवस्थाको पर्याय जस्तै हो। भ्रष्टाचार र तस्करी रहित पूंजीवादी व्यवस्था संसारमा आजसम्म देखिएको छैन।

करिब ४ सय वर्ष पुरानो बेलायतको व्यवस्था होस् या डेढसय वर्ष पुरानो अमेरिकाको व्यवस्था या ५० वर्ष पुरानो भारतको व्यवस्था या ८ वर्ष पुरानो नेपालको व्यवस्था सबैमा भ्रष्टाचार बिद्यमान छ।

भ्रष्टाचार नियन्त्रणमा राख्न सक्ने सरकारले आफ्नो कार्यकाल पूरा गर्छ। त्यसैले सत्तामा लामो समय सम्म बस्न नै भ्रष्टाचारलाई कार्यवाही गर्नुपर्ने हुन्छ।

यद्यपि सत्तामा जाने पार्टीहरु नेपाली काँग्रेस, एमाले, राप्रपा र सदभावना पार्टी भ्रष्टाचारको बिरोध गर्छन।

राजनैतिक भ्रष्टाचारबाट विकृति र विसंगति आएको कुरा पनि गर्छन् । तर रमाइलो कुरा के छ भने नेपाली काँग्रेस र एमालेका थुप्रै नेताहरुमाथि ती पार्टीका कार्यकर्ताहरुले नै भ्रष्टाचारको आरोप पार्टी बैठक र सार्वजनिक रुपमा लगाएका छन्।

आफ्नै कार्यकर्ताबाट भ्रष्टाचारी ठहऱ्याएका नेताहरु सत्तामा पुगेर भ्रष्टाचार निमन्त्रणको कुरा गर्नु हास्यास्पद कुरा हो । वास्तवमा तिनीहरु भ्रष्टाचार नियन्त्रण गर्न प्रतिस्पर्घा गरिरहेका छैनन्। बरु भ्रष्टाचार गर्न नै सत्ताको निम्ति कुकुर भगडा गरिरहेका छन्।

यस्तो यथार्थ रहेको अवस्थामा भ्रष्टाचार, शोषण र उत्पीडन रहित व्यवस्थाको लागि अन्य मुलुकका जनताभैं आमुल परिवर्तनको निम्ति सघर्ष र आन्दोलनको बाटोमा लाग्नु बाहेक अर्को कुनै विकल्प छैन, यो निर्विवाद तथ्य हो।



**आशाकाजी बासुकला**
कोषाध्यक्ष, नेपाल मजदूर किसान पार्टी
एवंम प्रतिनिधि सभा सदस्य
चोछे टोल, भक्तपुर वडा नं. ९
नेपाल
फोन नं. ६१०१५०

**ASHAKAJI BASUKALA**
Treasure, Nepal Workers & Pesant's Party
Member of Parliament
Chhochen Tole, Bhaktapur
Ward No. 9 Nepal
Ph. No. 610150

मिति = २०५५।८।

श्री स्थानीय बिकास अधिकारीज्यू,
भक्तपुर ।

विषय : रकम निकासा गरिदिने बारे ।

आ.व. ०५५।५६ बिकास कार्यक्रम बजेटबाट यस जिल्लाको क्षेत्र नं. २ मा तल उल्लेखित स्थानको उल्लेखित शिर्षकहरुमा उल्लेख बमोजिम रकम निकासा गरी कार्य सम्पादन गर्न यो सिफारिस पठाएको छु ।

| | |
|---|---|
| १. गुण्डु गा.वि.स. वडा नं.३ सिसनाम गालमा स्वास्थ्य चौकी भवन निर्माण | रु.२५,०००।- |
| २. गुण्डु गा.वि.स. वडा नं.६ र ७ मा खा.पा. योजना | रु.५०,०००।- |
| ३. कटुञ्जे गा.वि.स. नेवार मशानघात निर्माण (दधिकोट-७) | रु.२५,०००।- |
| ४. चित्तपोल गा.वि.स. वडा नं. ३ भद्रकालीमा मन्दिर अगाडीको चोकमा ईटा छपाई | रु.३०,०००।- |
| ५. नंखेल गा.वि.स. वडा नं.२ नासिंडोल माथिल्लो सिंचाई बाध र कुलो निमार्ण | रु.२५,०००।- |
| ६. दधिकोट गा.वि.स पकान्डोल सिकारीतारमा पहिरो रोकथाम | रु.२०,०००।- |
| ७: सिपाडोल गा.वि.स गणेश नि.मा.वि.को कोठा थप | रु.३०,०००।- |
| ८. मध्यपुर नपा वडा नं.९ पोवुमा ईटा छपाई | रु.४०,०००।- |
| ९. मध्यपुर नपा वडा नं.१० मा ईटा छपाई | रु.४०,०००।- |
| १०. मध्यपुर नपा वडा नं.१४ ढल निकास र ईटा छपाई | रु.७२,०००।- |
| ११. बालकोट गा.वि.स. वडा नं.४ ईटा छपाई र चौतारा निर्माण | रु.२०,०००।- |
| १२. सिरुटार गा.वि.स. | रु.१५,०००।- |

nwpp.le/letter/parlia3

२

# पतिको सम्झनामा...



**श्रीमती नकली बासुकला**

मेरो उहाँसित मागी विवाह भएको हो । हाम्रो विवाह भएको एकवर्षपछि नै उहाँ जेल पर्नुभयो । मलाई राजनीति भनेको थाहा थिएन । मैले पढेको थिइनँ । उहाँले मलाई अक्षर चिनाउन धेरै कोशिश गर्नुभयो । खेतमा दिनभरि कामको थकाइले राती निद्रा लाग्ने भएपछि मैले लेखपढ गर्नै सकिनँ । त्यसपछि उहाँले मलाई अक्षर चिनाउन/पढाउन छाडी दिनुभयो ।

म सधैँ सासु ससुरासँग खेतमा काम गर्न जान्थेँ । सुत्केरी हुने बेला म घर हुँदा उहाँले पार्टीलाई भनी कोठाबाट धान लानुहुन्थ्यो । धान कम भयो भनेर सासु  ससुराले मलाई चोरेको भन्नुहोला भनेर पीर पर्दथ्यो । यस कुरामा उहाँसित मैले धेरै नै गुनासो गर्दथेँ । पहिला वडाध्यक्ष पदको निर्वाचनमा उम्मेदवार हुँदा पराजीत हुनुभयो । छालिङमा रहेको घरमा कुखुरापालन पनि गरेकाले हामी त्यही घरमा सुत्थ्यौं । सासु ससुरा र मेरा ठूला छोराछोरीहरु चोर्छेंको घरमा सुत्थे । उहाँ राती अबेरसम्म पनि घर आउनु हुन्नथ्यो । मेरो एक निद्रा पुगिसक्दा पनि उहाँ आउनुहुन्नथ्यो । म एक्लै खेतको घरमा उहाँलाई कुरिरहन्थेँ । कहिलेकाहीँ भोज भएको बेला मात्र घर आउँथेँ । राती १०-११ बजेतिर मलाई साइकल पछाडि राखेर खेतको घरमा लानुहुन्थ्यो ।

२०४३ सालमा सासू बित्नुभयो । त्यसपछि ममाथि घरको जिम्मेवारी थपियो । सासु बितेको ६ महिना नबित्दै उहाँ स्कूलको स्थायी जागिर छोडेर प्रधानपञ्च पदमा विजयी हुनुभयो । उहाँ विजयी हुनु भएपनि सरकारी शिक्षक जागीर छाडेर राजनीतिमा लाग्नुभएकोले मलाई पटक्कै खुशी थिएन । जागीर छोड्दा सञ्चय कोषबाट प्राप्त रकमबाट एउटा टेलिभिजन ल्याउनु भयो । म राजनीतिमा रुची नराख्ने हुँदा म आफ्नै घरकाममा हुन्थें । ०४५ सालको ह्योजु काण्डमा त २० महिना नै जेल बस्नुभयो । बच्चाहरु हुर्काउने पढाउने मैले नै गर्नुपर्‍यो । भात, तरकारी र दिउँसो खाजा खुवाउन भन्दा पनि छोराछोरीलाई पढाउन मुश्किल थियो । कमाउने मान्छे नै जेल परेपछि असाध्यै गाह्रो भएको थियो । त्यसैले मैले चिउरा कुट्ने, रक्सी पारेर बेच्ने काम गरेर पनि छोराछोरीलाई पढाएँ । ट्रलिबसमा बसेर काठमाडौंको जेलमा भेट्न जान्थें । छोराछोरीले बुबालाई भेट्न जान्छु भन्दा पनि गाडी भाडा दिन नसक्ने अवस्था थियो ।

उहाँ जेलबाट फर्किसकेपछि पनि समस्या बढिरहेको थियो । उहाँको जागिर नभएकोले छालिङको घरमै कुखुरापालन गरेँ । त्यसपछि उहाँ सांसद हुनुभयो । पार्टीले चार हजार मात्रै तलब दिन्थ्यो । त्यही भएर घर खर्च गर्न झन् धौ धौ परेको थियो । छोराछोरीलाई क्याम्पस जानको लागि पैसा माग्दा दिन नसकेपछि धेरै घुर्की सुन्नु परेको थियो । छोरीहरुले त यतिसम्म भने कि 'पढ्न त पढायो तर घाँटी थिचेर पढायो' । त्यसैले मलाई उहाँ सांसद भए पनि पटक्कै खुशी थिइनँ । उहाँ सांसद हुँदा आफन्तले पनि जागिर मिलाइ दिएन भनेर घुर्की सुनाउँथे । राजनीति त शत्रु कमाउने पेशा जस्तो लाग्थ्यो । नाम मात्रै हुन्थ्यो, पेट रित्तै । यसरी दुःख गरी हुर्किएकाले मेरा बच्चाहरु कोही पनि राजनीतिमा लागेनन् । प्रधानपञ्च र सांसद हुँदा उहाँसित म एक दुइ पटक काठमाडौंमा राजा रानीको भोजमा पनि गएको छु । उहाँ भने त्यस्तो भोजमा केही खानु हुन्नथ्यो । भोज गएर फर्केर घरमा खानु हुन्थ्यो । म अरु भाषा पनि नबुझ्ने भएकोले कसैसित कुराकानी पनि गर्दिनथें । भोजको प्लेटमा खाना लिएर एकान्तमा गएर खान्थें । घर फर्किएपछि मलाई उहाँले त्यसरी मेरो बेइज्जत हुने गरी खाने हो भनेर गाली गर्नुहुन्थ्यो । भोक लाग्यो, खाइदिएँ भनेर जवाफ दिन्थें ।

उहाँ कहिलेकाहीँ फूर्सद हुँदा खेतमा काम गर्न पनि आउनुहुन्थ्यो । मलाई त उहाँ सधैँ हामीसँगै खेतमा काम गर्न आउनुभए हुन्थ्यो जस्तो लाग्थ्यो । छोरा छोरीहरु धेरै भए पनि स्कूल जानुपर्ने भएकोले खेतमा काम गर्न खेताला राख्नुपर्थ्यो । उहाँ खेत आउँदा पनि खेतालासँग राजनीतिक गफ गरेर दंग पार्नुहुन्थ्यो । खेतालासँग गफ गरेपछि काम त्यति अगाडि बढ्दैनथ्यो ।

एकपटक मिबाछेँमा रहेको घरमा टोलकै एक भाइले भाउजु २ किलो स्याउ लिनुस् भनेर दिन ल्याए । मैले सहर्ष स्वीकार गरेर लिएँ । त्यही कुरा मैले उहाँलाई सुनाएँ । त्यसपछि उहाँ मसँग जंगिनुभयो । स्याउ किन लिएकी, स्याउ दिन ल्याएको अर्थ थाहा छ ? घुमाउरो पाराले जागिर खुवाइ देउ भनेको । मैले कहाँ जागिर खुवाउन सक्छु भनेर कराउनुभयो । उहाँ घर आउनु भएको देखेर स्याउ दिने भाइ पनि पछिपछि आएको थियो क्यारे, हामीलाई थाहै थिएन । भोलिपल्ट त्यो भाइ म मात्र भएको बेला आएर हिजो दाइले तपाईंलाई गाली गरेको सुनेर डरले तलैबाट स्याऊ फिर्ता लगेँ भन्यो ।

सांसद हुँदा आर्थिक अवस्था राम्ररो नहुँदा हामी ऋणमा थियौं । ऋणै गरी उहाँले घर बनाउनु भो । छोराछोरीहरुले आफ्ना बुबालाई नभनी मलाई ऋण लिएर किन घर बनाएको भनेर गुनासो पोख्छन् । घर बनाएकोले पार्टीले छानबिन पनि गऱ्यो । उहाँ बित्नु हुँदा आठ लाख ऋण थियो । महिनामा १७ हजार त ब्याजै तिर्नु पर्दथ्यो । छोरीहरु दुइजनाको बिहे भैसकेको थियो । अरु सानै थिए । पढ्दै थिए । कमाइ थिएन । यस्तोमा छोराछोरीहरुलाई पढाउनु पनि थियो । खेत बेचेर पढाएँ । उहाँ बितेपछि पनि एक दुइपटक म पनि जुलुसमा गइदिएकी छु । उहाँ बितेपछि एकपटक नेपालभाषा साहित्य तःमुँज्याको २५ औं वार्षिकोत्सवमा मलाई उहाँको नाममा सम्मान दिन बोलायो । दोसल्ला ओढाएर सम्मान दिएको थियो ।

(स्वर्गीय आशाकाजी बासुकला स्मृति प्रतिष्ठानकी संरक्षकसितको कुराकानीमा आधारित)



**भक्तपुर नगरपालिकाको प्रधानपञ्चमा विजयी भएपछि विजय यात्राका क्रममा आफ्नै घरको आँगन चोछेँमा जीवनसंगिनीबाट पहिलो सगुन लिंदै आशाकाजी बासुकला**

# मिलनसार सांसद मित्र



**झलकनाथ वाग्ले**
**पूर्व सांसद, प्रतिनिधिसभा,**
**जाजरकोट (नेपाली कांग्रेस)**

स्वर्गीय माननीय आशाकाजी बासुकला २०५१ सालको संसदमा भक्तपुर जिल्ला क्षेत्र नं २ बाट निर्वाचित सदस्य हुनुहुन्थ्यो । हामी एउटै समकक्षी भएर संसदमा सँगसँगै रह्यौं । उहाँ अत्यन्तै मिलनसार, मृदुभाषी, न्यायिक कुरा र जायज कुरा संसदमा उठाउनु हुन्थ्यो । हामी सिद्धान्तको आधारमा राजनैतिक दल अलग अलग भएपनि राष्ट्रिय विषयवस्तुहरुमा हामी समान विचार राख्थ्यौं । हामी सल्लाह गरेर नै संसदमा राष्ट्रिय मुद्दाहरुमा आवाज उठाउँथ्यौं । जनता र देशप्रति अत्यन्तै संवेदनशील कुराहरु राख्ने र सुन्ने व्यक्तित्व हुनुहुन्थ्यो उहाँ । अल्पायुमै उहाँको निधन भएकोमा हामी दुःखी छौं ।

उहाँको परिवारकातर्फबाट गठित आशाकाजी बासुकला स्मृति प्रतिष्ठानले उहाँको स्मृति ग्रन्थ प्रकाशन गर्न लागेकोमा मलाई असाध्यै खुशी लगिरहेको छ। म सूदूरपश्चिम दूर्गम जाजरकोट जिल्लाको क्षेत्र नम्बर १ का प्रतिनिधि र उहाँ भक्तपुर जिल्लाको २ नम्बर क्षेत्रको प्रतिनिधि । हामी सामाजिक र राजनैतिक संस्कार अलग अलग भए पनि राष्ट्रिय मुद्दाहरुमा एउटै अभिमत संसदमा आवाज उठाउने स्मरण छ। म उहाँ प्रति आदर सम्मान साथै श्रध्दाञ्जली गर्दछु।

# सरल र इमान्दार : आशाकाजी बासुकला



**रघु पन्त**
**पूर्व सांसद, नेकपा एमाले**

वि.सं. २०५१ सालमा म पहिलोपल्ट सांसद निर्वाचित भएको थिएँ । संसद सदस्यको निर्वाचनमा उम्मेदवार हुनुभन्दा अघि म नेपाल पत्रकार महासंघको महासचिवका रुपमा सञ्चार जगत् र नेकपा एमालेको कार्यकर्ताका रुपमा क्रियाशील थिएँ । पार्टीले ललितपुरको ३ नम्बर निर्वाचन क्षेत्रबाट चुनाव लड्न टिकट दिएपछि पत्रकार महासंघको महासचिव पदबाट राजीनामा दिएर म चुनावमा होमिएको थिएँ ।

आशाकाजी बासुकला भक्तपुरको २ नम्बर क्षेत्रबाट निर्वाचित हुनुभएको थियो । एकआपसमा जोडिएका छिमेकी जिल्लाका सांसद हामीहरुको भेट संसद चलेको बेलामा दिनहुँजसो भैरहन्थ्यो ।

म 'ओ पासा, छु दु हालखबर ? (ओ साथी, के छ हालखबर ?) भनेर सोध्ने गर्थें । कहिलेकाहीँ चाहीँ 'के छ कामरेड ?' भनेर सम्बोधन गर्थें । भक्तपुरे नेवारको आफ्नै शैलीमा उहाँ 'ठीकै छ पासा' भनेर जवाफ दिने गर्नुहुन्थ्यो ।

म संसदको विकास समितिमा थिएँ भने उहाँ पनि नेपाल मजदुर किसान पार्टीका सांसदका रुपमा विकास समितिको सदस्यका रुपमा पटक-पटक बैठकमा भेट हुन थालेपछि बिस्तारै उहाँसँग मित्रता गाठो हुँदै गयो र खुलेर कुराकानी हुन थाल्यो ।

आशाकाजी आफूलाई 'म किसानको प्रतिनिधि' भनेर भन्नुहुन्थ्यो र उहाँ वास्तवमा हुन पनि किसान जस्तै नै हुनुहुन्थ्यो । अत्यन्त सोझो र इमान्दार । बनावटी कुरा गर्न नजान्ने । उहाँलाई म बेला बेलामा जिस्काउँथे । उहाँ पनि मुसुमुसु हाँसेर व्यङ्ग्यको जवाफ व्यङ्ग्य नै गरेर दिन खोज्नु हुन्थ्यो, तर राम्ररी दिन जान्नु हुन्थेन ।

समितिमा विधेयकबारे छलफल हुँदा कतिपय विषयहरुमा हामी छलफल गर्थ्यौं र साझा धारणा बनाउने गर्थ्यौं । उहाँ नबुझेको कतिपय कुरा मसँग सोध्नुहुन्थ्यो । आफ्ना शंकाहरु र अस्पष्टताहरुबारे चौरमा बसेर उहाँले सोध्नुहुन्थ्यो । किसानको छोरो भएकाले र बढी नेवारी भाषामा कुरा गर्ने भएकाले उहाँलाई कहिलेकाहीँ नेपालीमा अलि लामो समय बोल्नुपर्दा अप्ठ्यारो अनुभव गर्नुहुन्थ्यो । यही काराले पनि होला, संसदको शून्य समय लगायत कतिपय विषयमा बोल्नुपर्दा उहाँले लिखित टिपोट झिकेर बोल्ने गर्नुहुन्थ्यो । पार्टीको धाराणा व्यक्त गर्नुपर्ने विषयमा त अक्सर उहाँले लिखित टिपोट हेरेर नै बोल्नुहुन्थ्यो ।

कहिलेकाहीँ हामी संसदको क्यान्टिनमा सँगै खाजा खान्थ्यौं । अनौपचारिक गफहरु हुँदै जान थालेपछि उहाँ मसँग कुराकानीमा खुल्दै जान थाल्नु भएको थियो । त्यसले गर्दा हामी आ-आफ्नो पार्टी भित्रको अवस्था र राष्ट्रिय राजनीतिबारे पनि बेला बेलामा आपसमा चर्चा गर्थ्यौं ।

जति जति उहाँसँग नजिकिँदै गयो, त्यति त्यति उहाँको सरल स्वभाव र इमान्दार व्यक्तित्व देखिँदै गयो । छक्कापञ्जा र बनावटी कुरा नगर्ने, आफ्नो पार्टी र त्यसको नीतिप्रति निष्ठावान् रहन खोज्ने एउटा सरल राजनीतिक कार्यकर्ताको गुण उहाँमा थियो । उहाँ मसँग नेपालीमा कुरा गर्दै जाँदा बेला बेलामा नेवारी भाषामा पनि मिसाएर कुरा गर्नुहुन्थ्यो ।

तात्कालीन सञ्चारमन्त्री चिरञ्जीवी वाग्लेको नेतृत्वमा सांसदहर सहितको प्रतिनिधि मण्डल जापान जाँदा आशाकाजी बासुकला र म सँगै थियौं । जापान भ्रमणका क्रममा हाम्रो मित्रता झन् अनौपचारिक र आत्मीय साथीको जस्तै हुन पुग्यो । त्यसबेला उहाँले आफू पञ्चायतकालमा भक्तपुर नगर पञ्चायतको प्रमुखमा जितेर काम गर्दा र भूमिगत रुपमा



बामपन्थी कार्यकर्ताका रुपमा काम गर्दाको अनुभवहरु सुनाउनु भएको थियो ।

उहाँले दोस्रोपल्ट सांसदको चुनाव लड्नु भएन । उहाँको ठाउँमा नेमकिपाको तर्फबाट सुनिल प्रजापतिले निर्वाचन लड्नु भयो जस्तो लाग्छ ।

हाम्रो भेट अक्सर संसदमै हुने गथ्र्यो । उहाँ दोस्रोपल्ट सांसद नबनेपछि उहाँसँगको भेटघाट कम हुँदै गयो । तर उहाँको आफ्नै पाराको बोल्ने शैली, सरल स्वभाव र इमान्दार व्यक्तित्व भने मेरो मनमा निरन्तर रहँदै आएको छ ।

आशाकाजी बासुकला आज हामी बीच हुनुहुन्न । तर संसदमा सांसदका रुपमा उहाँसँग बिताएका कतिपय रमाइला क्षणहरु मेरो स्मृतिमा ताजै छन् । उहाँको सरल स्वभाव सबैलाई मन पथ्र्यो । दिवंगत बासुकलाप्रति सम्झना सुमन र श्रद्धाञ्जली ।

# आशाकाजी दाई, स्मृतिमा अझै ज्यूँदै हुनुहुन्छ



**ओमचरण अमात्य**

वर्ष ठ्याक्कै स्मरणमा नभए पनि तिथि चाहीँ स्मृतिमा अझै ताजा छ। महाअष्टमी अर्थात् दशैंको अष्टमी अर्थात् नेवारहरुबीच कूछिभ्वयूको दिन। सर्वत्र रमाइलोले छोपेको त्यो दिन... तर अनायासै एउटा दुःखद् समाचारले सबैलाई विह्वल बनायो। आशाकाजी बासुकला... दाजु भने पनि मित्र भने पनि, साँचोमा एकजना शुभचिन्तक। अचानक बित्नु भो रे। समाचार अपत्यारिलो भए पनि असत्य भने थिएन।

कुनै अज्ञात रोगबाट थलिएको त तीन चार दिनअघि नै थाहा थियो, तर त्यति नै मरणको कारण बन्ला भनेर सोचेकै थिइनँ। देहत्याग गर्नु तीन वा चार दिनअघि मलीन शव्दमा साँझ फोन गर्नुभएका आशाकाजी दाईका शव्दमा थोरै आक्रोश र थोरै निराशाको मिश्रण थियो। 'गुठी' भित्र कसैको अचाक्ली बलमिचाइमा परेको र ऊसँग बोल्ती नै बन्द भएको भन्दै गर्दा मैले सान्त्वना दिन खोजेथें, "यस्तै हो सबैतिर। तैपनि नबिराउनू, नडराउनू। ... तर ठाउँमा भन्न सक्नु पऱ्यो नि त दाईले।"

"भन्न त कति भनें, भनें, तर केही सुनवाइ भएन। ... आफू लप्पन छप्पन नजान्ने, ठाउँको ठाउँमै मलाई नै उल्लू बनाइदिए नि उल्टै। ... हेर ओम, यहाँ 'अल्लाह' मेहरबान भएपछि 'गधा' पनि पहलमान हुने रैछ।" उखान पुरानै भए पनि सन्दर्भ भने नयाँ थियो। तर पछि झनै उदेक लाग्यो, 'अल्लाह'को असीम मेहरबानी प्राप्त गरेको, बोल्ती नै भइसकेको उही आशाकाजी दाईको श्रद्धाञ्जलीसभामा उहाँको 'गुण' वर्णन गर्न भने पछाडि परेनन्।

सारमा मैले र अरु धेरैले यही देखे, आफ्नो रसिक बोली र व्यबहारले दुनियाँलाई हँसाइरहने उनै आशाकाजी दाई अन्तिममा चित्त खुम्च्याएर यो संसारबाट बिदा हुनुभयो।

आशाकाजी दाईको रसिक बोली र व्यबहार सबैभन्दा बढी ०४५ साल काण्डपछि जेलमा बढी देख्न पाएँ। जनविरोधी राज्यसत्ताको फासिवादी चरित्र र असहमतिको 'अ' सम्म पनि सुन्न नसक्ने संकीर्ण नेताको पोलपोट शैलीका कारण बिना कसूर २० महिना जेल बस्नु पर्दा 'नेपाल-चीन-भारतबीचको त्रिदेशीय सम्बन्धका आयामहरु (सन् १८५६-१९८९)' बिषयक मेरो विद्यावारिधी गर्ने मनोकांक्षा जम्मा गरिसकिएका पुस्तक र अन्य सन्दर्भ सामग्रीहरुसँगै अलप भएको पीडा त मनमा छँदै थियो, तर त्यहीँ विश्वविद्यालयहरुले दिन नसकेको ज्ञान आर्जन हुन सकेकोमा एक हदसम्म चित्त बुझाउने ठाउँ पनि रहेकै छ। दुःख र पीडाका ती क्षणमा आशाकाजी दाई सबैलाई कुनै न कुनै सतही गफै गरेर भए पनि हँसाइ रहनुहुन्थ्यो। त्यही भएर जेलभित्रको जमघटमा उहाँलाई नेपाल क्रान्तिकारी गफाडी संघको अध्यक्ष भनेर जिस्क्याउँथ्यौं। धेरै साथीभाईको जमघट र त्यसमा पनि उहाँको उपस्थिति नरहेको भए २० महिना काट्न त्यति सहज नहुँदो हो।

अरुभन्दा पनि जेलभित्र बढी उठबस हामीबीच नै भयो। कहिलेकाहीँ 'बुर्जुवा शिक्षा' बहिष्कार गर्न नेतृत्वले सिकाएका कारण आफू स्नातकभन्दा माथि उठ्न नसकेको गुनासो उहाँ बेलाबेलामा गरिरहनु हुन्थ्यो, तर पनि समग्रमा जे आयो त्यसैलाई सहज रुपमा नै लिनु भयो उहाँले। जेलभित्रको उराठलाग्दो वातावरणमा हामी नै थियौं जसले चरम यातना सहेर पनि अन्यायको अगाडि झुकेनौं, अत्याचारको प्रतिकार गर्न छाडेनौं। त्यही भएर त्यो बेला सबैभन्दा बढी शारीरिक यातना सहने मध्येमा मै थिएँ भने त्यसपछि आशाकाजी दाई। जेलमा भेट्न आएका कसैलाई पनि हामीले "भाईचा, राजाका फलाना फलाना सचिवहरु फलानो फलानो ठाउँमा बस्छन्, उनीहरु कहाँ बिहान सबेरै पुगेर बिन्ती बिसाऊ है" भनेनौं, न जेल बाहिर आइसकेपछि हामी कहिल्यै 'बाहिर बाहिर क्रान्तिकारी, भित्रभित्र आज्ञाकारी' नै बन्यौं। हामीलाई पछिसम्म

पनि गौरव लागिरह्यो, भनाइ र गराइबीचको दूरी हामीले कहिल्यै बनाएनौं, न हामी कहिल्यै बाहिर एउटा, भित्र अर्को बन्यौं । दशैंको टिका लगाउने बहानामा आएकाहरुले योग्यता अनुसारको सरकारी पद दिने वा व्यवसायमा लाग्ने हो भने पुँजी दिने प्रस्ताव समेत तिरष्कार गरियो, तर पनि गर्धनलाई झुक्न दिइएन । उमेरमा मेल नभए पनि विचार र आदर्शमा दूरी रहेन, त्यही कारणले हामीबीच मित्रवत् घोचपेच भइरहन्थ्यो, तर पनि जुन आत्मीय सम्बन्ध रह्यो त्यो अब्बल नै रह्यो । जीवित रहनु भएको भए अझै धेरै पाइलाहरु सँगै हिँडिन्थ्यो, तर समयलाई शायद त्यो मञ्जुर थिएन । भौतिक रुपमा उहाँ अहिले हामीबीच हुनुहुन्न, तर पनि त्यो बेला सम्बन्ध यस्तो बन्यो कि अहिले पनि लागिरहन्छ, स्मृतिमै सीमित भए पनि उहाँ हामीबीच नै यतै कतै हुनुहुन्छ । अन्तमा देहान्तको धेरै बर्षपछि उहाँप्रति एकपटक फेरि भित्री ह्दयदेखि नै श्रद्धाञ्जली अर्पण गर्दछु ।

भक्तपुर क्षेत्र नम्बर २ का जनताबाट निर्वाचित तत्कालीन प्रतिनिधिसभाका सदस्य तथा भक्तपुर नगरपालिकाका प्रधानपञ्च स्वर्गीय आशाकाजी बासुकलाको स्मृतिमा उहाँको परिवारजनको प्रयासबाट प्रकाशित स्मृति ग्रन्थ सबै पाठकका लागि उपयोगी र प्रेरणादायी बन्न सकोस भन्ने शुभेच्छा व्यक्त गर्दछु ।

## पुष्पाञ्जली सहकारी संस्था लि.

**कौशलटार, भक्तपुर**

भक्तपुर जिल्लाका पूर्व जनप्रतिनिधि प्रधानपञ्च साथै सांसद स्वर्गीय आशाकाजी बासुकलाको स्मृतिमा प्रकाशित यस स्मृति ग्रन्थले उहाँका योगदान र कृतिलाई सबैका स्मरण राख्न सफल होस् भनी हार्दिक शुभेच्छा प्रकट गर्दछौं ।

## हनुमान शक्ति चिम्नी भट्टा

**नँखेल, सूर्यविनायक नगरपालिका, भक्तपुर**

भक्तपुर क्षेत्र नम्बर २ का जनताबाट निर्वाचित तत्कालीन प्रतिनिधिसभाका सदस्य तथा भक्तपुर नगरपालिकाका प्रधानपञ्च स्वर्गीय आशाकाजी बासुकलाको स्मृतिमा उहाँको परिवारजनबाट प्रकाशित स्मृति ग्रन्थ सबै पाठकका लागि उपयोगी र प्रेरणादायी बनोस् ।

## रत्नप्रसाद सुवाल

**चोछैं, भक्तपुर ।**

# मार्क्सवादका शिल्पी
# क. आशाकाजी बासुकला



**डा. भरत लामिछाने**
**(नयाँ शक्ति पार्टी नेपालका केन्द्रीय कार्यकारी समिति सदस्य)**

नेपालमा जहाँनिया निरंकुश राणा शाहीतन्त्रलाई हटाउन शुक्रराज, धर्मभक्त, दशरथ र गंगालाल जस्ता महान् अग्रजहरु शहीद बने । उहाँहरुको बलिदानीसँगै थुप्रै ज्ञात-अज्ञात व्यक्तिहरुको बलिदानीले वि.सं. २००७ सालको प्रजातन्त्र नामको मात्रै व्यवस्था आएको थियो । त्यस परिवर्तनले जनचाहना पूरा हुनसकेन । त्यसमाथि शाही शासनले निरंकुश पञ्चायती व्यवस्था लाद्‌यो । जसले ३० वर्षसम्म एकछत्र शासन चलायो । त्यसका विरुद्ध पनि विभिन्न प्रकारका संघर्षहरु हुँदै जाने क्रममा ०३६ साल र ०४६ सालसम्मका ठूल्ठूला जनान्दोलनहरु हुनपुगे । बल्ल ०४६ सालमा निरंकुश पञ्चायती व्यवस्थालाई अंकुशसम्म लगाई संवैधानिक राजतन्त्रात्मक व्यवस्था अर्थात् बहुदलीय व्यवस्था आयो । तर जनचाहना र अपेक्षा त्यति मात्र थिएन । लामो कालखण्डदेखि जिउँदो रहँदै आएको सामन्तवादी व्यवस्थाका विरुद्धका संघर्षहरुले राजतन्त्रलाई सम्वैधानिक मात्र नबनाई सामन्तवादी व्यवस्थाको नाइके राजा अर्थात् राजतन्त्रलाई किनारा लगाई लोकतन्त्रको स्थापना गर्ने ध्येय परिवर्तनकारी जनसमुदायको रहन गएको थियो । सोका लागि सशस्त्र संघर्षदेखि जनसंघर्षसम्मका ज्वारभाटा उठ्ने क्रममा जारी रहँदै गर्दा २०६२/६३ को जनान्दोलनको उभारबाट मात्र राजतन्त्र किनारामा पुग्यो । यद्यपि त्यसका जराहरु उन्मूलन अझै भएका छैनन् ।

यसरी नेपालमा जहाँनिया राणाशाहीतन्त्रदेखि निरंकुश पञ्चायती व्यवस्था र संवैधानिक राजतन्त्रात्मक व्यवस्थासम्मको अन्त्य गरी लोकतन्त्र स्थापना गर्न थुप्रै महान् व्यक्तिहरुले शहादत प्राप्त गर्न पुगेका छन् । सर्वप्रथम ती सबै ज्ञात-अज्ञात शहीदहरुप्रति म श्रद्धा सुमन व्यक्त गर्न चाहन्छु । आन्दोलन अर्थात् संघर्षको दौरानमा शहादत प्राप्त गर्ने व्यक्तिहरुलाई शहीदहरुको कोटीबाट सम्मान गरिने चलन हाम्रो समाजमा छ । यो सकारात्मक पक्ष नै हो । तर एउटै उद्देश्यबाट हिड्ने पछि कालक्रममा मृत्यु हुनेको सम्झनाको स्तर नेपाली समाजको मनोविज्ञानले अलि फरक रुपमा लिने गरेको पाइन्छ । जीवनभर परिवर्तनका लागि भोको नाङ्गो, रुखोमैलो अवस्थाबाट जीवन गुजार्दै परिवर्तनको संघारमा पुऱ्याउने महान् नेताहरु हाम्रो देशमा थुप्रै छन् । तर ती नेताहरुलाई सम्झना गर्ने सिलसिलामा अत्यन्तै कन्जुस्याइ गरिने गरिन्छ । त्यस्ता नेताहरु मध्ये मेरो ख्यालमा भक्तपुर शहर, जो ऐतिहासिककालदेखि नेवार समुदायको बाहुल्यता रहँदै आएको शहर, जहाँ नेपाली भाषा राम्ररी बोल्न नजान्ने अधिकांश जनसंख्या छ, त्यहाँ जन्मनुभएका नेपाल मजदूर किसान पार्टीका आदरणीय नेता आशाकाजी बासुकलाले आफ्नो जीवन, जनचाहना अनुसारको व्यवस्था परिवर्तनका लागि समर्पित गर्नुभयो ।

सादा जीवन उच्च विचारका धनी आदरणीय आशाकाजी बासुकलासँग मेरो धेरै उठबस होइन । उमेर समूहका आधारमा नभए पनि उहाँले लिएको बाटो र उहाँले गरेका गतिविधि व्यवस्था परिवर्तनकै मूल लक्ष्यमा सहयात्रीहरुलाई थाहा हुनु अस्वाभाविक होइन । व्यवस्था परिवर्तनको साझा लक्ष्यमा लाग्ने क्रममा संयुक्त आन्दोलन गर्दा उहाँहरु जस्ता व्यक्तित्वहरुसँग यो पंक्तिकारले पनि धेरै कुरा सिक्ने मौका प्राप्त गरेको हो । भक्तपुरका जनताले लोकप्रिय नेता आदरणीय आशाकाजी बासुकलालाई अत्यधिक मतले विधायक जस्तो गरिमामय जिम्मेवारी सुम्पेका पनि थिए । त्यस्ता अग्रज नेतासँग संयुक्त मोर्चाका गतिविधि गर्ने अवसरमा हामीलाई पनि धेरै कुरा सिक्ने अवसर प्राप्त भएका थिए । बहुदलीय व्यवस्थाका विकृति र विसंगतिका विरुद्धको आन्दोलन तीव्र रुपमा अगाडि बढिरहेको थियो । ०५५ मा नौ वाम समूह मिलेर आफ्ना मागहरु राखेर आन्दोलनका कार्यक्रम अगाडि सारेको थियो । अर्कोतर्फ ०५२ साल फागुनदेखि ने.क.पा.




**छोरी जुनुको स्केचमा काभ्रेको घटना विवरण।**
**यो स्केच तात्कालीन समयमा श्रमिक साप्ताहिकमा छापिएको हो।**

---

(माओवादी) ले सशस्त्र जनयुद्धको घोषणा नै गरी अगाडि बढिरहेको अवस्था थियो। यसरी सशस्त्र संघर्ष र जनसंघर्षको अभ्यास गर्दै आएका जनसमुदायलाई माओवादीले उठाएको सशस्त्र जनयुद्धको अभ्यासलाई थेग्न हम्मे पर्दै आएको थियो।

न्यायप्रेमी जनसमुदायलाई अन्यायका विरुद्धको लडाईमा माग लिन अग्रसर हुन मन लागे पनि प्रतिक्रियावादी सरकारले चलाएको जनचाहना विरुद्धको 'किलो सेरा टु' नामको न्यायप्रेमी जनताको हत्यासम्म गर्ने योजनाको कार्यक्रमबाट त्रसित बनाएको थियो। तर आमूल परिवर्तनको उद्देश्य लिएका राजनीतिक दलहरुलाई प्रतिक्रियावादी सरकारका त्यस्ता योजनाले किंचित छुँदैनथ्यो। प्रतिक्रियावादीहरु कागजी बाघ हुन भन्ने कुरा पनि मार्क्सवादलाई मान्ने पार्टीहरुले राम्ररी बुझेका थिए। त्यसैले प्रतिक्रियावादी सरकारका कार्ययोजनालाई संघर्षद्वारा नै परास्त गर्न सकिने ठहरका साथ नौ वामले आफ्ना कार्यक्रम तय गर्न पुग्यो। राजधानी लगायत देशका विभिन्न जिल्लाहरुमा संघर्षका गतिविधिहरु संचालन हुँदे आए। त्यही समयमा काभ्रे जिल्लाको कटुञ्जे गा.वि.स. अध्यक्षमा समेत निर्वाचित भएका जनप्रिय इमान्दार नेता क. नन्दराज तामाङलाई प्रतिक्रियावादी सरकारको 'किलो सेरा टु' नामको अप्रेशनमा माओवादीलाई सहयोग गरेको भन्ने आरोपमा राति घरमा सुतिरहेको अवस्थामा हत्या गरी घरभन्दा केही पर खोलामा लगेर गोलीगठ्ठा र बन्दुक समेत भिराई लाश फालिदिने काम गरेको रहेछ। प्रतिक्रियावादी सरकारले त्यस प्रकारको नाङ्गो गतिविधि गरेपश्चात् सरकारको दुश्चरित्रको पर्दाफास गर्न संयुक्त जनमोर्चा नेपाल जिल्ला समिति काभ्रेका सदस्य समेत रहनुभएका क. नन्दराज तामाङको श्रद्धाञ्जली सभाको आयोजना उहाँकै निवास कटुञ्जेमा राखिएको थियो।

न्यायप्रेमी जनसमुदायलाई साथ दिन र प्रतिक्रियावादी सरकारको दुश्चरित्रको पर्दाफास गर्ने कार्यक्रम नौ वाम पार्टीहरुले ल्याई नै रहेको थियो। काभ्रेको त्यस घटनाले नौ वाम पार्टीलाई त्यसतर्फ ध्यानाकर्षण गरायो र जनचाहनाअनुसार श्रद्धाञ्जली सभामा केन्द्रीय स्तरका नेताहरु नै घटनास्थलमा उपस्थिति रहेर सम्पन्न गर्ने निधो भयो। नौ वाम पार्टीहरुले कम्तीमा एकजना केन्द्रीय स्तरका नेता घटनास्थलमा पठाउने निधो गऱ्यो। जसमा संयुक्त जनमोर्चा नेपालको तर्फबाट क. घनश्याम शर्मा पौडेल

र क. कमान सिंह लामा, ने.म.कि.पा.को तर्फबाट क. आशाकाजी बासुकला, ने.क.पा. संयुक्तको तर्फबाट नेता गणेश शाह, संयुक्त राष्ट्रिय जन आन्दोलन समितिको तर्फबाट क. शक्ति लम्साल, ने.क.पा. एमाले को तर्फबाट क. वामदेव गौतम, क. गोविन्दनाथ उप्रेती, साहित्यकार जनक प्र. हुमागाई लगायतका नेताहरु र सबै पार्टीका जिल्लास्तरका नेताहरु संयुक्त जनमोर्चाका कान्छाराम तामाङ, ने.क.पा. मालेका ओम प्रकाश लामिछाने, ने.म.कि.पा.का धर्म मानन्धर, ने.क.पा. मालेमाका विष्णुदास स्याउला लगायतका नेताहरुको सहभागितामा उक्त कार्यक्रम सम्पन्न भएको थियो ।

श्रद्धाञ्जली कार्यक्रम क.नन्दराजको घर आँगनमा राखिएको थियो । कार्यक्रम शुरु गर्दागर्दै प्रतिक्रियावादी पार्टी र प्रतिक्रियावादी सरकारको योजनामा नौ वामको उक्त कार्यक्रमलाई बिथोल्ने पूर्व योजनाअनुसार नौ वाम माथि ढुङ्गामुढा प्रहार गर्ने र सशस्त्र आक्रमण शुरु गरिन थालियो । नौ वामका साथीहरु र जनताले प्रतिकार गर्न थाले पश्चात् 'किलो शेरा टु' का सशस्त्र समूहले यो पंक्तिककारलाई लछार पछार गरी बन्दूकको कुन्जाले टाउकोमा हान्दै उनीहरुको क्याम्पमा लान खोज्दा न्यायप्रेमी जनसमुदायले खोसेर आफ्नो समूहमा ल्याउन सफल भए । क.शक्ति लम्सालको छातीमा ढुङ्गा प्रहारबाट चोट लाग्न पुगी गम्भीर घाइते हुन पुग्नु भयो । त्यसै गरी क.बोधराज त्रिपाठीलाई पनि ढुङ्गा प्रहारबाट चोट लाग्यो । अन्य नेताहरुलाई पनि चोटपटक लाग्यो । क.आशाकाजी बासुकला पनि घाइते हुनुभएको थियो । न्यायप्रेमी जनसमुदाय पनि आक्रान्त हुन पुगे । खाली खुट्टाबाट नै सशस्त्र समूहले क. वामदेव गौतममाथि विशेष लक्षित गरी भरभित्र समेत धरपकड गर्न पुगेर कार्यक्रम बिथोल्न पुगेका थिए । यसको विस्तृत चर्चा अन्य प्रसङ्गमा नै गर्नेछु । त्यस बखत क.बासुकलाले त्यस प्रकारको जघन्य आक्रमणको निडरतापूर्वक प्रतिकार गनुभयो र सबै कार्यकर्ताहरुलाई आश्वस्त बनाउनु भयो । हामी सबै रातभर दुइसय जना भन्दा बढी साथीहरु एउटै घरमा सुत्यौं । खाना पकाउने बखत शत्रुहरुले पानीको मुहानबाट पाइप काटिदिएकाले आधा रातमा खाना खानु पर्ने स्थिति आयो ।

त्यस बखत पनि क.बासुकलाले सबै साथीलाई उत्साह, उमङ्ग र जोश जाँगरका प्रशिक्षण दिनु भएको थियो । भोलीपल्ट बिहानै हामी त्यस ठाउँबाट सदरमुकाम र राजधानीतर्फ फर्कियौं । फर्किने क्रममा उहाँकै निर्देशनमा ने.म.कि.पा.को तर्फबाट बनेपामा सबै साथीहरुलाई खानपानको व्यवस्था मिलाइएको थियो । त्यसैगरी काठमाडौं बागबजार ने.क.पा. एमालेको केन्द्रीय कार्यालयमा प्रतिक्रियावादी सरकारको दुश्चरित्रको भण्डाफोर गर्न पत्रकार सम्मेलनको आयोजना गरी घटनाको पर्दाफास गरिएको थियो । यसरी क. आशाकाजी बासुकलाले त्यस बखत घटेको घटनालाई निडरतापूर्वक सामना गरी सबै साथीहरुको मनोबल बढाउने कार्यमा भूमिका खेल्नु भएको थियो । मार्क्सवादलाई व्यवहारमा प्रयोग गर्ने कुरामा उहाँ सिपालु हुनुहुन्थ्यो । भक्तपुरका न्यायप्रेमी जनसमुदायको माझमा उहाँ अत्यन्त लोकप्रिय नेता मानिनु हुन्थ्यो । त्यहाँका जनसमुदायले क. रोहित आदरणीय नेता नारायणमान बिजुक्छेपछिको दोस्रो नेताका रुपमा आदर गरेको मैले अनुभूति गरेको छु । उहाँ मार्क्सवाद क. शिल्पी नै हुनुहुन्थ्यो । यतिखेर उहाँको पार्थिव शरीर हाम्रो सामु छैन, तर उहाँले छोडेर गएका योगदानहरु अमर छन् । उहाँप्रति फेरि पनि श्रद्धासुमन व्यक्त गर्न चाहन्छु । धन्यवाद ।

# जनसम्पर्कका नेताः आशाकाजी बासुकला



**लीला न्याइच्याई**
**पूर्व सभासद, भक्तपुर**

स्व. आशाकाजी बासुकलाको स्मृतिमा ग्रन्थ प्रकाशन गर्ने कुरा उहाँकी छोरी जेनीले बताउँदा मलाई धेरै खुशी लागेको थियो । किनभने आशाकाजी सरको योगदान र व्यक्तित्वलाई नयाँ पुस्तासामु पस्किन यो भन्दा अर्को राम्रो उपाय हुन सक्दैन । त्यो भन्दा पनि अझ मलाई उत्साहित गरेको कुरा जेनीले आफूहरु अर्थात सरका सन्तानहरु सबै यो सहकार्यको लागि कार्य भइरहेको बताउँदा भयो । सजग र सचेत सन्तानको कदमलाई म धन्यवाद दिन चाहन्छु ।

त्यसो त मैले बडो दुःखका साथ भन्नु पर्दछ, कि आशाकाजी सरसँगको सम्झना गर्दा मलाई दशैंको बेला सिद्धपोखरी छेऊ धेरै मान्छेहरुसँग उहाँको पर्खाइमा उभिरहेको मात्र दृश्य याद आउँछ । हामी उहाँलाई पर्खिरहेका थियौं, उहाँको शवलाई पर्खिदै थियौं । आँखा अगाडि उहाँका हाँसिरहने दन्त लहर मात्र देखिरहेकी थिएँ । सधैंजसो हँसिलो मुखाकृतिमा प्रस्तुत हुने उहाँको स्वभाव रमाइलो प्रकृतिको थियो । यी पंक्तिहरु लेख्ने क्रममा जति जनासँग पनि उहाँको सन्दर्भ कोट्याएँ सबैले उहाँको रमाइलो गर्ने बानीलाई नबिर्सिकन सुनाउनु भयो । नयाँ मान्छेहरुसँग घुलमिल हुन सक्नु पार्टी कार्यकर्ताका लागि आवश्यक गुण मध्ये नै पर्दछ । सार्वजनिक व्यक्तित्वका लागि अरुको कुरा बुझ्ने कोशिस गर्नु अनि त्यसबारे आफ्नो विचार बताउन सक्नु एक किसिमले आवश्यक शीप नै हो । नेपाल मजदूर किसान पार्टीको गतिविधि र संगठन निर्माणमा एक दऱ्हो सिपाहीका रुपमा जीवन व्यतीत गर्नुहुने आशाकाजी सर आफ्नो दैनिकीको आरम्भ नै संगठन निर्माणको उद्देश्यका साथ गर्नुहुन्थ्यो । नेपाल क्रान्तिकारी महिला संघको गतिविधिका दौरानमा मध्यपुर थिमिमा जाने क्रममा त्यहाँका सर्वसाधारणले उहाँको स्मरण गरेको पाएँ मैले । उहाँ हरेक बिहान चिया खानका लागि मध्यपुरसम्म मर्निङ वाक् गर्नुहुन्थ्यो, अनि पूरै बिहानको समय जनसम्पर्कमा खर्चिनु हुन्थ्यो । जनतासँगको नजिक सम्बन्ध राजनीतिक कार्यकर्ताका लागि अति आवश्यक कुरो हो । जनसम्पर्कलाई महत्व दिएर काम गर्नु उहाँको विशेषता हो ।

नेता जनताको घरदैलोमा दैनिक सर्वसुलभ भइरहनु जस्तो सहजता अरु के हुन सक्ला ?

भक्तपुर क्षेत्र नम्बर २ बाट प्रत्यक्ष निर्वाचित हुन सफल हुनुमा उहाँको यो विशेषताले पनि पक्कै योगदान गरेको हुनुपर्दछ । निर्वाचन, राजनीति र प्रजातन्त्रमा सार्वजनिक सम्पर्कले धेरै फरक पार्न सक्ने क्षमता बोकेको हुन्छ । उहाँ निर्वाचित भए पश्चात्को विजय यात्रा मेरा लागि पहिलो अनुभव थियो ।

विद्यार्थी राजनीतिबाट पार्टी राजनीतिमा सक्रिय हुनुभएका आशाकाजी सरले शिक्षक हुँदा पनि राजनीतिक कार्यकर्ताको भूमिका खेल्नुभयो । मेरी दिदी (अम्बिका न्याइच्याई) उहाँहरुलाई लेखा विषयको शिक्षकका रुपमा पहिलो परिचय भएको सम्झनु हुन्छ । राजनीतिक कार्यकर्ता र शिक्षक दुबै एक साथ भूमिका निर्वाह गर्दा कक्षामा उहाँको बारम्बारको अनुपस्थितिले पढाइमा असर हुने गरेको सम्झनु हुन्छ । तर उहाँ कक्षामा विद्यार्थीहरुलाई राजनीतिक ज्ञान दिनका लागि कहिले गीत, कहिले नाटकको माध्यमलाई कलात्मक ढंगले प्रयोग गर्ने गर्नुहुन्थ्यो ।

उहाँको सोखको एउटा पाटो फिल्म हेर्नु रहेको कुरा उहाँका सहपाठीहरुबाट सुनेँ । फिल्म हेर्नु मात्र नभई त्यसका कलाकारहरुको नक्कल बडो राम्रो तरिकाले गर्न सक्नु हुनेरहेछ । यस किसिमको रसिक स्वभावलाई उहाँले गाइजात्रामा प्रस्तुत गरिने ख्यालः, गाइँचा म्येमा उपयोग गर्नुभएको थियो । उहाँद्वारा लिखित गाइँचा म्येहरुको प्रकाशन अर्को उपयोगी सामग्री हुनसक्छ ।

सांसदको भूमिकामा उहाँलाई सांसदका तात्कालिन महासचिव सूर्य किरण गुरुङले एकपटक भन्नु भएको कुरा म स्मरण गर्न चाहन्छु । माननीय आशाकाजी बासुकला रोहितका हरेक निर्देशनलाई अक्षरशः पालना गर्नुहुन्थ्यो । कुनै कानूनी अस्पष्टता भए महासचिवको कोठामा गएर बुझेर आउने जिम्मा माननीय आशाकाजी बासुकलाकै हुन्थ्यो ।

यस प्रकार आशाकाजी बासुकला नेपाल मजदुर किसान पार्टीका एक निष्ठावान् र आज्ञाकारी कार्यकर्ता हुनुहुन्थ्यो भन्दा फरक नपर्ला । संसदमा प्रस्तुत उहाँका विचारहरुबारे अध्ययन गर्न अलि कठिन भयो । पर्याप्त समय लगाएर त्यसको अध्ययन पस्किन पाए अझ चित्त बुझ्थ्यो । 'प्रतिनिधि सभामा का. आशाकाजी बासुकला' उनको पठनीय सामग्री हुनसक्ने विश्वास लागेको छ ।

# सम्झनामा आशाकाजी



**पृथुचरण वैद्य**
**शिक्षाविद्**

दिवंगत साथीसंगीहरुको सम्झनामा बारम्बार आइरहने व्यक्तित्व आशाकाजी बासुकला हुन्। उनीसँग बाल्यकाल वा विद्यार्थी बेला संगत भएको थिएन। उमेरले म जेठो हुनु र शिक्षण पेशामा संलग्न भई बाहिरी जिल्लाहरुमा काम गर्नु पर्नाले उनीसँग कहिलेकाहीं मात्र भेटघाट हुन्थ्यो। साथीहरुको समूहमा छलफल हुँदा, चोटा बैठकमा सरसल्लाह गर्दा हाम्रो बीचमा कुराकानी हुन्थ्यो। कार्यक्षेत्र फरक भइकन पनि भेटेको बखत समसामयिक राजनीति र शैक्षिक अवस्थाबारे गहन छलफल हुने गर्दथ्यो। स्वर्गीय आशाकाजी बासुकला सरल, रसिला र भद्र स्वभावका थिए। सांसद तथा नगर प्रमुखको पदमा रहेता पनि उनमा पदादम्भ पदकै थिएन। सबैसँग समान व्यवहार गर्ने, रसिला कुराकानी गर्ने, अरुको समस्या बुझेर सक्दो सहयोग गर्ने उनको स्वभाव सम्झन लायक छ। आशाकाजी शिक्षा, साहित्य र राजनीति तिनै क्षेत्रमा संलग्न भई देश र जनताको सेवामा जीवनपर्यन्त लागेको कर्मठ व्यक्तिका रुपमा स्मरणनीय छ। आफ्नो स्वास्थ्यको राम्रो ध्यान पुऱ्याउन नसक्दा मुटु रोगले चापेको चाल पाउन सकेनन् र समयमा उपयुक्त स्थानमा उपचार गराउन उनी सफल भएनन्। उपचार गर्न नभ्याउने स्थितिमा उनको असामयिक निधन हुनुको पीडा अहिले पनि हुँदोरहेछ।

एक इमान्दार, सक्षम समाजसेवीका रुपमा आशाकाजी हरदम सम्झनामा आइरहन्छन्। उनका गुणलाई सम्झेर देश र जनताको निःस्वार्थ सेवा गर्ने प्रेरणा हरदम पाइरहने विश्वास गर्दछु।

# आशाकाजी दाइसँग बिताएका दिन



**कृष्णभक्त लवजू**
(पूर्व वडाध्यक्ष)

आशाकाजी दाईसँगको परिचय, उहाँको जीवनको विषयमा बुझ्नु र उहाँसँगै विभिन्न स्थानमा हिंड्नु अनि बस्नुको सेतू भनेकै नेपाल मजदुर किसान पार्टी हो ।

२०३८ सालको राष्ट्रिय पञ्चायतको चुनावदेखि नेमकिपाका उम्मेद्‌वारको चुनाव प्रचारको क्रममा सँगै गाउँगाउँमा आशाकाजी बासुकलासँग चुनाव प्रचारप्रसारमा हिंडेको स्मरण आइरहन्छ । हिंडाईको क्रममा आशाकाजी दाईले जहिल्यै हँसाई-हँसाई गफ गर्दै हिंड्दा समय गएको थाहा हुँदैन्थ्यो ।

उहाँलाई प्रगतिशील गीतहरु रच्ने गीतकार र साहित्यकारको रुपमा पनि चिनेको हुँ । पहिले-पहिले भक्तपुरको गाइजात्रामा देखाइने गाईंचा नाचमा अश्लिल र कोही व्यक्तिको चरित्र हत्या गर्ने गीतहरु गाइन्थ्यो । तर आशाकाजी दाईर्लले लेख्नुभएका गीतहरु व्यक्ति विशेषको वर्णन वा बद्‌ख्वाईभन्दा समाजमा भइरहेका अन्याय-अत्याचारको विरुद्धमा समाजलाई चेतना फैलाउने चेतनामूलक खालका गाइचा गीतहरु हुनेगथ्र्यो । गाईचा नाचलाई अश्लिल र व्यक्तिको बद्‌ख्वाई वा गुणगान गर्ने नाचबाट समाजको चित्रण गर्ने नाचको रुपमा रुपान्तरण गर्न उहाँका गीतहरुले उल्लेखनीय भूमिका खेलेका थिए । हाम्रो तचपाल टोल मकोबाट गाइचा नाच सिकाउँदा आशाकाजी दाईले धेरै प्रगतिशील गीतहरु रचेर सहयोग गर्नुभएको स्मरणीय छ ।

उहाँसँग नजिक बसेर काम गरेको अर्को क्षेत्र नेपालभाषा साहित्य तःमुँज्या पनि हो । तःमुँज्याको स्थापनाकालदेखि नै उहाँसँग बसेर काम गरियो । हरेक वर्ष हुने साहित्य तःमुँज्यामा उहाँ उत्तिकै सक्रियताका साथ काम गर्ने गर्नुहुन्थ्यो । तःमुँज्याका आयोजक समिति (ग्वसाःखलः) बनाएदेखि समापनसम्म पनि सम्बन्धित टोलमा गएर नीति-निर्देशन दिइरहनुहुन्थ्यो, कहिल्यै थाक्नुभएन । आर्थिक संकलन, प्रचार-प्रसार, साहित्यिक गतिविधि र सांस्कृतिक कार्यक्रम सबै क्षेत्रमा सल्लाह सुझाव दिने गर्नुहुन्थ्यो । तचपाल टोलमा नेपालभाषा साहित्य तःमुँज्या हुँदा मैले आयोजक समितिको अध्यक्ष भएर काम गर्ने अवसर पाएको थिएँ । त्यतिबेला उहाँ तःमुँज्याको मूल समितिमा हुनुहुन्थ्यो । उहाँ निरन्तर हाम्रो टोलमा आउनुहुन्थ्यो र निर्देशन दिने गर्नुहुन्थ्यो । आशाकाजी दाई नेमकिपाको जिम्मेवार कार्यकर्ता हुनुभएकाले पार्टीकै नीति निर्देशनमा रहेर काम गर्नुहुन्थ्यो ।

भक्तपुर नगरपालिकामा कर्मचारी भएको बेला पनि मैले उहाँसँग काम गर्ने अवसर पाएँ । नेमकिपाको तर्फबाट निर्वाचित भएर उहाँ तात्कालीन नगरपञ्चायतमा प्रधानपञ्च भएर आउनुभयो । प्रधानपञ्चको रुपमा उहाँले हामी कर्मचारीहरुलाई इमान्दारीपूर्वक विना पक्षपात छिटो-छरितो नगरबासीहरुको काम गर्न निर्देशन दिनुहुन्थ्यो । नीति-निर्देशन र नियममा काम गर्नेलाई पुरस्कार र नीति-निर्देशन विपरीत ढिलासुस्ती, आर्थिक अनियमितता गर्ने कर्मचारीलाई दण्ड जरिवाना गर्ने काम गर्नुहुन्थ्यो । उहाँ प्रधानपञ्च भई काम गर्दा म नगरपालिकाको नक्सा शाखामा काम गर्दै थिएँ । नगरबासीको नक्सा पास गर्ने सन्दर्भमा आशाकाजी दाई प्रत्येक नक्सा स्थलगत निरीक्षण गरेपछि मात्र पास गर्नु हुन्थ्यो । अनियमितता र बिना नक्सा घर बनाउनेलाई कार्यवाही गर्नुहुन्थ्यो ।

२०४५ सालको भूकम्पको समयमा आशाकाजी दाई प्रधानपञ्च हुनुहुन्थ्यो । धेरै नगवासीका घर भत्केका थिए । धेरै नगरवासीहरुको मृत्यु भएको थियो । सरकारले भूकम्प पीडितहरुलाई राहत वितरण शुरु गर्नुअघि नै नेमकिपाको निर्देशनअनुसार नगरपालिकाका निर्वाचित जनप्रतिनिधिहरुले राहत वितरण कार्य थालिसक्नु भएको थियो । नगरपञ्चायतको

यो सक्रियता पञ्चायती सरकारलाई असह्य भएको थियो । तात्कालीन पञ्चायती राज्यस्तरबाट षड्यन्त्र गरी कुनै पनि पदमा नरहेका भूतपूर्व रापस कर्णप्रसाद ह्योजूलाई राहत सामग्री पक्षपातपूर्ण तरिकाले वितरण गर्न लगाइयो ।

भक्तपुर नगरपञ्चायत कार्यालयअघि नै बसेर यसरी पक्षपातपूर्वक राहत वितरण गर्ने काम भइरहेको थियो । जानाजान पक्षपातपूर्वक राहत वितरण भइरहेको अवस्थामा पीडित नगरबासीहरु प्रधानपञ्च आशाकाजी दाईलगायत अन्य जनप्रतिनिधिहरुसमक्ष गुनासो लिएर आएका थिए । भूकम्पले केही क्षति नभएका घर-परिवारले राहत ओसारिरहेको प्रत्यक्ष देखेका जनता आफूमाथि अन्याय भएको भनी आक्रोशित थिए । जबकि राहत वितरण कहाँबाट कसले गरिरहेको नगपालिकालाई कुनै जानकारी थिएन । अनि नगरबासीहरु राहत वितरणको कुपन वितरण भइरहेको ठाउँमा भेला भए । त्यहाँ ह्योजु राहतको कुपन वितरण गरिरहेका थिए । आक्रोशित नगरबासीहरुले ह्योजुलाई समातेर जुत्ताको माला लगाएर नगर परिक्रमा गराए ।

पछि क्रमशः भीड अनियन्त्रित बन्दै गयो । प्रहरी भने भीड नियन्त्रण गर्न केही गरिरहेको थिएन । तर अन्ततः हिंडेरै प्रहरीको भ्यानमा चढेको ह्योजु राति मरेको घोषणा गरियो । ह्योजुलाई मृत घोषणापूर्व नै तात्कालीन नेमकिसंका अध्यक्ष नारायणमान विजुक्छे, रापस गोविन्द दुवाल, प्रधानपञ्च आशाकाजी बासुकलालगायत पार्टीका जिम्मेवार सयौं साथीहरुलाई गिरफ्तार गरियो । कसैलाई काठमाण्डौं हनुमानढोका, कसैलाई भक्तपुर जिप्रकाको खोरमा राखियो । म लगायत धेरै साथीहरुलाई भक्तपुरको जिप्रकाको खोरमा राखियो । पछि काठमाण्डौं हनुमानढोका  डीएसपी कार्यालयमा पठाइयौं ।

पार्टी अध्यक्ष नारायणमान विजुक्छे, गोविन्द दुवाल, आशाकाजी बासुकला, चैत्यराज शाक्यलगायत दजनौं नेता कार्यकर्ता, वडाध्यक्ष र सर्वसाधारण युवाहरुलाई काठमाडौंको डीएसपी कार्यालयमा थुनियो । प्रहरीले बयानका क्रममा थुनुवाहरुलाई अमानवीय यातना दिने गर्थे । आशाकाजी दाई पछि जेलभित्र साथीहरुलाई उत्साहित बनाउने हेतुले हिरासतमा आफूले प्रहरी यातना विरुद्ध गरेको संघर्षको कुरा ज्यादै रोचक पाराले सुनाउनुहुन्थ्यो । त्यत्तिबेला करीब २१ महिना जेल बस्दा आशाकाजी दाईसँगै बस्ने अवसर पाएको थिएँ । जेल बस्दा उहाँले घर-परिवारलाई सम्झेर कहिल्यै मन सानो बनाउनुभएन । बरु हामीलाई उत्साहित बनाउन राजनीतिमा लाग्दा जेल पर्नु कुनै अनौठो कुरो होइन भनी सम्झाउने गर्नुहुन्थ्यो । ‘राज्यले हामीलाई झुठो मुद्दामा फसाएको विरुद्ध सबै न्यायप्रेमी कानुन व्यवसायी, मानवअधिकारकर्मी हाम्रो पक्षमा लागेका छन् । पञ्चायती व्यवस्थाले हामीलाई अन्यायपूर्वक जेलमा राखेको विरोधमा यसरी नै सबै न्यायप्रेमी जनता हाम्रो साथमा उभिनेछन् ।’ सधैं हँसिमजाक गर्न रुचाउने आशाकाजी दाई भन्नुहुन्थ्यो,‘हाम्रो मुद्दा पञ्चायती व्यवस्थाको लागि घाँटीमा अड्केको हड्डी भएको छ ।’

धेरै नयाँ साथीहरुदेखि लिएर काठमाडौंमा काँक्रो बेच्न आएका सर्वसाधारणलाई पक्राउ गरिएको थियो । कतिपय साथीहरु मुख निन्याउरो बनाएर बस्ने गर्नुहुन्थ्यो । तर आशाकाजी दाई सबैलाई निराश नहुन र आत्मसमर्पण नगर्न भनी सम्झाउनु हुन्थ्यो ।

नयाँ र अनुभव नभएका कैदी साथीहरु घरबाट भेट्न आएका आफन्तका कुरा सुनेर मुख अँध्यारो बनाएर फर्किनुहुन्थ्यो । तर आशाकाजी दाई भने त्यतिबेला परिवारलाई भेटेर ढोकैदेखि हाँस्दै आउनुहुन्थ्यो ।

साथीहरुले सोध्नुहुन्थ्यो,‘आशाकाजी दाई को भेट्नु आउनुभएको हो ?’

उहाँ हाँस्दै जवाफ फर्काउनुहुन्थ्यो,‘मेरो हिरोइन ।’ यसरी भाउजूलाई आफ्नो ‘हिरोइन’ भनेको सुनेर सबैजना पेट मिची मिची हाँस्थ्यौं । घरबाट केही मीठो मसिनो खानेकुरा जेलमा पठाए हामी सबै जना बाँडीचुँडी खाने जेलभित्रको चलन नै थियो । उहाँको अधिकांश समय विभिन्न विषयमा हँसिलो पारामा कुराकानी गरेर नै बितेको देख्थ्यौं । कतिबेला त उहाँका कुरा सुनेर दिन गएको पनि पत्तै पाउँदैनथ्यौं । जेलमा बसेका सबै साथीहरुसँग तुरुन्त घुलमिल हुने र आफ्नो कुरा पनि सबैलाई सुनाउन सक्ने साथै अरुका कुरा पनि बुझ्न सक्ने खुबीको धनी हुनुहुन्थ्यो- आशाकाजी दाई ।

जेलका सबैजसो कैदी बन्दीबीच उहाँ छोटो समयमै परिचित व्यक्तित्व बनिसक्नुभएको थियो । उहाँलाई देखेर मलाई लाग्थ्यो- राजनीतिक कार्यकर्ता बन्न त बहुप्रतिभाशाली बन्नुपर्ने रहेछ । आशाकाजी दाई पनि त्यस्तै एकजना

प्रतिभाशाली व्यक्ति हुनुहुन्थ्यो ।

जेलमा आशाकाजी दाईजस्तै कलाकारी गुण भएका केही अरु बन्दीहरु पनि थिए । जेलभित्र हरेक वर्ष दसैंको अवसरमा शुभकामना सांस्कृतिक कार्यक्रम गरिन्थ्यो । त्यसक्रममा एक साल हाँस्यव्यङ्ग्य लेखक रामशेखर नकर्मीले लेख्नुभएको 'खा हालः' (भाले बास्यो) प्रहसन मञ्चन गरियो । त्यसमा आशाकाजी दाईको अभिनय हेरेर कोही पनि बन्दी पेट मिची मिची नहाँसी बस्न सकेनन् । त्यसपछि त उहाँ जेलभित्र अझ लोकप्रिय बन्नुभयो ।

२०४६ सालको जनआन्दोलनपश्चात् हामीविरुद्ध थोपरिएको मुद्दा खारेज गरी हामी सबै निर्दोष बन्दीलाई रिहा गरियो । आशाकाजी दाई जेलमा होस् या बाहिर जता गए पनि नयाँ मानिससँगै तुरुन्त घुलमिल हुन सक्ने व्यक्ति हुनुहुन्थ्यो । जनताबीच उहाँको लोकप्रियता र पार्टीको विश्वासका कारण उहाँ भक्तपुर क्षेत्र नं २ बाट सांसद निर्वाचित हुनुभयो । निर्वाचित भएपछि उहाँले नेमकिपाको नीति-निर्देशन अनुसार व्यापक काम गरी खाने जनताको पक्षमा बोल्ने जिम्मेवारी सफलतापूर्वक पूरा गर्नुभयो । उहाँ सबैजसो जुलुस, आमसभा र कार्यक्रमहरुमा सक्रिय सहभागी बन्ने गर्नु हुन्थ्यो ।

पार्टी कार्यक्रमको सिलसिलामा एक साँझ भोटाहिटीबाट रत्नपार्कतर्फ आशाकाजी दाईको नेतृत्वमा निस्केको मसाल जुलुसमा प्रहरीले क्रूर दमन गऱ्यो । प्रहरीले अन्धाधुन्ध हानेको लाठीले धेरै सहभागी साथीहरुसँगै माननीय आशाकाजी दाई पनि घाइते हुनुभयो । संसद-सदस्य समेतमाथि भएको चर्को प्रहरी दमन र कुटपीटको विरोधमा संसदमा पनि चर्को आवाज उठेको थियो । गृहमन्त्रीको जवाफ समेत मागिएको थियो । यसप्रकार उहाँले माननीय हुँदा सदनभित्र र बाहिर बसेर पनि देश र जनताको व्यापक हितको लागि लगातार संघर्ष गर्नुभयो ।

अत्यन्त मिलनसार, जनताको बीच तुरुन्त घुलमिल हुन सक्ने, विभिन्न तरिकाबाट जनताका समस्याहरु उजागर गर्न सक्ने, कार्यकर्ताबीच सधैं हँसिलो पाराले आफ्ना कुरा राखेर आकर्षित गर्न सक्ने व्यक्ति हुनुहुन्थ्यो- आशाकाजी दाई । जनताबीच प्रिय आशाकाजी दाईको नचिताएसरि देहावसान भएको खबर सुन्दा पत्याउनै मुस्किल भएको थियो । उहाँ लामो समय बिरामी पनि पर्नुभएको थिएन, त्यसकारण पत्याउन गाह्रो भएको थियो । अचानक हृदयघात भएर निधन भएको साथीहरुले सुनाउनुभयो ।

उहाँको निधनले पार्टी कार्यकर्ता, समर्थक, शुभचिन्तक साथीहरुलगायत धेरै अरु सर्वसाधारण जनतालाई समेत मर्माहत बनायो । नेमकिपाको एक जना कर्मठ कार्यकर्ता गुमाउँदा पार्टीलाई ठूलो घाटा भएको मलाई लाग्छ । आशाकाजी दाईले अंगाल्नुभएको पार्टी सिद्धान्तको बाटोमा हिंड्नु नै उहाँप्रतिको साँचो श्रद्धाञ्जली हुनेछ ।

२०७३ कार्तिक ४ गते

भक्तपुर क्षेत्र नम्बर २ का जनताबाट निर्वाचित तत्कालीन प्रतिनिधिसभाका सदस्य तथा भक्तपुर नगरपालिकाका प्रधानपञ्च स्वर्गीय आशाकाजी बासुकलाको स्मृतिमा उहाँको परिवारजनको प्रयासबाट प्रकाशित स्मृति ग्रन्थ सबै पाठकका लागि उपयोगी र प्रेरणादायी बन्न सकोस भन्ने शुभेच्छा व्यक्त गर्दछु ।

## ह्यौमिखा पोल्ट्री ट्रेडर्स

**चाँगुनारायण रोड, भक्तपुर । ०१-६६१०४५०**

भक्तपुर जिल्लाका पूर्व जनप्रतिनिधि प्रधानपञ्च साथै सांसद स्वर्गीय आशाकाजी बासुकलाको स्मृतिमा प्रकाशित यस स्मृति ग्रन्थले उहाँका योगदान र कृतिलाई सबैका स्मरण राख्न सफल होस् भनी हार्दिक शुभेच्छा प्रकट गर्दछौं ।

## उत्तम बासुकला

**ब्यासी, भक्तपुर**

भक्तपुर क्षेत्र नम्बर २ का जनताबाट निर्वाचित तत्कालीन प्रतिनिधिसभाका सदस्य तथा भक्तपुर नगरपालिकाका प्रधानपञ्च स्वर्गीय आशाकाजी बासुकलाको स्मृतिमा उहाँको परिवारजनको प्रयासबाट प्रकाशित स्मृति ग्रन्थ सबै पाठकका लागि उपयोगी र प्रेरणादायी बन्न सकोस भन्ने शुभेच्छा व्यक्त गर्दछु ।

## एभरेष्ट इङ्गलिस स्कूल

**मिबाछेँ, भक्तपुर**

# लालसलाम !



**कान्छा बासुकला**

आँखा चिम्लिँदा कतै
कति मारहरुले फकाए
कति मारहरुले लखेटे
तै पनि
तिमीले आँखा खोल्दा
ती मारहरुले हार खाए
भागेर गए कता कता !
तिमीलाई साधुवाद ।

आज अधूरै रहे पनि
तिमीले छरेका बिउबाट
मुनाहरु पलाउँदैछन्
तिमीले चुँडालेर लगे पनि
निष्ठूरी कालले
ती मुनाहरु हुर्कंदै, बढ्दै
तिम्रो इच्छाका फूलहरु
फूल्नेछन्, फल्नेछन् ।

तिम्रो उत्साहका न्यानोले गर्दा
मुनाहरुलाई टुसाराले खान सक्दैन
किनकि
त्यसले न्यानो दिइरहन्छ
मलजल दिइरहन्छ ।
साथ लाग्दा टाउको माथि
टुषारापात भए
कति हिउँका ढिक्का भए
तैपनि
अलमलमा परेनौ कहीँ
सँगै आवाज दियौ ।

आकाश गुञ्जिने गरी
हात उठायौ मुठ्ठी कसेर
अन्याय र शोषण विरुद्ध
प्राप्तीमा स-साना विजयसँगै
कति रमायौ,
ठूला विजयको प्रयासमा
काँडा बिझदला नि खोच्याएनौ ।
आशाकाजी !
तिमीले आशा छाडेर गयौ
हाम्रै जिम्मामा
हामी थमाउँछौं ।

'मजदूर' दैनिकमा प्रकाशित २०५७/८/३ (आशाकाजी बासुकला निधनको ४५ औं दिन)

# आशाकाजी सरको सम्झना र उहाँको देनबारे केही कुरा



बालमुकुन्द बासुकला

समाजलाई परिवर्तन गर्नुछ भने त्यहाँ शिक्षाको उज्यालो किरण हुनुपर्छ। यही धारणालाई मध्यनजर राख्दै २०१९ सालमा केही शिक्षाविद र समाजलाई परिवर्तन गर्न चाहने गन्यमान्य व्यक्तिहरुको सहयोगमा बासु राष्ट्रिय प्राइमरी स्कुलको स्थापना गरियो। विद्यालय त खोल्यौं तर ठाउँको राम्रो व्यवस्था नभएकाले ब्यासी टोलको पाटी र मेरो घरमा विद्यालय चलाउन बाध्य भयौं। टोलबासी, समाजसेवी र शिक्षाको विकास गर्ने आतुर व्यक्तिहरुको कसिलो प्रयासबाट पुरानो बासु स्कुलको विद्यालय भवन निर्माण गर्न सफल भयौं। यसरी भवन निर्माणकै क्रममा आशाकाजी बासुकलासँग घनिष्ठता बढ्दै गयो।

हुन त २०२१ सालमा भूमिसुधार लागू भएपछि भक्तपुरमा किसानहरुको हकहितकोबारे छलफल गर्ने गर्थे। बरोबर चोटा बैठक बस्ने गर्थ्यौं। तर किसानहरुको मोहियानी हकबारे पनि छलफल सुरु भयो। मोहियानी हक कायम गर्न वहाँ अग्रसर हुनुहुन्थ्यो। साथै त्यस सम्बन्धित आन्दोलनमा पनि सरिक हुनुहुन्थ्यो। बाली काट्ने अभियानमा सक्रिय हुनुहुन्थ्यो। यसरी वहाँको क्रान्तिकारी पाइलाले गति लिएको हामीले महसुस गर्‍यौं। यसै क्रममा विद्यालयमा शिक्षकको आवश्यकता भएकाले ०२९ देखि निजी शिक्षकका रुपमा काम गर्न थाल्नुभयो। हँसाउने र हाँस्ने वातावरण बनाउनमा उहाँ खप्पिस हुनुहुन्थ्यो भने विद्यार्थीलाई तह लगाउन पनि सिपालु हुनुहुन्थ्यो। विद्यालयमा अनुशासनको महत्वबारे विद्यार्थीलाई समय समयमा जानकारी दिइरहनु हुन्थ्यो। आशाकाजी सर भनेपछि विद्यार्थीहरु एकदम सर्तक हुन्थे। शिक्षक हुनु भएदेखि राजनीतिमा पनि सक्रियताका साथ लाग्नु भयो। हरेक बिहान र साँझ सुवालको चिया पसलमा हाम्रो भेटघाट हुने गर्दथ्यो। जुन भेटघाट उहाँको ठट्यौली गफलाई चिया पसलमा मात्र सीमित राख्नु उचित भएन भनेर हामी युवा समूहले गाईजात्राको समय पारेर विभिन्न नाटकहरु गाइँचा प्याखँ बनाएर ठाउँठाउँमा प्रस्तुत पनि गर्थ्यौं। जुन नाटक धेरैजसो राजनीतिक व्यङ्गको नै हुन्थ्यो। जहाँ देखाउन गएपनि प्रशंसाको खोलो बग्थ्यो। यसरी नाटक देखाएर दर्शकलाई हँसाउनुका साथै राजनीतिक चेतना जगाउने काम पनि हुन्थ्यो। आशाकाजी सरसँग कलाकारको गुण खुट्टादेखि टाउको र टाउकोदेखि खुट्टासम्म थियो। जब वहाँले कुनै फिल्मको संवाद बोल्नु हुन्थ्यो हुवहु त्यो फिल्मको कलाकारसँग मिल्थ्यो। विद्यालयमा वर्षभरी काम गरिसकेपछि वर्षको एकदिन घरमै सबैले पैसा हालेर सानो तुकुचा गर्ने गर्थ्यो। त्यो तुकुचा गर्ने समयमा सबैले काम बाडफाँड गरी गर्ने गर्थ्यौं। वर्षै पिच्छे सबैले काम फरक फरक गरी गर्ने गर्नुहुन्थ्यो। तर उहाँले कुखुरा सफा गर्ने बाहेक अरु काम गर्न आउँदैन भनेर हरेक वर्ष कुखुरा सफा गर्ने काम गर्नु हुन्थ्यो। उहाँले निकै आनन्द लिएर कुखुरा सफा गर्ने गर्नु हुन्थ्यो। सफा गरेको कुखुराको मासुमा कलेजो र मृगौला कहिले पनि बाँकी हुँदैनथ्यो। हामीले कुखुराको मृगौला र कलेजो कहाँ गयो भनेर सोध्दा कुखुरामा त कलेजो र मृगौला नै थिएन भनेर हरेक वर्ष नै जवाफ दिनु हुन्थ्यो। पछि पछि पो आफैले जवाफ दिनु भयो। त्यो कुखुराको मृगौला र कलेजो त दुईवटा खुट्टा भएको बिरालोले पो खाँदोरहेछ। यसरी हरेक कुरालाई ठट्यौली पाराले भनेर सबैलाई हँसाउनु हुन्थ्यो। तर हामीले पनि ख्याल ख्यालमै खानेकुरा पकाएर खानुपर्छ भन्ने गर्थ्यौं। यसरी वासु स्कुलको शिक्षक भई ०४३ सालसम्म काम गर्नुभएको थियो। ०४३ साल पछिको समय राजनीतिमै बिताउने सोचले विद्यालयको आगनबाट देशको राजनीतिक आगनमा आफ्नो पाइला अगाडि बढाउनु भयो। विद्यालय छोडेको केही समयमै उहाँ भक्तपुर नगरपालिकाको प्रधानपञ्च हुनु भयो। आशाकाजी सर यस्तो व्यक्तित्व हुनु हुन्थ्यो कि

उहाँको अगाडि सानो बच्चा होस् या ठूलो मान्छे अथवा बुढाबुढी नै किन नहोस् जस्तो व्यक्ति आए पनि उहाँले राम्रो व्यवहार गर्न खप्पिस हुनुहुन्थ्यो। यसै कारणले उहाँको राजनीतिक जीवनलाई अगाडि बढाउन सहयोग भएको पाइन्छ। ०४५ सालमा भक्तपुर काण्ड हुँदा उहाँ पनि जेलमा पर्नु भएको थियो। जसले गर्दा परिवारमा विभिन्न किसिमको समस्या झेल्नु परेको साथै भक्तपुरको अवस्था पनि निकै नाजुक भएको कुरा हामी सबैमा अवगत नै छ। भक्तपुरको किसान तर शिक्षित व्यक्तित्वहरुलाई भक्तपुर काण्डले कहिले नभुल्ने गहिरो छाप छाडेर गएको थियो। ०४५ सालको भक्तपुर काण्डबाट हामी जस्तो सर्वसाधारणले पनि मर्नु न बाँच्नुको जीवन बिताउनु परेको थियो। त्यस बेलाको पीडा सम्झ्यो भने चितामा बसेका मुर्दा पनि झस्केर उठेर आउँछ जस्तो लाग्छ। यसरी शिक्षकको जीवनबाट राजनीतिक जीवनसम्मको यात्रामा उहाँले धेरै उतार चढाव त पक्कै पनि झेल्नु भएको थियो होला। जस्तै भए पनि जीवनलाई दुःखमा पनि हाँस्ने र हसाँउने गर्नु पर्छ यो जीवनको हरेक पलमा रमाइलोका साथ बिताउनु पर्छ र हरेक समूहको मानिसहरुसँग कसरी व्यवहार गर्नुपर्छ भन्ने बुझेर व्यवहार गर्ने कुरा उहाँबाट सिक्नु पर्छ। उहाँको बारेमा जति लेखे पनि सिद्धिँदैन। लेख्न त बाँकी नै छ तर अहिले छोटो जिज्ञासा मात्र लेखेको छु, पछि फेरि लेखौंला।

धन्यवाद !

# बहुआयामिक व्यक्तित्वका धनी स्व. आशाकाजी बासुकला



अधिवक्ता : सानु सुवाल

आशाकाजी दाइ भक्तपुर चोछैं टोलमा एक किसान परिवारमा जन्मनु भएको थियो । उहाँ किसान परिवारमा जन्म भएता पनि स्नातक तहसम्म शिक्षा हासिल गरी शैक्षिक क्षेत्रमै योगदान दिँदै आउनु भएको व्यक्तित्व हुनुहुन्थ्यो । उहाँ पेशाले शिक्षक भई विभिन्न विद्यालयको संचालक समितिको अध्यक्ष भई शैक्षिक प्रगतिमा लाग्नुभयो । उहाँकै प्रेरणाबाट चोछैं टोलका म लगायत साथी भाईलाई पनि घरमै विद्यालयको रुपमा संचालन गर्न लगाई शैक्षिक क्षेत्रमा सहयोग पुऱ्याउँदै आउनुभएको थियो । पञ्चायतकालमा राजनीतिक दल प्रतिबन्धित रहेको समयमा उहाँ पहिलो पटक वडाध्यक्षको चुनावमा तत्कालिन भक्तपुर नगर पंचायत वडा नं. ९ बाट तारा चिन्ह लिएर उम्मेदवार बन्नु भएको थियो । तर उक्त चुनावमा जित्न सक्नुभएन । त्यस समयमा म उमेरले १० वर्ष जतिको मात्रै थिएँ । जनताको लहर उहाँको पक्षमा रहेको थाहा भएपछि विपक्षी उम्मेदवार भ्रम फैलाई नाटकीय ढंगले चुनाव जित्न सफल भए । स्वस्थानी किताबलाई कुल्चने व्यक्तिले चुनाव जितेपछि जनतालाई पनि कुल्चिन्छ पटक्कै धर्म नमान्ने भनेर हल्ला फैलाई चुनावमा हराई दिए । सानै उमेर भएता पनि सो घटना मलाई सम्झना ताजै छ । भक्तपुरमा कम्युनिष्ट प्रभाव ज्यादा भएकाले म पनि सो प्रभावबाट अछुट रहन सकिनँ । २०३६ सालमा उहाँकै हातबाट मैले पार्टी सदस्यता प्राप्त गरेको थिएँ । उहाँमा छिट्टै मानिसलाई प्रभाव पार्न सक्ने गुण थियो । जनतामा राजनैतिक चेतना दिने अभिप्रायले चीन सचित्रहरु देखाउने, चीनमा यस्तो राम्रो छ, विकास भएको छ, किसानहरुलाई पहिले क. माओले गर्नुभएको संघर्षको घटनाहरु सुनाउनु हुन्थ्यो । चीनमा पहिले किसानहरुको अवस्था अत्यन्त दयनीय रहेकोमा जनतालाई उठाएर संघर्षबाटै नै किसानहरुको आर्थिक सुधार आउनुका साथसाथै देशको विकास समेत भएको हो भन्ने जस्ता सकारात्मक कुरा बताउनुहुन्थो । जमिन्दारहरुले कृत्रिम रुपमा भाले कराउन लगाएर राती राती नै किसानहरुलाई काममा लगाई दुःख दिईरहेको चीनको अवस्था र ल्युलान जस्तो गहुँको बाला टिप्ने व्यक्तिको कहानी लगायत सुनाई मानिसलाई मखख पार्नुहुन्थ्यो । हामी डराउनु हुँदैन, जनताले प्रत्यक्ष सेवा पाउने काम गर्नुपर्छ भनी सम्झाउनु हुन्थ्यो । म पनि क्रमशः उहाँकै प्रेरणाबाटै तात्कालिन नेपाल मजदुर किसान संगठनमा लागिरहेँ ।

त्यसले आफ्नो वडामा नव ज्योति वाचनालय आफ्नै घरमा स्थापना गरेर पञ्चायत विरोधी राजनीतिमा जनतालाई जागरण गराउन सफल हुनुभयो । उहाँ हसिलो फूर्तिलो निर्भिक जनताको सेवामा प्रतिबद्ध कुरा गर्दै हँसाउन सक्ने बहुआयामिक क्षमता भएको पार्टीको नेतृत्व सम्हालेको ब्यक्ति हुनुहुन्थ्यो । भक्तपुरमा कम्युनिष्ट विचार प्रवाह गर्ने आन्दोलनमा उहाँको पनि अग्रणी भूमिका रहेका कुरा कहिल्यै बिर्सन हुँदैन भन्ने मलाई लाग्छ ।

त्यसबेला पुस्तकालयका लागि किताब किन्न पैसाको धरै समस्या थियो । उहाँले युवाहरुलाई भक्तपुर नगरमा जर्मन प्रोजेक्टले निकासको पाइप हाल्ने काममा श्रमदान गर्न लगाई सोबाट प्राप्त रकमबाट किताबहरु धैरै नै किनेको अझै सम्झना छ । उहाँले राहुल सांकृत्यानको 'भागो नही दुनियाको बदलो' लगायत विभिन्न माओ, मार्क्स, लेनिन, स्टालिन, एँगेल्सको जीवनी किताबहरु संग्रह गरी जनतामा पढने मौका दिएर सुनाएर जागरण ल्याउन सफल हुनुभयो । त्यतिबेला उहाँको घरको छिँडी नै नवज्योति पुस्तकालय थियो । राजनीतिमा प्रखर भएर आन्दोलन, जुलुसको नेतृत्वमा कहिल्यै पछि पर्नु भएन । पहिले नाटक लेखेर टोल-टोलमा पर्दा नाटक मञ्चन गर्नु हुन्थ्यो । उहाँले नै नाटक लेखेर पंचायत विरोधी भावनाको विकास गराई नेतृत्व गरेर अगाडि बढ्नु भयो । उहाँमा कलाकारीताको पनि सीप थियो ।

२०४४ सालतिरको चुनावमा उहाँ भ.न.पा.को प्रधान पंच जित्नुभयो । उहाँको छोटो कार्यकालमा पनि तत्कालिन वर्गीय किसान संगठन भक्तपुर नगर सभापति भएर मैले चुनाव जितेँ । नगर पञ्चायत भित्र रहँदा पनि उहाँको स्वभाब उस्तै थियो, सुधारका कार्यहरु गर्नुभयो । ०४५ साल भाद्र ५ गते भूकम्पबाट भक्तपुर नगर पनि क्षतिबाट अछुटो रहेन । नगर पञ्चायतबाट निर्णय गरी चिउरा, दालमोठ, चामल तत्काल नै स्थलगत रुपमा वितरण गर्न अग्रसर रहनुभयो । म पनि भूकम्प पीडितलाई राहत, बसोबास कसरी गराउने भन्ने मै सँगसँगै सेवामै सर्मपित भएँ । भाद्र ९ गते राहत वितरणमा पक्षपात भएको भनी एकजना वितरणकर्तालाई जनताले घुमाएर कुट्दा मृत्यु भएको बहानामा भक्तपुर काण्ड मच्चाइयो । पार्टीका नेता, कार्यकतादेखि सर्वसाधारणलाई पक्राउ गरी जेलमा हालियो । सबैलाई अकल्पनिय यातना भोग्न बाध्य बनाइयो । उहाँ घटनाको दिन तत्कालिन अञ्चलाधिश कार्यालय काठमाण्डौमा बैठकमा जानुभएको थियो । तर सोही काण्डमा लागेको आरोप लगाएर उहाँलाई पनि जेल हालियो । उहाँ लगायत केन्द्रीय नेताहरु केन्द्रीय कारागारमा र म लगायत अन्य साथी भद्रगोल कारागारमा रहन बाध्य भएँ । सो घटनामा भक्तपुरका धेरै सर्वसाधारणले दुःख कष्ट भोग्न बाध्य भयो । तर पनि उहाँ कहिल्यै निराश हुनुभएन ।

बहुदल प्राप्तिपछि उहाँ भक्तपुर क्षेत्र नं. २ बाट प्रतिनिधि सभाको सदस्यमा निर्वाचित हुनुभयो । आफ्नो कर्तव्य निर्वाह गरेरै अगाडि बढ्नु भयो । सांसद कोषको रकमबाट भएको विकास निर्माण गर्ने कार्यमा निरन्तर लागि रहनुभयो । सोही क्रममा सूर्यविनायक पछाडि घ्याम्पे डाँडामा बाटो निर्माण गरेको हेर्न सँगै लागेको अझै सम्झना ताजै छ । त्यहाँका तामाङ बस्तीमा बाटोको समस्याका कारण हिँड्डुल गर्न ज्यादै कठिन एवं दुःख भोग्नु परेको थियो । सो बाटो बने पश्चात् राम्रोसँग हिड्डुल गर्न तथा एम्बुलेन्स जान सक्ने भयो ।

साहित्यमा उहाँको विशेष दख्खल थियो । तुरुन्तै कविता सुनाएर साथीहरुलाई हँसाउनु हुन्थ्यो । साथै जोश जाँगर पनि प्रदान गर्नुहुन्थ्यो । गाईजात्रामा गाइँचा नाच, अन्य राजनैतिक सम्बन्धी नाटक प्रर्दशनीमा सक्रिय भएर लाग्नुभएको थियो । २०३७ सालमा चोछेँ टोलमा विराट नेपालभाषा साहित्य सम्मेलन हुँदा कविता वाचनमा पक्षपात भएको भनी सोही सालदेखि नै नेपालभाषा साहित्य तःमुंज्या संचालन गर्न नेतृत्व प्रदान गर्नुभएको थियो । उहाँले आफ्नो जीवनमा गर्नु भएका देश र जनताप्रतिको सेवा सदा अटल, अविस्मरणीय रही रहने छ । उहाँको योगदानलाई जीवन्त राख्न यो प्रतिष्ठान स्थापना गरेर क्रियाशील भएकोमा अत्यन्त खुशी छु ।

उहाँ परलोक हुनु ४-५ दिन अगाडि मात्रै उहाँ मेरो जन कानुनी सेवा अफिस चोछेँमा आउनु भएको थियो । उहाँ के कारणले आउनु भयो थाहा थिएन । तर उहाँ धेरै समय बिताएर गम्भीर कुराहरु सुनाएर जानुभयो । पार्टीमा उहाँलाई अत्यन्त अन्याय गरेको, साथीभाईले उहाँप्रति योगदानको कदर नगरेको कुरा सुनाई बीचबीचमा अनेक कुरा गरी धेरै हँसाएर जानुभयो । सायद मेरा लागि यो भेट अन्तिम भेट होला भनी लागेको थिएन । तर त्यो भेटको ४-५ दिन पछि नै अचानक मृत्यु भएको खबरले अत्यन्त मर्माहत् बनायो । उहाँको शव त्यालीमा हजारौं जनता सहभागी भएको देख्दा नै उहाँको योगदान जनताले बिर्सेका रहेनछन् भनी पुष्टी हुन्छ । उहाँ हाम्रो सामु नरहे पनि उहाँले गरेको योगदान सबैका सामु ताजा रहनेछ । उहाँको आत्मालाई शान्ति मिलोस् भन्ने कामना पनि गर्दछु । यो प्रतिष्ठानले उहाँको विषयमा थप अध्ययन अनुसन्धान गरी स्व. आशाकाजी बासुकलाका कृति र योगदानहरुलाई जीवन्तता प्रदान गर्नेछ भन्ने आशा गरेको छु ।

# स्व. दाजु आशाकाजी बासुकलाको सम्झना



**लक्ष्मीभक्त बासुकला**
**शिक्षा निर्देशक, इ.टि.सि. नेपाल**

प्रिय दाजु स्व.आशाकाजी बासुकलाको जन्म २००६ साल मंसिर महिनामा भक्तपुर नगरपालिका वडा नं. ९ चोछैं टोलमा भएको हो। उहाँ बुबा निलकुमार बासुकला (कान्छा बासुकला) र आमा रत्नदेवी वैद्यको कोखबाट जन्मिनुभएको थियो। ज्यादै असल र शान्तिप्रिय स्वभावका धनी, मृदुभाषी, तार्किक भलाकुसारीका द्योतक स्व. बासुकला अति मिलनसार र समाजमा नेतृत्वदायी भूमिका खेल्न सक्ने विलक्षण प्रतिभाको हुनुहुन्थ्यो। पढाइमा त्यति तेजिलो नभए पनि त्रि-चन्द्र कलेजबाट स्नातकसम्म अध्ययन पूरा गर्नुभएको थियो। एस.एल.सी.सम्म आदर्श मा.वि., थिमिबाट उत्तीर्ण गर्नुभएका स्व. बासुकला एक सच्चा शिक्षाप्रेमी हुनुहुन्थ्यो। शिक्षाप्रति उहाँको लगनले बासु मा. वि. (त्यसबेला बासु ने.रा.प्रा.वि.) को शिक्षक समेत रहनुभएका स्व. बासुकला सानैदेखि कक्षा ६/७ मा पढ्दादेखि नै राजनैतिक प्रति झुकाव राखेर विभिन्न सांगठनिक क्रियाकलाप गर्ने, विद्यार्थीको नेतृत्वदायी भूमिका खेल्ने र त्यसबेलाका पंचायती तानाशाही व्यवस्था विरुद्ध बुलन्द आवाज उठाउने सशक्त व्यक्तिको रुपमा चिनिनु हुन्थ्यो।

विद्यालयकै अध्ययन सिलसिलामा नेपाल क्रान्तिकारी विद्यार्थी संघ (ने.म.कि.पा.) को भातृ संगठनसँग आबद्ध स्व.बासुकलाले विभिन्न विद्यार्थी संस्था/संघहरुको पदमा बसी क्रान्तिकारी छविलाई घाम जस्तै उच्च-प्राथमिकताका साथ उज्यालो छर्ने काम गर्नुभयो। त्यसबेला हुने विभिन्न आन्दोलनहरु भियतनाम काण्ड, बाली काट्ने आन्दोलन, सहकारीमा भ्रष्टाचार विरुद्धको आन्दोलन र सुस्ता काण्ड जस्ता आन्दोलनहरुमा सशक्त भूमिका निभाउनु भएका स्व.बासुकला विभिन्न कालखण्डमा जेलनेलको पर्वाह नगरी क्रान्तिकारी छविलाई उच्च प्राथमिकताका साथ गरीव जनताका पक्षमा सशक्त रुपले अगाडि बढ्नु हुन्थ्यो। त्यस्तै प्रभात अंग्रेजी माध्यामिक विद्यालय, महाकाली स्थानको विद्यालय व्यवस्थापन समितिको अध्यक्ष पदमा रहेर विद्यालयलाई अगाडि बढाउन र गरीब जनताका छोराछोरीलाई सस्तो र सुलभ तरिकाले अंग्रेजी माध्यमको शिक्षालाई जोड गर्दै गरीब जनताको पक्षमा रहीरहे। फलस्वरुप धेरै गरीबका छोराछोरीहरु हाल आएर इन्जिनियर र डाक्टरहरु उत्पादन भैरहनुमा स्व.बासुकलाको शैक्षिक देन महत्वपूर्ण रहँदै आएको छ।

साहित्यलाई जीवन्त ठान्ने स्व. बासुकलालाई मनपर्ने पुस्तकहरुमा माउत्सेटुङबाट लिखित रचनाहरु, ल्यूसुनका रचना एवं लेखहरु र होची मिनका कितावहरुको साथै राहुल सांस्कृत्यानका पुस्तकहरु गहिरिएर अध्ययन गरी अरुलाई सुनाउने र विद्यार्थीसँग वकालत गर्नु हुन्थ्यो। उहाँलाई मनपर्ने पुस्तकमा होची मिनका जीवनीहरु, मेक्सिम गोर्कीको “आमा” उपन्यास एवं राहुल सांस्कृत्यानका “दुनियाँ जब हिल उठे” अति मनपर्ने पुस्तकहरु हुन्।

पेशामा शिक्षण पेशा अपनाउनु भएका स्व.बासुकला २०२९ सालमा वासु ने.रा. प्राथमिक विद्यालयमा शिक्षकको रुपमा कार्यरत हुनु हुन्थ्यो। शिक्षा पेशामा रहँदा पनि पंचायती व्यवस्था र तानाशाही विरुद्धमा बुलन्द आवाज उठाइरहनु हुन्थ्यो। यसैगरी राजनैतिक रुपमा ने.म.कि.पा.सँग आबद्ध स्व.बासुकलालाई उसैको मित्र थिमिका एकजना (मुकुण्द नाम स्पष्ट छैन) ले विभिन्न प्रलोभन देखाई जागीर खान र सिआईडीगिरी गर्न बेला मौका उहाँको क्रान्तिकारी छवीलाई धलमल्याउन खोजेका थिए। त्यस्तो प्रलोभन र वैरको पछि कहिले पनि लाग्नु भएन वल्की क्रान्तिकारी छविलाई उजागर गर्दै राजनीतिमा होमिदै नेपाल क्रान्तिकारी विद्यार्थी संघमा लागि रहे।

उहाँ विलक्षण प्रतिभाका धनी भएकोले र राजनैतिक छविलाई उच्च प्राथमिकताका साथ कहिले क्रान्तिकारी र कहिले

फिल्मी दुनियाका बारेमा निकै उत्सुकतासाथ अरुलाई सुनाउँथ्यो। विद्यालयमा हामीसँगै पठन-पाठन गर्दा पनि उहाँले सामाजिक विषय अध्यापन सकाएर चीन र रुस (माउसेटुङ र लेनिन) क्रान्ति र भएका सामाजिक परिवर्तन बारे स-साना नानीहरुलाई सुनाउन्थ्यो र पढाउन्थ्यो। विद्यालयका साना नानीहरुलाई क्रान्तिकारी छवितिर उन्मुख गराउन प्रयत्न गर्थे। साथै अलि ठूला भाइबहिनीहरुलाई संगठनमा लाग्न प्रयत्न गरिरहन्थ्ये। शायद उहाँको आदर्श र क्रान्तिकारी क्षमताको कारणले त्यसबेलाका धेरै विद्यार्थी भाइहरु आजसम्म पनि ने.म.कि.पा.का विभिन्न ओहदामा बसेर राजनैतिक छवि र राजनैतिक छवि उजागरण गरिरहेका छन्।

यसरी संगठनात्मक रुपमा विभिन्न कालखण्डमा जेलनेलको प्रभाव नगरी राजनैतिक रुपमा सचेत नागरिकको रुपमा अगाडि बढीरहँदा २०४३ सालमा त्यसबेला (प्रधानपञ्च) नगर प्रमुखको रुपमा प्रत्यक्ष रुपमा जननिर्वाचित भएर नगर प्रमुखको जिम्मा समेत ग्रहण गरी सन्तुलित कार्यहरु सम्पन्न गरे। आफू शिक्षक भएको नाताले शिक्षालाई के गरे उन्नत र समुन्नत बनाउन सकिन्छ र मानिसलाई शिक्षित बनाउन सकिन्छ भन्ने अवधारणाका साथ अघि बढेका स्व.बासुकलाले नगरपालिकाबाट विद्यालयलाई दिइने अनुदानमा ५० प्रतिशत थप गरी विद्यालयको व्ययभारमा कमी ल्याई विद्यालयलाई शैक्षिक गुणस्तर वृद्धि गर्नमा उहाँको ठूलो देन रहेको छ। यस कार्यमा नगरपालिकामा रहेका अरु विपक्ष दलका सदस्यहरुको ठूलो विरोधका बावजूद पनि विद्यालयलाई उत्कृष्ट र नमूना बनाउन उनी धर्म कार्यमा लागि परे। त्यसै बेला नगरमा सशक्त सरसफाई गर्ने देखि लिएर मठमन्दिर तथा देवालयहरुको पुनःनिर्माण गरेर शहरलाई सुन्दर नगरको रुपमा परिचित गराउन उहाँको ठूलो योगदान रह्यो।

यसरी ने.म.कि.पा.सँग आबद्ध भएर विभिन्न राजनैतिक क्रियाकलाप गर्दै रहँदा २०४५ सालको भाद्र ५ गते गएको विनाशकारी भूकम्पले भक्तपुर क्षेत्रमा तहस-नहस पारे। त्यसै बेला राहतको मामलामा ह्योजु काण्ड भयो। ठूलै नेताहरु सहित स्व.बासुकलालाई पनि २० महिना जेल-नेल परे। उहाँहरुले धेरै दुःख र कष्ट सामनाको साथ कष्टकर जेल जीवन विताए। जेलमै रहँदा २०४६ सालमा देशमा ठूलो आन्दोलन भएर तानाशाही पंचायती व्यवस्था ढले र जेलमुक्त हुनुभयो। अनि आफ्नो क्रान्तिकारी छविलाई जीवन्त बनाउँदै अगाडि बढि रहे। बहुदलीय व्यवस्था विभिन्न संघ/संस्था पार्टीमा लागिरहँदा संसदमा व्यवस्थाको प्रत्यक्ष निर्वाचनबाट २०५१ सालतिर क्षेत्र नं. २ बाट ने.म.कि.पा.बाट जननिर्वाचित संसदको रुपमा निर्वाचित भयो। उहाँलाई कुनै लपन-छपन नभएको कारणले संसदबाट प्राप्त हुने सम्पूर्ण रकम-बुलमहरु स्थानीय ठाउँहरुमा पुल-पुलेसा, पाटीपौवा, विद्यालय र वाटोघाटो एवं अन्य सामाजिक कार्यमा खर्च गरिएको कारणले अझ पनि स्व.बासुकलाको नाम लिंदा क्षेत्र नं.२ का व्यक्तिहरुले ज्यादै गुणिलो र सज्जन सांसदको रुपमा परिचित छन्।

स्व.बासुकला असल स्वभावका राजनैतिक रुपमा सचेत र कसैले हल्लाएर नहल्लिने क्रान्तिकारी योद्धाको रुपमा चिन्न सकिन्छ। उहाँको योगदानले गर्दा समाजमा राम्रो छवि हेर्न सक्ने र शिक्षा प्रति अग्रपंक्ति रही शिक्षा विकासमा योगदान गर्ने स्व.दाजुप्रति आफ्नो मनको भाव र यथार्थ कुरा प्रोख्न पाउँदा स्मरणस्वरुप श्रद्धाञ्जलीको रुपमा केही कुराहरु लेखेर पोख्न पाउँदा निकै हर्ष विभोर भएको छु। दाईलाई सधै सम्झिरहने वाचा सहित यस्ता विलक्षण प्रतिभा धनी दाजुप्रति सदैव आदरभाव व्यक्त गर्दछु।

# आशाकाजी दाइको सम्झना.....



**आशकुमार चिकंवञ्जार**
(भक्तपुर)

जीवनका उकाली ओरालीहरुमा बिताएका क्षणहरु कति स्मरण गर्न लायकको हुन्छ त कति सम्झनै नपरे हुन्थ्यो जस्तो लाग्छ। ती विस्मृतिका क्षणहरु सम्झँदा कति आफूलाई प्रभावित पार्छ भने कति मर्माहत बनाइ दिन्छ। मनमा उठेका स्मरणका छालहरुको उच्छलनले सिञ्चित बगरका पाङ्गो माटो भिजे झैं मनलाई चिस्याएर टाँसिएर बसेका अविस्मरणीय घटनाहरुले अर्लाम बनेर झस्काई दिँदा हृदयभित्र हुने कम्पन कुनै भूकम्पभन्दा कम हुँदैन। दुःख सुखको सम्मिश्रण नै जीवन हो भन्दा पनि ती दुईको जम्मा गर्दा योगफलमा दुःख नै बढी देखिन्छ। त्यसैले भन्ने गरिन्छ- जहाँ मानिस हुन्छ, त्यहाँ समस्या पक्कै हुन्छ। सुखमा मात्तिएर भन्दा दुःखमा आत्तिएर जीवनलाई कुमार्गमा दोर्‍याउनेहरुको संख्या समाजमा बढी नै हुन्छन्। त्यस्तै व्यक्तिहरुको गणनामा भन्ने गरिन्छ- मान्छेले मान्छे भएर भन्दा पशु भएर बढी बाँच्छन्। यही तीतो यथार्थले मानिसलाई सुताउने र बिउँझाउने गर्दछ। अतितका स्मरणहरुले पर्खाल बनाउँदै लगेपछि मेटिँदै गएका दोषहरुमा पुनः जलप लगाउन तिनै भूतकालीन क्रियाकलापले आदर्श र महामानवको ब्यारोमिटर (मापन यन्त्र) बनेर हाम्रो मनलाई झस्काउन आउँछ। त्यस्तै घटनाहरु मनको तराजुमा राखेर जोड्दा देखाएका तौलले आफू कति पानीमा छ भन्ने कुरा जानकारी गराउँदछ। जीवनमा जतिसुकै खतराको घण्टी बजोस्, समाजलाई नबुझ्ने मान्छेले आफैले आफैलाई सताएको हुन्छ।

'भेट्नु छुट्नु त जीवनको रीत हो' भन्दछ। को सँग कहाँ ? कसरी ? भेट भयो ? भन्दा पनि त्यो भेटले आफूलाई पारेको प्रभाव महत्वपूर्ण हुन्छ। त्यस्तै धेरै मान्छेहरुको माझमा मैले आशाकाजी बासुकलालाई भेटें। 'जीवनको आनन्द कहाँ छ ? आफू मेटेर दिनु जहाँ छ' भन्ने सोचले प्रगतिवादी धारमा हिँड्नु भएका आशाकाजी दाइको सरल स्वभाव हँस्सी ठट्टा, जहाँतहीँ  रमाइलो गर्नुपर्ने स्वभावसँगै प्रगतिवादी सोचले गोलबन्द हुने क्रममा नेमकिसंघ (हाल नेमकिपा) को छातामुनि सैद्धान्तिक धागोबाट उन्ने क्रममा वहाँसँग मेरो भेट भयो। वि.सं. २०३६ सालपछि आदरणीय नारायणमान दाइसँग भेट भएपछि आफ्नै वडामा अंग्रेजी र वर्ग परिचय बुझ्ने र सिक्ने अवसर पाएँ। विस्तारै साहित्यिक झुकाव बढ्न थाल्यो।

बिस्तारै चोटा बैठकहरुमा कविता लेख्दै सुनाउन थालें । आशाकाजी दाइले राम्रो भनी प्रोत्साहन थप्नु हुन्थ्यो। भूमिगतसेल कमिटीहरुमा सैद्धान्तिक कुराहरु राखेर सधैं उत्साह थपिदिने आशाकाजी दाइसँग जीवित रहुन्जेल साथै रहें। सँगै हास परिहास र उठबसको क्रममा बचत भैरहेका अनगिन्ती अमृतछापहरु आज पनि नोटको हस्ताक्षर झैं बैध बनेर बसेको छ। संगठनकै क्रममा सँगै जाँदा बोलेका शब्दहरु आज पनि कर्णप्रिय गीत झैं गुञ्जेर जीवनोपयोगी शिक्षा झैं मनका उद्गारभित्र कैद भएर बसेको छ। वर्गीय भावना उजागर गर्ने ती भावनाका शब्दहरु स्मृतिका पानाहरुमा ताम्रपत्र झैं स्थापित भै बसेको छ।

संघर्षशील भावनामा कहिल्यैं कमी नल्याउने वहाँका भावनाहरु कहिले पर्दावाल पूर्णाङ्की नाटकमा जनताका गीत बनेर दबू-दबूमा, टोल-टोलमा गुञ्जन्थे। क्रान्तिको झण्डा बोकेर शत्रुसँग लड्ने भावनाका गीतहरुले त्यतिबेलै शोषकहरु डराएका थिए। शोषणको दाम्लो चुडालेर अगाडि बढ्नु पर्ने वर्गीय भावनाका कुराहरु "गाइँचा म्यें" भएर गुञ्जिन्थे। बाली काट्ने आन्दोलन, भर्पाइ आन्दोलन, किसान संघर्षका घटनाहरु सुनाउँदै संगठित गर्न सिपालु वहाँको 'म' भन्दा 'हामी'मा एकाकार हुने भावनाहरु अझै पनि तरङ्गित छन्। सांस्कृतिक संघमा सँगै बस्दा वा गाईजात्रा कमिटीमा सँगै काम गर्दा होस्

छिट्टै निर्णय गर्न सक्ने र छिटो-छिटो गीत बनाउन सक्ने क्षमता बेजोडको छ। वहाँले भन्दै गर्दा मैले लेख्दै गर्दाको त्यो क्षण अभै पनि ताजै छ। वहाँमा रहेको वर्गीय भावनाले मलाई वहाँको नजिक पुऱ्यायो। प्रभात मा.वि.को प्रचार क्रम देखि तःमुँज्याको छनोट कमिटीमा होस् वहाँ सकृय भएर काम गर्नुहुन्थ्यो। सांस्कृतिक क्षेत्रमा रहेर काम गर्दा 'नाव दुगुया ला' (गन्हाउने बोकाको मासु) नाटक लेखेर प्रदर्शन गर्नुभएको थियो। जुन धेरैले राम्रो नाटक भनी प्रशंसा गरे। समाजमा हुने गरेका विकृति र विसंगतिलाई साहित्यको माध्यमबाट उदंग्याउने र जनताको सचेतना कार्यक्रममा सहभागी हुने कार्यले वहाँ जनतामाफ परिचित व्यक्तिमात्र नभई लोकप्रिय समेत बन्नुभएको थियो। वहाँका साहित्यभित्र र सोही अनुरुपको कार्यमा तल्लिन रहने जाँगरिलो र उत्साही भावनामा कहिल्यै कमी आउन दिनुभएन। मैले वहाँको श्रद्धाञ्जली स्वरुप 'शरदया मिला, आशाकाजी बासुकला' शर्षिकमा एउटा कविता लेखेर मजदूर दैनिकमा प्रकाशित गरेको थिएँ। साँच्चिकै शरद ऋतु कै चन्द्रमा जस्तै सफा चम्किला आशाकाजी बासुकलाका गुणहरु अविस्मरणीय छन्। सधैं संघर्षशील भावना राख्ने वहाँको जुझारु भावना हामीले अनुशरण गर्न सके वहाँ प्रतिको स्मरण सार्थक हुनेछ। वहाँ शिक्षक, प्रधानपञ्च, सांसद जे जे भए भए, तर जनताका सहयोगी आँखाका नानी जस्ता कार्यकर्ता भई जीवनलाई खर्च गर्नुभयो। मैले चिनेको आशाकाजी दाइ, मैले बुझेका आशाकाजी दाइ, मैले देखेको आशाकाजी दाइ सुन्दा मात्र हैन हुँदा त्यतिकै राम्रा व्यक्ति थिए भन्नुमा अत्युक्ति नहोला। मीठो सम्झना, अविस्मरणीय सम्झना आशाकाजी बासुकलाको।

धन्यवाद !

# मेरो स्मृतिमा
# आशाकाजी बासुकला



**भक्त राजभण्डारी**
(संस्थापक प्रिन्सिपल)

शिक्षण व्यवसायको सिलसिलामा मैले २०२८ सालमा ऐतिहासिक सांस्कृतिक नगर भक्तपुर प्रवेश गरेको हो। भक्तपुरमा बसेर नै मैले आफ्नो शिक्षण कार्यलाई भक्तपुर नगरपालिका वडा नं. १७ मा सञ्चालन भएको सिद्धार्थ वोर्डिङ स्कुलदेखि भक्तपुरकै भौखेल गाउँमा आफ्नै एभरेस्ट इङलिस स्कूलको स्थापना गरी हाल भक्तपुर नगरपालिका वडा नं. १५ मिबाछेँसम्म आइपुग्दा ४५ वसन्त पार भइसकेको छ।

समयका विविध आरोह-अवरोहभित्र मैले भक्तपुरबासीहरुबाट धेरै माया, ममता, एवम् साथ सहयोग र सल्लाह प्राप्त गरिरहेको छु। सोही सन्दर्भमा विभिन्न सहृदयी मित्रहरु बीच स्व. श्री आशाकाजी बासुकलालाई अत्यन्तै सहृदयी आदरणीय मित्रका रुपमा मैले बुझेको हुँ। मेरो र उहाँको परिचय ०४० सालमा भएको हो। उहाँलाई राजनीतिज्ञका रुपमा भन्दा पनि म आफू पनि शिक्षा क्षेत्रको विकासमा लागिपरहेको तथा उहाँ पनि एक कुशल एवम् योग्य शिक्षक भएर शिक्षा क्षेत्रमै रहनुभएको आधारमा एक आर्दश व्यक्तित्वको रुपमा नजिकबाट परिचित भएको हो। त्यसपछि भक्तपुर नगरपालिकाको निर्वाचित प्रमुख, सांसद आदि भएर देश र जनताको सेवामा उहाँ समर्पित हुनुभयो।

एभरेस्ट इङलिस स्कूल सञ्चालन गर्नका निम्ति आवश्यक घर निर्माण गर्न मैले जग्गा खरीद गरी घर निर्माण गरेसँगै स्कूल सञ्चालनमा ल्याएकै समयमा आशाकाजीज्यूको पनि नजिकै रहेको आफ्नो जग्गामा घर निर्माण गर्नुभयो। यसपछि उहाँको र मेरो टोल छिमेकी परिवारको समेत सम्बन्ध रहन गयो, जुन मेरा लागि सौभाग्यको विषय थियो। पहिले यो स्थानमा ८, १० घर मात्र थिए। पछि बस्ती बढ्दै गएपछि ठाउँको पहिचान र परिचयका लागि नामांकरण गर्न हामी टोलबासीहरु भेला भयौं र टोलको नामांकरण गर्ने उपयुक्त नामको खोजी भयो र मैले आफ्नो सोचअनुसार यो ठाउँ पहिले मेथी-बारीको रुपमा प्रख्यात भएकाले नेपालभाषाबाटै 'मिबाछेँ' राख्नु पर्ला भन्ने प्रस्ताव गरें। यो प्रस्तावलाई उहाँबाट सहर्षपूर्वक समर्थन भयो र अन्ततः यो प्रस्तावलाई भेलाले सर्वसम्मत रुपमा पारित गरियो। आज मिबाछेँको नामबाटै यो बस्तीको नाम परिचित हुन गएको छ।

आज हामीमाझ आशाकाजी बासुकलाज्यू हुनुहुन्न। तर उहाँले आफ्नो जीवनकालमा राजनीतिक, सामाजिक, सांस्कृतिक आदि विभिन्न क्षेत्रमा धेरैभन्दा धेरै योगदानहरु पुऱ्याउनु भएको छ। यस अर्थमा जसरी उहाँले भक्तपुरबासीहरुको मन जित्नु भएको छ। टोलबासीहरुलाई अत्यधिक उत्साहका साथ संलग्न गराई ढल निर्माण तथा ईंटा छपाई समेत गराई मिबाछेँ टोललाई नमूना टोलका रुपमा पहिचान बनाउन उहाँ सफल हुनुभएको थियो। त्यसैगरी मैले यस टोलका निम्ति राखेको नामको प्रस्ताव र उहाँको समर्थनले बसेको "मिबाछेँ टोल" मेरो मस्तिष्कमा सदा अविस्मरणीय रहिरहने छ। आशाकाजी बासुकलाज्यू अमर बन्नुभएको छ।

# राज्यस्तरबाट रचिएको षड्यन्त्र परास्त गर्न सफल : आशाकाजी



लक्ष्मीनारायण दुवाल
(प्रधानाध्यापक, समाज सुधार निम्न मा.वि.)

२०४५ भदौ ५ गते
विनाशकारी भूकम्प गयो
पीडितलाई राहत दिन
ह्योजु पठायो ।
नेमकिपा नष्ट गर्ने
पंचायतको आज्जु

बलिको बोको भयो
कर्ण ह्योजु ।
सूर्यलाई छेक्न खोज्ने
महामूर्ख पञ्चहरु
आफैं नष्ट हुन्छन् हेर
साथी भाईहरु ।

माथि उल्लेखित हरफहरु ०४५ सालको भक्तपुर काण्डबाट जेलजीवन बिताइरहेका आशाकाजी बासुकलाले जेलभित्र बन्दीहरुको बीचमा भएको मनोरञ्जनात्मक कार्यक्रममा गाउनु भएको गाइँचा गीतका श्लोकहरु हुन् । बिना तयारी बिना लिखित कार्यक्रममा उठेर लय र भाका मिलाएर गीत गाएको देखेर बन्दीहरु छक्क भई सुनिरहेको साथै उहाँ गीत गाउँदै गर्दा भक्तपुरमा बन्दीहरुले ताल र चाल मिलाई गाइँचा नृत्य गरी गीतमा साथ दिंदा कार्यक्रम अति रमणीय भएको हामीलाई सुनाएको अहिले पनि स्मरण भइरहेको छ ।

'बासुकला' मेरो बाल्यकालमै परिचित थर हो । भक्तपुरको व्यासी टोलका बासुकलाहरुको क्रियाकलाप सम्बन्धमा कहिलेकाहीँ सुनाउने गरिन्थ्यो ।

समाज सुधार मा.वि. को स्थापना शिक्षाप्रेमी बुद्धिकुमार गोसाईं काकाको घरमा भएको थियो । मेरो शिक्षाको श्रीगणेश समाज सुधार मा.वि.मा स्थापनाकालमै भएको थियो । हामी स-साना ठिटाहरु टोलको सार्वजनिक पाटीमा पढ्ने गर्दथ्यो । ठूला दाइहरु काको घरमा माटन तल्लामा पढ्ने गर्थे । दाइहरुलाई कान्छा बासुकलाले पढाउने गर्नुहुन्थ्यो । त्यही क्रममा आशाकाजी बासुकलालाई चिनेको थिएँ ।

जब हामी समाज सुधार शिक्षामा पहिलो पाइला टेक्दै थियौं, त्यसबेला आशाकाजी बासुकला लगायतको सक्रियतामा व्यासीबाट 'किसान समस्या' नामक पूर्णाङ्की नाटक प्रदर्शन गरेको थियो । भक्तपुरका टोलटोलमा राति प्रदर्शन गरिने उक्त नाटक हेर्न मानिसहरुको भीड लाग्थे । दर्शकहरु सबै मिलेर आनन्दले भुइँमा बसेर नाटक हेर्ने गर्थे । त्यसबेला हामी केटाकेटीहरु सो नाटक दोर्त्याई तेर्त्याई हेर्न जान्थ्यौं । सो नाटकको 'ज्यामी दाइ मेहनती छ हे खः, किसान थ्व बुँ छंगु खः' बोलको मंगलाचरण गीत हामी समाज सुधारमा राष्ट्रिय गीतकै रुपमा दैनिक गाउने गर्थ्यौं ।

०२१ साल पूर्व भक्तपुरमा किसानहरुको अवस्था अति दयनीय थियो । अशिक्षित, अज्ञानी र रुढिवादी धारणाबाट ग्रस्त थियो । शोषण, दमन, अन्याय, अत्याचार र हेलाहोचो ज्यादा थियो । त्यस्तो अवस्थाबाट समाजलाई मुक्त गर्नु थियो । किसानहरुमाथि अन्याय, अत्याचार, शोषण दमन गर्ने, शोषक सामन्तहरुसँग संघर्ष गर्नु थियो । शोषण दमनबाट मुक्त गरेर किसानहरुको आर्थिक तथा सांस्कृतिक स्तर माथि उठाउनु थियो । वर्ग संघर्ष बिना सामन्ती शोषण अन्त्य गर्न सकिँदैनथ्यो । संघर्ष गर्न पीडित किसान जनतालाई सचेत, शिक्षित र संगठित गर्न राती कक्षा संचालन गर्ने, चोटा मिटिङहरु गर्ने, चोक

सभाहरु गर्ने, साहित्य गोष्ठी, नाटक प्रदर्शन गर्ने, विद्यालयहरु संचालन गर्ने आदि पार्टीको नीति अनुरुप व्यासीका युवाहरु सक्रिय भए । ती सक्रिय युवाहरुमा आशाकाजी बासुकला, शिवभक्त बासुकला, कान्छा बासुकला, गोपाल बासुकला र बालमुकुन्द बासुकला आदि हुनुहुन्थ्यो । ०२१ सालमै पंचायती सरकारले भूमिसुधार लागू गऱ्यो । पार्टीले त्यो भूमिसुधारलाई किसानहरुको हितमा उपयोग गर्ने नीति लियो । अशिक्षित किसानहरुलाई भूमिसुधार कालो अक्षर भैंसी बराबर थियो । आफूले जोतिरहेको जग्गाको मोहियानी आफ्नो नाममा राख्नुपर्दछ भन्ने पनि थाहा थिएन । थाहा भएका कतिले जग्गा धनीका अगाडि बोल्ने आँट गर्न सकेनन् । यस्तो अवस्थामा पार्टीका कार्यकर्ताहरु नापी भएका खल्ला खल्लामा पुगेर वास्तविक किसानका नाममा जोत लेख्न संघर्ष गरे । ती संघर्षशील युवाहरुमा आशाकाजी बासुकला पनि एक हुनुहुन्थ्यो । ०२५ सालमा विस्तारवादी भारतले नेपालको सुस्ता क्षेत्रमा सीमा अतिक्रमण गऱ्यो । त्यसको विरोधमा पहिलो जुलुस भक्तपुरमा भयो । पंचायती प्रहरी आएर जुलुसलाई दबाउन खोज्यो । प्रदर्शनकारी जनताले प्रहरी दमनको प्रतिकार गरे । प्रदर्शनकारी तथा प्रहरीहरु धेरै घाइते भए । त्यस घटनाले धेरैको नाममा वारेन्ट पूर्जी जारी गरियो । वारेन्टमा परेका मध्ये आशाकाजी बासुकला पनि हुनुहुन्थ्यो ।

आशाकाजी बासुकलालाई म मेरो आदरणीय गुरुकै रुपमा मानेको छु । स्कूलको कक्षामा उहाँसँग पढ्ने अवसर नमिले पनि उहाँको अन्य कक्षाहरुमा बस्ने मौका मिलेकै थियो ।

०३६ साल र ०४२ सालको शिक्षक आन्दोलनमा आशाकाजी सर सक्रिय हुनुहुन्थ्यो । ०४२ सालको शिक्षक आन्दोलनमा आशाकाजी सर सँगसँगै आन्दोलनमा गएको अहिले पनि समरण छ । भक्तपुर दरबार क्षेत्रको विद्यार्थी निकेतन मा.वि.मा शिक्षक भेला भएको थियो । पंचायत परास्त शिक्षकहरु आन्दोलन विसर्जन गर्ने पक्षमा थिए र विद्यालय संचालन गर्ने निर्णय गराउन खोज्दै थिए । हामी ने.क्रा.वि.सं. मा समर्पित शिक्षकहरु माग पूरा नभएसम्म आन्दोलन नरोक्ने र हड्ताललाई कायम नै राख्ने पक्षमा थियौं । आन्दोलनलाई रोक्ने र नरोक्ने सम्बन्धमा वादविवाद हुँदै थियो, विद्यालय बाहिर प्रहरीले घेरा हालिसकेको थियो । आन्दोलन अन्त्य गराउन प्रहरीको दबाब आएको शिक्षकहरुलाई थाहा भयो, तर आन्दोलनलाई जारी राख्ने पक्षमा टुंगियो । भेलामा सहभागी सबै शिक्षकहरुलाई काठमाडौंको महेन्द्र पुलिस क्लबमा बन्दी लगियो । त्यसमा आशाकाजी सरसँगै हामी सबै थियौं ।

आन्दोलन होस् या उत्सवमा होस्, भोजमा होस् या काममा होस्, जहाँ पनि ख्यालठट्टा गरी रमाइलो गर्ने बानी, हँसिलो मुहार, मीठो बोलीवचन, केटाकेटीदेखि बुढापाकासँग समेत घुलमेल हुन सक्ने व्यवहारिकतामा उहाँको राम्रो गुण थियो ।

शोषक, सामन्त, अन्याय अत्याचारको विरुद्ध, शोषित पीडित गरीब जनताका पक्षमा गीत, कविता, नाटक, व्यंग्य लेखन र कलम चल्थ्यो । आशाकाजी सरलाई जनताको साहित्यकार नै भन्नुपर्ने हुन्छ । भक्तपुरमा प्रत्येक वर्ष मनाउने गाईजात्रा वर्षमा प्रस्तुत गरिने व्यंग्यात्मक गाईंचा गीतहरु धेरै लेख्नुभएको हामीलाई थाहा छ । लय र भाका मिलाएर धाराप्रवाह रुपमा गाईंचा गीत भन्न र लेख्न सक्ने क्षमता उहाँमा थियो । त्यसैले कसै कसैले उहाँलाई गाईंचा गीतका सम्राट पनि भन्ने गरेका थिए । आशाकाजी सरको सिको गर्दै हिजो आज गाईंचा गीत लेख्ने लेखकहरु भक्तपुरमा धेरै भइसकेका छन् ।

युवा अवस्थादेखि नै पार्टी संगठनमा बसेर हुर्कंदै आएकाले होला, आशाकाजी सर अनुशासित, मेहनती, कर्तव्यनिष्ठ, लगनशील, निस्वार्थी र सरल हुनुहुन्थ्यो । सबैसँग मिलेर बस्ने निडर र अगुवा हुनुहुन्थ्यो ।

०४५ सालको भक्तपुर काण्डमा भाद्र ९ गतेको मध्यरातमा पार्टीका अध्यक्ष का. रोहित, रा.प.स. गोविन्द दुवाल, प्रधानपञ्च आशाकाजी बासुकला लगायत सयौं जनप्रतिनिधिहरु पक्रेर लगेको गहिरो घाउ आज पनि आलै छ । भक्तपुरको महत्वपूर्ण पदहरुमा रोहित पक्षकाले जितेर निस्वार्थ रुपले जनताको सेवा गरेका पञ्चायतका लागि ठूलो हाँक ठान्यो र पञ्च महा पञ्चहरुको मुटु जल्यो । यही पीडाको रीस फेर्न पञ्चायती राज्यस्तरबाट रचिएको षडयन्त्रपूर्ण भक्तपुर काण्डमा सर्वस्व सहित आजीवन कैद, फाँसी समेतको माग भएको थियो । तर पंचायतको षडयन्त्र पर्दाफास भयो र पञ्चायत आफैं नाश

भयो । न्यायप्रेमी जनताको जीत भयो । पञ्चायती राज्यस्तरबाट गरिएको षडयन्त्रलाई परास्त गर्न सफल आशाकाजी सर निर्दयी कालसामु पराजीत हुनुपर्‍यो । आखिर २०५७ साल असोज महिनामा आशाकाजी सरलाई यमदूतले लगेरै छाड्यो । आशाकाजी सरको भौतिक शरीर आज हामी सामु नभए पनि उहाँको नाम, उहाँको विचार हाम्रो मन मस्तिष्कमा बाँचिरहेको छ, सदा सर्वदा अमर भइरहने छ ।

# स्वर्गीय बासुकलाको सम्झनामा केही हरफ



**शंकर प्रसाद पौडेल**
पूर्व प्राचार्य, एस.ओ.एस. हर्मन माइनर
उ.मा.वि., सानोठिमी

जहाँसम्म मलाई सम्झना छ २०५४/५५ सालतिर हुनुपर्छ, एस.ओ.एस. हर्मन माइनर उ.मा.वि. सानोठिमीको प्राचार्यको हैसियतले मलाई भक्तपुर जिल्लामा हुने विभिन्न शैक्षिक तथा सामाजिक समारोहमा सामेल हुने र यस क्षेत्रका प्रवुद्ध व्यक्तिहरूसँग भेट्ने, चिनाजानी गर्ने मौका मिल्दथ्यो । यस्तै अवसरहरुमा परिचित हुनुभएका व्यक्तित्व हुनुहुन्थ्यो- आशाकाजी बासुकला । भक्तपुर जिल्ला भौगोलिक हिसाबले सानो भएपनि यसलाई शैक्षिक, सांस्कृतिक र वातावरणीय हिसाबले अरु जिल्लाभन्दा सानो हुन दिनु हुँदैन भन्ने मान्यता राख्नु हुने श्री बासुकलाको सामिप्यले मैले पनि धेरै प्रेरणा पाएको छु । पछि, वहाँकी छोरी रोजालाई एस.ओ.एस.स्कूलमा अध्ययनका लागि भर्ना गर्न ल्याउनु भएपछि वहाँसँगको भेटघाट अझै बाक्लियो र एक अर्काका विचार र अनुभव आदान प्रदान गर्ने मौका मिल्यो । शिक्षालाई स्तरीय र गुणात्मक कसरी बनाउने र गुणात्मक शिक्षालाई सामाजिक तथा आर्थिक दृष्टिले विपन्न आम बालबालिकाको पहुँचसम्म कसरी बिस्तार गर्ने भन्ने विषयमा वहाँ लागिरहनु हुन्थ्यो । उहाँले त्यस्ता बालबालिकाको हितका लागि कतिपय समयमा सिफारिस गरेर एस.ओ.एस. बालग्राममा पठाउनु भएको पनि मलाई सम्झना छ । समय बित्दै गयो, वहाँकी छोरी रोजाले एस.ओ.एस. विद्यालयबाट उत्कृष्ट अंक सहित एस.एल.सी. उत्तीर्ण गरिन् र आ.एस्सी. पढ्न सेन्ट जेभियर्स कलेजमा गइन् । त्यसैबेला आशाकाजी बासुकलाको निधनको खबरले वहाँको अन्य शुभ-चिन्तक र आम जनता जस्तै म पनि मर्माहत भएको थिएँ । वहाँको निधनबाट एक कर्तव्यनिष्ट, इमान्दार राजनीतिक नेता र समाजसेवी देशले गुमायो भने भर्खर आफ्नो भविष्यको रेखा कोर्न थालेका छोराछोरी र परिवारमाथि त बज्र नै पऱ्यो । आफ्नो विद्यार्थी भएका नाताले पनि रोजाको पढाई के हुने होला भन्ने विषयमा मैले पनि विशेष चासो राख्थैं । मेरो आफ्नै छोरी तारा पनि रोजाको सहपाठी भएकाले उनको विषयमा बुझ्न मलाई अझै सजिलो पर्दथ्यो । रोजाले आई.एस्सी. पछि पुल्चोक क्याम्पसबाट इन्जिनियरिङ्ग पास गरेर थप अध्ययनका लागि दक्षिण कोरिया गएपछि धेरै वर्षसम्म मेरो सम्पर्क हुन सकेन । तर लामो समयको अन्तरालपछि २०६९/७० सालतिर जब फेरि उनीसँग भेट भयो, सानोठिमीमा त्यतिबेला उनी एकजना युवकसँगै थिइन् र उनसँग मलाई स-गौरब परिचय गराइन्- आफ्नो श्रीमान् भनेर । दुबैजना टेलिकममा काम गर्न थालेको कुरा थाहा पाएर मेरो खुशीको सीमा रहेन । त्यसपछि पनि रोजासित आक्कल झुक्कल भेट हुन्थ्यो, सामान्य कुराकानी, सञ्चो बिसञ्चोमा सीमित रहन्थ्यो । केही दिन पहिले म सँगै समय लिएर, रोजा मलाई जब भेट्न आइन् त्यतिबेला उनी विशेष उद्देश्य लिएर आएकी थिइन् । "बुबाको निधनपछि तुरुन्तै हामीले बुबाका लागि केही गर्न सकेनौं, तर अब भाई र म दुबै सक्षम भइसकेका छौं, त्यसैले अब वहाँको सम्झनामा केही गर्नुपर्छ भन्ने मान्यता लिएर हामी अगाडि बढ्दैछौं" भनेर भनीरहेका रोजा बडो भावुक देखिन्थिन् । बुबाको सम्झनामा आशाकाजी बासुकला स्मृति प्रतिष्ठान गठन गर्न प्रस्ताव गरिएको र हाललाई वहाँको जन्म जयन्तीका अवसरमा एक संग्रहणीय स्मृति ग्रन्थ प्रकाशित गर्ने कार्यक्रम रहेकाले सम्झनामा केही शब्दहरू मलाई पनि लेखिदिन आग्रह उनले गरिन् । कुरा गर्दै जाँदा रोजासँग पनि उनको बुबामा जस्तै केही न केही रुपमा समाजसेवा गर्ने अठोट रहेको पाएँ । विपन्न वर्गका महिला तथा बालिकाहरूलाई कम्प्यूटरको आधुनिक प्रविधिले कसरी सुशिक्षित बनाउने भन्ने योजना सहित उनी लागेको देख्दा उनका बुबाका अधूरा सपना पूरा हुने कुरामा म विश्वस्त भएँ ।

यस अवसरमा स्वर्गीय आशाकाजी बासुकलाप्रति हार्दिक श्रद्धाञ्जली व्यक्त गर्दै वहाँका छोराछोरी एवम् परिवारजनमा सुख, शान्ति र सम्बृद्धिका साथै स्वर्गीय बासुकलाले देखाउनुभएको बाटोमा अविचलित भएर हिंड्ने हौसला उनीहरूलाई मिलिरहोस् भन्दै शुभकामना व्यक्त गर्दछु ।

# प्रभात स्कूलका परिकल्पनाकारः आशाकाजी सर



**अरुण कँडेल**
**प्रिन्सिपल – हर्बन पब्लिक स्कूल**
कोटेश्वर, काठमाडौं ।

२०५६ मंसिर २६ गतेदेखि २०६४ भाद्र ४ गतेसम्म तात्कालिन प्रभात ईङ्गलिस सेकेण्डरी स्कूल (हाल प्रभात उच्च मा.वि.) मैले प्रिन्सिपलको रुपमा कार्य गरेँ । प्रभात स्कूलमा प्रिन्सिपल भएर काम गर्ने अवसर पाएको रोचक प्रसंग छ । म काठमाडौं आउनुभन्दा अगाडि वीरगञ्जको गाउँमा आफ्नै स्कूल विकास गर्ने कार्यमा तल्लीन थिएँ । त्यसबेला साथी मार्फत् तात्कालिन माननीय सांसद आशाकाजी बासुकलासँग मेरो सम्पर्क भयो । समाजबाटै सञ्चालित समाजकै लागि केही गर्नुपर्छ भनी आदर्श बोकेर व्यक्तिगत रुपमा केही स्वार्थ नराखेर काम गरिरहेका नेतृत्वहरुसँग १,२ घण्टा कुराकानी भयो । त्यस पश्चात् मैले निणर्य गरे कि मैले चलाइरहेको स्कूल मेरो साथीलाई जिम्मा दिएर म भक्तपुर आएँ । त्यसबेला मलाई आशाकाजी सर र सत्यलाल सरहरुले मलाई उत्साह बढाउनु भएको थियो । म स्कूलको प्रिन्सिपल भएपनि ठूलो उच्च स्कूलको प्रिन्सिपल प्रभात स्कूलबाटै प्रारम्भ भएको थियो । आशाकाजी सर जहिले पनि मेरो प्रेरणाको स्रोत हुनुहुन्थ्यो । उहाँले मलाई औपचारिक रुपमा 'सर' मात्र भन्नुहुन्थ्यो । तर हामी दुइजना मात्र हुँदा उहाँले मलाई भाइ जस्तो व्यवहार गर्नुहुन्थ्यो । म तराईंबाट आएको र भक्तपुर मेरो पहिलो आगमन भएकाले उहाँले भक्तपुरको कम्प्लेक्स समाजबारे जानकारी गराइरहनु हुन्थ्यो । उहाँ सधैँ भन्नुहुन्थ्यो कि हामीले गरेको काम मृत्युपश्चात् पनि समाजले सम्झिने गरी काम गर्नुपर्छ । अहिलेको प्रभात उच्च मा.वि.को नयाँ भवनको जग्गा किन्ने उहाँको विशुद्ध सोच हो । उहाँलाई साथ दिने उहाँकै भाइ शिक्षाविद् लक्ष्मी भक्त बासुकलासँग सल्लाह गरेर शिक्षा क्षेत्रमा नयाँ मोड ल्याउन अग्रसर गराउनुहुन्थ्यो । मलाई पनि अंग्रेजी भाषाबाट बोल्न र पढाउन जोड गर्नुहुन्थ्यो । अहिले पनि म सम्झन्छु उहाँको सपना साकार बनाउन लक्ष्मी भक्त बासुकला र बालमुकुन्द बासुकलाहरुको एउटा कमिटी बनाउनु भयो र त्यो कमिटीबाट जग्गा खरीद गरियो । जग्गा खरीद गरिसकेपछि घर बनाउनका लागि ऋण चाहिएको भएर त्यो बेला प्रिन्सिपल भएका नाताले मेरो तीन पुस्ताको नाम लेखेर आफैँले दुबै हातबाट ल्याप्चे राखेर नवदूर्गा फाइनान्सबाट २८/३० लाखको ऋण लिएँ । त्यो ऋणबाट प्रभात नयाँ भवन तयार गरेँ । यो सबैको श्रेय आशाकाजी सरलाई नै जान्छ ।

आशाकाजी सरले जहिले पनि विद्यार्थीलाई बढी भन्दा बढी सुविधा दिनुपर्ने, शिक्षक शिक्षिकालाई सुविधा दिएन भने स्कूलले चाहेर पनि केही गर्न नसकिने भन्नुहुन्थ्यो । उहाँसँग एक, डेढ वर्षको काम गर्दा उहाँ सहयोगी नै हुनुहुन्थ्यो तर कहिल्यै रिसाएको र झर्केको पाइनँ । यदि मैले केही गरी गल्ती भयो भने यस्तो गर्नुपर्छ है भनेर सम्झाउनुहुन्थ्यो । मलाई लाग्छ उहाँ विशुद्ध रुपमा राजनीतिज्ञ र समाजसेवी हुनुका साथै शिक्षा क्षेत्रमा दखखल पनि थियो । उहाँले त्यस समयमा स्नातकसम्म मात्र गर्नु भएकाले स्नातकोत्तर गर्ने इच्छा प्रकट पनि समय समयमा गर्नुहुन्थ्यो । उहाँ मेरो घरमा भक्तपुरका साथीहरुसँग पनि आउनु भएको सम्झन्छु । अहिले पनि म सम्झन्छु कि उहाँ बितेको २०५७ साल अष्टमीका दिन राती ८ बजेको समाचारबाट उहाँको निधनको खबरले म स्तब्ध भएँ ।

आज प्रभात ईङ्गलिस उच्च मा.वि. विविध कारणले राम्रो भइरहेको छ । स्कूलको प्रगति भएकोमा स्वर्गीय आशाकाजी सरको योगदानलाई हामीले कदापि बिर्सनु हुँदैन । उहाँकै परिकल्पना अनुसार अहिले पनि स्कूल अगाडि बढिरहेको छ । स्वर्गीय आशाकाजी सरले रोप्नु भएको स्कूल आगामी दिनमा पनि उत्तरोत्तर प्रगति गर्दै जाओस् भन्ने शुभकामना व्यक्त गर्दछु ।

भक्तपुर जिल्लाका पूर्व जनप्रतिनिधि प्रधानपञ्च साथै सांसद स्वर्गीय आशाकाजी बासुकलाको स्मृतिमा प्रकाशित यस स्मृति ग्रन्थले उहाँका योगदान र कृतिलाई सबैका स्मरण राख्न सफल होस् भनी हार्दिक शुभेच्छा प्रकट गर्दछौं ।

**गंगा प्रसाद सुवाल**

**चूनदेवी, काठमाण्डौं**

भक्तपुर जिल्लाका पूर्व जनप्रतिनिधि प्रधानपञ्च साथै सांसद स्वर्गीय आशाकाजी बासुकलाको स्मृतिमा प्रकाशित यस स्मृति ग्रन्थले उहाँका योगदान र कृतिलाई सबैका स्मरण राख्न सफल होस् भनी हार्दिक शुभेच्छा प्रकट गर्दछौं ।

**भक्तपुर इट्टा व्यवसायी संघ**

**भक्तपुर । ०१-६६१९९७०**

भक्तपुर क्षेत्र नम्बर २ का जनताबाट निर्वाचित तत्कालीन प्रतिनिधिसभाका सदस्य तथा भक्तपुर नगरपालिकाका प्रधानपञ्च स्वर्गीय आशाकाजी बासुकलाको स्मृतिमा उहाँको परिवारजनबाट प्रकाशित स्मृति ग्रन्थ सबै पाठकका लागि उपयोगी र प्रेरणादायी बनोस् ।

**आक्वा सेभेन मिनिरल वाटर फ्याक्ट्री प्रा. लि.**

**झौंखेल, भक्तपुर**

# निश्वार्थ नेता, बासुकला



**गंगा प्रसाद सुवाल**

हाम्रा आशाकाजी सर, हामी सानो छँदादेखि आ सरबाट हाम्रो वडामा एक किसान परिवारबाट प्रथम एस.एल.सी. पास गरेको एक व्यक्तित्व हुनुहुन्थ्यो । उहाँकै प्रेरणाबाट भक्तपुर नगरपालिका ९ नं. वडामा २०३५ सालबाट फेरी चार-पाँचजना किसान परिवारबाट एस.एल.सी. पास गरेको देखिन्छ । उहाँ एक शिक्षक साथै प्रचारक पनि हुनुहुन्थ्यो । अक्सर कुनै गरीवका छोराछोरीलाई उहाँको निजी निवासस्थानमा स्कूल खोलेर उहाँ निःस्वार्थ निःशुल्क १ कक्षा देखि ४ कक्षासम्म पढाई गराउनुभयो । ०३६ सालसम्म ९ नं. वडाबाट एस.एल.सी. पास भएको सबै किसान परिवार उहाँकै देनबाट भएका हुन् भन्दा अत्युक्ति हुने छैन । ०२६ सालतिर उहाँ पञ्चायत विरोधी भएर जेल पर्नुभयो । उहाँले चलाउनुभएको स्कूलमा चीन सचित्र, रातो तारा, अध्यक्ष माओको जीवनी, चाउएनलाई र हो चिमिन्ह आदि विश्वका ठूला कम्युनिष्ट नेताहरुका जीवनीहरु पनि सुनाउनु हुन्थ्यो । उहाँ सधैं हामीले देश र जनताको सेवा गर्नुपर्छ भनी पठनपाठन गराउनु हुन्थ्यो । उहाँ त्यस्तो व्यक्तित्व हो, जसलाई प्रत्येक गाईजात्राको १ महिना अगाडिदेखि फूर्सद हुँदैनथ्यो । किनभने उहाँ जनसहित्य लेख्ने, गाईजात्रामा गाईंचा मे र नाटक लेख्ने गर्नुहुन्थ्यो । उहाँका प्रख्यात नाटकहरु : १) विश्वास या खिंगु लँ २) बदला ३) सिरपा ४) छप्पा छक तुतिखं चुया आदि हुन् । नाटक भक्तपुर नगरभरी मुख्य मुख्य ठाउँहरुमा देखाउँदा उहाँ गाईजात्राभरी भूमिगत बस्नुपर्ने हुन्थ्यो । त्यतिबेला कुनैपनि नाटक प्रदर्शन गर्नु छ भने जि.प्र.का.मा सेन्सर गराएर मात्र देखाउन मिल्ने भएकाले नाम मात्र पास गरी ड्रामाहरु सबै परिवर्तन गरी लेख्ने, त्यसपछि नाटककारलाई सधैं जि.प्र.का. धाइरहनुपर्ने हुन्थ्यो । त्यस्तो हुने भएकाले कारण 'आ का सर' भनेपछि उहाँलाई सबैले चिन्थे । विद्यार्थीहरु पनि त्यस्तै अनुशासनमा बस्थे र त्यस्तै व्यक्ति भएका कारण वहाँ ०४३ सालमा प्रधानपञ्च पदमा निर्वाचित हुनुभयो । भक्तपुर नगर पालिकाले अंगाल्दै आएको 'पूर्खाले सिर्जेको सम्पत्ति हाम्रो कला र संस्कृति' श्लोगन उहाँबाटै प्रतिपादित भएको हो । उहाँको प्रभाव भ.न.पा. नगरभरी हुँदै जिल्लाकै उच्च नेताका रुपमा देखियो । उहाँ भक्तपुरको कुनै पनि क्षेत्रमा प्रभाव जमाएकोले भक्तपुर क्षेत्र नं २ कहिले नजित्ने स्थानमा प्रथम सांसद भएर देखाई दिनुभयो । उहाँको प्रभावबाट अर्को पटक पनि विजय प्राप्त गर्नुभयो । समाजको राम्रो व्यक्तित्व भएका कारणले गर्दा भगवान्ले पनि लामो समयसम्म हाम्रो सामु रहनु भएन । आशाकाजी सरले दिनुभएको योगदान सम्पूर्ण भक्तपुरवासीले बुझ्दछन्, हामीले पनि 'आ का' सरबाट धेरै सिक्यौं र २०५७ सालमा दशैंको कूछिभ्वयूका दिन बित्नुभयो र जिल्लावासीहरुमा शोकमा व्याप्त हुनपुग्यो । उहाँको निधनमा भावपूर्ण श्रद्धाञ्जली अर्पण गर्दै उहाँका गुणहरु हामी सदा सम्झिरहने छौं ।

# मेरा राजनैतिक गुरू आशाकाजी सर



**हरिराम सुवाल**
**(शिक्षक)**

आशाकाजी बासुकला मेरा बुबाको समकालीन साथी हुनुहुन्थ्यो । साथै आशाकाजी बासुकला मेरै टोलबासी हुनुहुन्थ्यो । त्यसैले म आशाकाजी बासुकलालाई सानैदेखि चिन्दछु । वहाँले मेरो जीवनमा एक राजनैतिक गुरूको भूमिका खेल्नु भएकाले वहाँलाई पहिले देखि नै आशाकाजी सर भनेर नै चिन्दछु । साथै आशाकाजी सरका सबै परिवारजनसँग मेरो राम्रै चिनजान छ ।

आशाकाजी सरको संस्मरण गर्दा मलाई पंचायतकालीन समयको याद आउँदछ । संभवतः २०४५ साल अगाडि हुनुपर्दछ । ह्योजु काण्ड भएको थिएन । घर नजिकै भएकाले बेलुका मेरो बुबासँग सरको भेट घर अगाडि नै हुन्थ्यो । त्यसबेला आशाकाजी सर घरमा खाना खाएर खेतको घरमा सुत्न जाने गर्नुहुन्थ्यो । हामी बेलुकाको खाना खाएर गर्मी भएकाले घर बाहिर आउँथ्यौं । आशाकाजी सर पनि खाना खाएर श्रीमती नकली भाउजुसँगै खेतको घरमा सुत्नु जानका लागि मेरो घर अगाडि भएर नै जानुहुन्थ्यो । त्यसैबेला प्रायः बुबा र आशाकाजी सरको भेट हुन्थ्यो । गर्मी महिनाभरी प्रायः यसरी बुबा र सरको भेट हुन्थ्यो । ती भेटहरूमा आशाकाजी सर प्रायः राजनैतिक कुराहरू र देशको समसामयिक राजनैतिक घटनाक्रमका सम्बन्धमा कुरा गर्नुहुन्थ्यो । तर म सानै भएकाले ती सबै कुराहरू बुझ्ने अवस्थामा थिइनँ । तापनि केही केही कुराहरू मेरो दिमागमा पक्कै गएको थियो । देशमा निरंकुश राजनैतिक पंचायती व्यवस्था चलिरहेको र जनताले देशमा परिवर्तन खोजेको कुराहरू वहाँ बताउनु हुन्थ्यो । व्यक्तिगत रूपमा सम्पत्तिमात्र कमाउने उद्देश्य जीवनको हुनु नहुने, देश र जनताका लागि पनि मानिसले आफ्नो जीवनमा सोच्नु पर्ने र काम गर्नुपर्ने विषयमा कुरा गरेको अहिलेसम्म पनि मलाई स्मरण ताजै छ । त्यतिवेला वहाँ साइकल चढेर जानु हुन्थ्यो । मेरो बुबाले वहाँलाई साइकल नचढिकन मोटरसाइकल चढ्नका लागि भन्नुहुन्थ्यो । तर वहाँले कहिले पनि मान्नु भएन । वहाँमा सादा जीवन उच्च विचार भएको महसुस गरेँ । आशाकाजी सर जानु भएपछि मेरा बुबाले मलाई आशाकाजी सरका बारेमा भनेका कुरा अझै ताजै छ । बुबाले आशाकाजी सरको सम्बन्धमा भन्नु भएको थियो- 'देश र जनताको सेवा गर्छु भनेर लागिरहेको मानिस भएकाले वहाँले मोटरसाइकल नचढिकन साइकल मात्र चढेको हो । वहाँले आफ्नो सिद्धान्त र नीति त्याग्ने हो भने मोटरसाइकल त के गाडी नै चढ्न सक्नुहुन्छ । तर सिद्धान्त र नीतिमा जीवन बिताउनेहरू सादा र सरल जीवन नै बिताउँछन् । नारायणमान दाईको विचारमा वहाँ हिँड्नु भएकाले यसरी सादा जीवन बिताउँदै हुनुहुन्छ । नारायणमान दाई पनि गरीब जनताहरूको पक्षमा लाग्नु भएको र वहाँसँगै आशाकाजी सर पनि हिड्नु हुन्छ ।' मेरो बालस्मृतिमा त्यतिबेला नै आशाकाजी सरले सिकाउनु भएको सादा जीवन उच्च विचारका कुराहरू संभवतः घुसेको जस्तो लाग्दछ । कतिपय वहाँका कुराहरू मेरो दिमागले बुझ्न सकेन होला । तर पनि मेरो स्मृतिमा कति कुराहरू ताजै छन् । त्यतिबेला सुत्ने बेला मेरो दिमागमा गाडी चढ्न सक्ने मानिसले किन साइकल चलाएर गएको होला भन्ने विचार आउँथ्यो । तर त्यसको जवाफ मसँग थिएन । किनकि त्यत्तिबेला म राजनैतिक कुरा बुझ्ने उमेरको भएको थिइनँ ।

मेरो बुबाको लुगा पसल थियो । म सानैदेखि बुबाको लुगा पसलमा लुगा सिउने काम गर्थें । बुबाको पसल घरमा नै थियो । त्यसैले आशाकाजी सर वहाँको फुर्सत हुँदा पसलमा आउनु हुन्थ्यो । म पसलमा लुगा सिउँदै हुन्थे । वहाँ आएपछि मेरो पढाईका बारेमा कुरा गर्नु हुन्थ्यो । त्यतिबेला म सानै भएकाले होला शायद मलाई पढ्नु पर्छ भन्ने हेक्का

थिएन। छोरालाई राम्ररी नपढाइन काममा लगाएकाले बुबालाई गाली गरेको अहिलेसम्म पनि मलाई ताजै स्मरण छ। पढ्नु पर्ने उमेरमा काममा लगाएकाले वहाँले बुबालाई धेरै पटक गाली गर्नु भएको थियो। भोलि गएर व्यापार नै गर्ने हो भने पनि पढाई आवश्यक छ। छोराहरूको पढ्ने उमरेमा काम गराएपछि भोलि कसरी छोराले कमाएर खुवाउँछ। त्यसैले अहिले छोराहरूलाई काम गराउने समय होइन्, पढाउने समय हो भनेर बुबालाई गाली गरेको अहिलेसम्म पनि याद छ। बुबाले पनि पछि मलाई पढ्नको लागि प्रेरणा र हौसला दिन थाल्नु भयो।

आशाकाजी सरकै स्मरण गर्दा मलाई वि.सं. २०५१/०५२ सालतिरको घटनाहरू पनि ताजै छ। आशाकाजी सरका जेठा छोरा राजकिरण बासुकला मेरा समकक्षी साथी हुन्। त्यतिबेला हामी खूब मिल्ने साथी थियौं। हामी त्यसबेला इन्टरमिडियट् पढ्दै थियौं। त्यसैले राजकिरण मरो घरमा र म उसको घरमा गइरहन्थ्यौं। उसको घरमा जाँदा दिउँसो प्रायः आशाकाजी सर भेट हुँदैनथ्यो। म कहिलेकाहीँ बेलुका पनि उसको घरमा जान्थें। घर सँगै भएकाले अलि रातिसम्म पनि राजकिरणसँग गफ गरेर बस्थैं। साथै बहिनी जेनी किरण र रोजा किरणसँग पनि गफ गरेर बस्थैं। यसरी अलिबेरसम्म गफ गरेर बस्ने बेलामा आशाकाजी सरसँगै घरमा भेट हुन्थ्यो। राजकिरण र बहिनीहरूसँग गफ गर्दा वहाँ केही भन्नु हुन्नथ्यो। तर जब गफ सकाएर अब घर फर्कन्छु भनेर म वहाँको घरबाट निस्कन तल आउँथें, तब वहाँले आफ्नो कोठामा बोलाउनु हुन्थ्यो। आफूभन्दा ठूलो मान्छेले बोलाएपछि कोठ भित्र नजाने त कुरै भएन। बिस्तारै अलि अप्ठ्यारो मानेर भित्र पस्थैं। भित्र गएपछि सोफामा बस्नलाई भन्नु हुन्थ्यो। त्यसपछि वहाँले विभिन्न राजनैतिक पुस्तकहरू अगाडि राख्नु हुन्थ्यो र मसँग ती पुस्तकहरू पढिसकेको या नसकेको सोध्नु हुन्थ्यो। म ती किताबहरू नपढेको जानकारी गराउँथे। त्यसपछि वहाँले मायाले गाली गर्नु हुन्थ्यो। ती किताबहरूका विषयमा जानकारी गराउनु हुन्थ्यो। क्याम्पसको कोर्सको किताबका अलावा ती राजनैतिक किताबहरू पढ्नलाई वहाँ प्रेरित गर्नु हुन्थ्यो। साना साना राजनैतिक किताबहरू पढ्नको लागि दिएर पठाएको अहिलेसम्म पनि ताजै स्मरण छ। अर्को पटकको भेटमा ती किताब पढेर बुझेको कुरा भन्नु पर्ने गृहकार्य पनि दिनु हुन्थ्यो। यसरी गृहकार्य दिने बानीले नै माओ, लेनिन, स्टालिन, चे ग्वे भाराको जीवनी थाहानै नपाईकन पढियो। राजनैतिक चेतना यसरी नै बिस्तारै बिकास भयो। यस्तो बानीले गर्दा बिस्तारै काठमाडौंको कलेजबाट फर्कने बेलामा साना साना र सस्ता राजनैतिक किताबहरू पढ्ने बानी बस्यो। अहिले पनि मेरो घरमा तात्कालिन समयमा किनेका राजनैतिक पुस्तकरू धेरै छन्। यसरी आशाकाजी सर मेरा लागि एक राजनैतिक गुरू हुनुहुन्थ्यो। जसले अन्जानमा नै एक राजनैतिक कार्यकर्ता भएर टोल, समाज र देशका लागि बाँच्नु पर्दछ भनेर सिकाउनु भयो। त्यसैले आशाकाजी बासुकला मेरा लागि आदर्श र राजनैतिक गुरू सँधै रहनु हुनेछ।

# मिलनसार र सहयोगी व्यक्तित्व आशाकाजी दाइ



**ओमप्रसाद नायजु**

आशाकाजी दाई, भक्तपुर नगरपालिकाका पूर्व प्रधानपञ्च एवम् प्रतिनिधिसभाका पूर्व सांसद हुनुहुन्थ्यो । राज्यको उच्च ओहदा सांसदसम्म पुग्नु भएका आशाकाजी दाई अहमतावादी भावना भने कहीँ कतै पनि देखिँदैन । बरु उहाँमा सहयोगी भावना भने प्रचूर मात्रामा पाइन्थ्यो । किनकि स-साना बालबालिका होस्, जेष्ठ नागरिकका रुपमा चिनिने बृद्धबृद्धा होस्, असहाय र दिनदुःखी होस्, ती सबैलाई रातदिन नभनी, हूरी बतास नभनी, वर्षा नभनी, जहिले पनि आवश्यक परेका बेला जहिले पनि सहयोगको हात बढाउन सधैँ तत्पर हुनुहुन्थ्यो । यो नै मानवतामा रहेको महत्वपूर्ण गुण हो । जुन गुण उहाँमा प्रचूर मात्रामा पाइएको थियो । साथै उहाँमा अर्को पनि मानवीय गुण भेटिन्छ । त्यो हो मिलनसारको भावना । किनभने उहाँको नजरमा स-साना बालबालिका भनेको ईश्वरको रुप ठानेर स-साना बालबालिकालाई कहिल्यै पनि घृणा र अपहेलना गर्नु हुन्नथ्यो । बरु माया, ममता र स्नेह दिएर नम्र बोली बोल्नु हुन्थ्यो । साथै बृद्धबृद्धा, असहाय, दिन दुःखीलाई समेत घृणा र अपहेलना नगरी माया, ममता र स्नेह गर्नु भई मिलनसार बनेर सबैलाई हरेक काममा सहयोगी बनेर सहयोगको हातलाई सधैं अगाडि बढाउनु हुन्थ्यो । यसैले होला, उहाँ समुदायको प्यारो बन्नु भएको ।

विशेष गरी उहाँ हाम्रो परिवारका लागि भगवान् नै साबित भएको थियो । किनभने उहाँले आफ्नो परिवारले भन्दा पनि बढी माया, ममता, स्नेह र सहयोग दिनुभएको थियो । हाम्रो सानो तथा ठूलो समस्यालाई सहज रुपले समाधान गर्नु हुन्थ्यो । यस्तै गरी उहाँ प्रधानपञ्च हुनुभएको बेला नगरपालिकामा हामीले कुनै पनि काम लिएर जाँदा उहाँ कहिल्यै दिक्क नमानीकन सहज तरिकाले चित्त बुझ्दो काम गरी दिनुहुन्थ्यो । यस्ता महान् गुणले भरिपूर्ण भएको व्यक्ति भगवान्को प्यारो बनेर स्वर्गलोकमा आनन्दसँग सुख सुविस्ताका साथ बस्नुभएको होला । यो नै असल मानिसको असल बास हो ।

# व्यवहारिक समाजसेवी आशाकाजी दाइ



**अशोक ह्यौमिखा**
छालिङ

घरको एक्लो छोरा भए पनि घर भन्दा बाहिर युवा अवस्थादेखि देश र जनताको सेवा भावमा लागेका थिए आशाकाजी दाइ। कतिपय राजनीतिज्ञहरु देश र जनताको सेवामा लाग्नुपर्छ भनेर मौखिक रुपमा भनेता पनि व्यवहारिक रुपमा समाजसेवा गरिरहेका हुँदैनन्। आशाकाजी दाइ पनि मौखिक रुपमा मात्र समाजसेवी हो कि भनेर परीक्षण गर्दा उहाँ व्यवहारिक रुपमा नै समाजसेवी रहेको पाएँ। उहाँले आर्थिक रुपले कमजोर भएका व्यक्तिहरुलाई प्रेरणा दिएर आर्थिक रुपमा सहयोग गर्नुहुन्थ्यो। उहाँ राजनैतिक व्यक्ति भएकाले धेरै गलत लाञ्छनाहरु लाग्ने र तुरुन्तै प्रचार हुने गर्दथ्यो। उहाँसँग नजिक रहेका व्यक्तिहरुले खुट्टा तान्ने गरेका थिए। उहाँ भ्रष्टाचारी हो भनेर धेरै पटक पत्रपत्रिकाहरुमा छापे। म उहाँ र उहाँको परिवारसँग धेरै नजिक भएकाले धेरै गलत प्रचार हुने मलाई थाहा थियो। तर यथार्थमा प्रचार भएको जस्तो थिएन। उहाँले आफ्नो छोरीलाई उत्तर कोरिया पठाउनु परेको बेला आर्थिक रुपले धेरै समस्या परेको थियो। उहाँले मलाई धेरै समस्या परेको सुनाउनु भयो। त्यतिबेला मैले नै उहाँलाई २०,०००।- (अक्षेरेपी बीस हजार) दिएर सहयोग गरेकोबाटै छोरीलाई कोरिया पठाउनु भएको थियो।

उहाँले मिबार्छेंको घर कसरी बनायो भन्ने यथार्थ विवरण मलाई थाहा छ। उहाँलाई मैले सोध्थेँ कि 'तपाई ऋण लिएर घर किन बनाउनु हुन्छ ?' त्यसको प्रत्युत्तरमा माथिको घर सानो छ, सांसद भएकोले मानिसहरु आइरहन्छ, ठाउँ पुग्दैन। मलाई थाहा भए अनुसार उहाँले ६ लाख ऋण लिएर घर बनाउनुभयो। नेपाल राष्ट्र बैंकबाट पैसा लियो भने कृषि विकास बैंकबाट ऋण लिएर तिर्ने, पुनः नेपाल बैंकबाट ऋण लिएर कृषि विकास बैंकमा ऋण तिर्ने गर्नुहुन्थ्यो। तर उहाँले भ्रष्टाचार गरेर घर बनायो भनी समाजले टिकाटिप्पणी गरेर आरोप लाग्नुका साथ साथै पत्रपत्रिकाहरुमा पनि छापियो। उहाँको निधन पछि त्यही ऋणले घर लिलाम हुने अवस्थासम्म पुग्यो। यदि उहाँले भ्रष्टाचार गरेको थियो भने उहाँको देहान्तपछि घर लिलाम हुने अवस्थासम्म कसरी पुग्यो ? घरमा भाउजुलाई घर लिलाम हुने अवस्था थियो भने अर्कोतिर छोराछोरी पढाउनको लागि समेत ठूलो समस्या परेको थियो। यसबारे मलाई पूरा थाहा पाएको भएर केही जमीन मैले लिएर आर्थिक सहायता गरेँ। उहाँको बुबाले घर नै लिलाम हुने अवस्था आएकोले एक रोपनीको १ लाख रुपैयाँमा जग्गा बेचेर ऋण तिर्नुभयो। साथसाथै नातिनातिनीलाई अध्ययनमा निरन्तरता पनि दिलाउनुभयो। उहाँको निधन भएको यत्तिका धेरै वर्ष भए पनि हालसम्म पनि उहाँ भएको बेला जस्तो पारिवारीक सम्बन्ध कायमै छ। उहाँको परिवारले मलाई अभिभावकको रुपमै लिइरहेको छ।

# विकास निर्माणका संवाहक स्व. बासुकला



**बद्री प्र. चौलागाईं**
दधिकोट, बिरुवा

म सानै छँदा करीब २०३५/३६ सालदेखि मैले भक्तपुरको चुनावको गतिविधि देख्दै आएको छु, सानो हुँदा चुनावमा हिड्ने घरदैलो कार्यक्रममा सहभागी बन्दै आमसभामा जाने गरेको अनुभव मसँग छ। निरंकुस पञ्चायती व्यवस्था भनेर पञ्चायतलाई गाली गरिन्थ्यो, पञ्चायत व्यवस्था खराब होइन त्यसका मान्छे खराब हुन् भनेर मलाई सानैदेखि लाग्थ्यो। जसरी अहिले लोकतन्त्र, गणतन्त्र भनेर जनतालाई मुर्ख बनाएको छ। भक्तपुरमा चुनाव जितेर रा.प.स. देखि बहुदलीय व्यवस्था र हाल सम्ममा मलाई विकास निर्माणमा को को सांसदहरु जनताका सुख दुःखमा साथ दिए ? विकास निर्माणमा को कति सहभागी भए भनेर मैले नियाल्ने काम पनि गरेको छु। आजसम्ममा मेरो विचारमा अन्य भन्दा ने.म.कि.पा.का निर्वाचित सांसद स्व.आशाकाजी बासुकलाको नाम लिन म चाहन्छु। वहाँ २०५१ सालमा क्षेत्र नं. २ बाट निर्वाचित भए पश्चात गाउँ-गाउँमा गएर के कति गर्न सकिन्छ भनी चिन्तन गरी स्कूल, बाटो, कूलो निर्माणमा सहभागी भएको मैले देखेको छु। सायद मसँग परिचित भएर पनि हो कि वहाँ सबै कुरा खुलेर गर्ने सकेको सहयोग गर्ने व्यक्ति को रुपमा मैले लिएको छु।

विरुवामा लुभु जाने बाटो स्व. बासुकलाकै पालामा सुरु भएको हो जुन बाटोबाट हाल मोटर सञ्चालन भएको छ। अन्य काम पनि स्व.बासुकलाले गर्नुभएको र गाउँ गाउँमा पार्टीको संगठन विस्तार समेत गरेको देखिन्छ। यसरी भक्तपुरमा स्व.बासुकलालाई विकासको संवाहकको रुपमा मैले लिएको छु। हाल आशाकाजी बासुकला स्मृति प्रतिष्ठान दर्ता हुने प्रक्रियामा रहेको भन्ने सुन्दा मलाइ खुशी लागेको छ। यस प्रतिष्ठानले स्व.बासुकलाले गर्न बाँकी रहेका सामाजिक काम सबै सपना वहाँको परिवार सबै मिलेर गरोस् भनी शुभकामना दिन चाहन्छु।

हवस् त धन्यवाद !

# 'आशाकाजी बा'को सम्झना......



**ओमिका नायजु**

"आशाकाजी बा" का बारेमा आफूलाई थाहा भएका केही कुराहरु लेख्दैछु । उहाँ बित्नुभएको बेलामा म सानै थिएँ । उहाँ हाम्रा लागि धेरै सहयोगी, गुणी र असल मानिस हुनुहुन्थ्यो । उहाँ हामीलाई कुनै पनि दुःख वा आपत् आइपर्दा सदा सहयोगका लागि तत्पर हुनुहुन्थ्यो । मेरो बाल्यावस्थामा हाम्रो घरमा टि.भी. थिएन । त्यही भएर हामी परिवार नै उहाँको घरमा टि.भी. हेर्न जान्थ्यौं । टि.भी. जति हेरे पनि उहाँ कहिल्यै दिक्क मान्नुहुन्नथ्यो । राम्रा राम्रा कार्यक्रम जस्तैः "महाभारत, रामायण, चन्द्रकान्ता" आदि टि.भी.मा प्रसारित हुँदा उहाँले नै स्वयम् हेर्न आउनु भनेर बोलाउनु हुन्थ्यो । उहाँ मात्र नभई उहाँका सम्पूर्ण जहान परिवार समेत सहयोगी हुनुहुन्थ्यो ।

भक्तपुर जिल्लाका पूर्व जनप्रतिनिधि प्रधानपञ्च साथै सांसद स्वर्गीय आशाकाजी बासुकलाको स्मृतिमा प्रकाशित यस स्मृति ग्रन्थले उहाँका योगदान र कृतिलाई सबैका स्मरण राख्न सफल होस् भनी हार्दिक शुभेच्छा प्रकट गर्दछौं ।

**आशाराम वैद्य**

**सल्लाघारी, भक्तपुर**

भक्तपुर जिल्लाका पूर्व जनप्रतिनिधि प्रधानपञ्च साथै सांसद स्वर्गीय आशाकाजी बासुकलाको स्मृतिमा प्रकाशित यस स्मृति ग्रन्थले उहाँका योगदान र कृतिलाई सबैका स्मरण राख्न सफल होस् भनी हार्दिक शुभेच्छा प्रकट गर्दछौं ।

**इन्जिनीयरीङ्ग प्लानिङ्ग एण्ड सोलुसन कन्सल्टेन्सी**

**कुपण्डोल-१०, ललितपुर**

भक्तपुर क्षेत्र नम्बर २ का जनताबाट निर्वाचित तत्कालीन प्रतिनिधिसभाका सदस्य तथा भक्तपुर नगरपालिकाका प्रधानपञ्च स्वर्गीय आशाकाजी बासुकलाको स्मृतिमा उहाँको परिवारजनबाट प्रकाशित स्मृति ग्रन्थ सबै पाठकका लागि उपयोगी र प्रेरणादायी बनोस् ।

**जय हनुमान नँखेल महादेव चिम्नी भट्टा**

**नँखेल, सूर्यविनायक नगरपालिका, भक्तपुर**

# आशाकाजी बा !



मनिका नायजु

मिति ठ्याक्कै याद छैन, किनभने म सानै थिएँ। दशैंको बेला थियो। चाडपर्वको उल्लासमय वातावरण अचानक कोलाहलमय बन्न पुग्यो। 'आस्काजी बा त बित्नुभयो रे !' भन्ने सुनेँ। त्यसको केही दिनपछि एकजना नौलो मान्छे दौरा सुरुवालमा सजिएर चिल्लो गाडी चढेर हाम्रो छिमेकमा आउनुभयो। अचम्म लाग्यो, मान्छे मरेको घरमा पनि भोजमा आएसरह ठाँटबाँटका साथ आउने त्यो मान्छे को होला अनि किन हाम्रो छिमेकमा आएको होला ? पछि थाहा पाएँ उहाँ त हाम्रो देशको सभामुख हुनुहुँदो रहेछ। आस्काजी बा सांसद हुनुभएकोले श्रद्धाञ्जली दिनका लागि आउनु भएको रे ! त्यो बेला मलाई सांसद र सभामुख जस्ता शब्दहरुको अर्थ थाहा थिएन। अरुबाट थाहा पाएँ सांसद र सभामुख भनेका त 'ठूला मान्छे' रहेछन्। त्यसोभए हाम्रा आस्काजी बा पनि ठूलै मान्छे पो हुनुहुँदो रहेछ।

'ठूला मान्छे' हो, शारीरिक बनोटको आधारमा वर्णन गर्नुपर्दा आस्काजी बा साँच्चै ठूलो हुनुहुन्थ्यो। हट्ठाकट्ठा ठूलो जिउ, ठूलो निधार अनि ठूलो स्वरमा कुरा गर्ने बानी, यी सबले गर्दा मलाई उहाँ देख्दा असाध्यै डर लाग्थ्यो। त्यसो त उहाँले मलाई कहिल्यै गाली गर्नु भएन तै पनि किन किन डर लाग्थ्यो। सायद उहाँको गम्भीर व्यक्तित्वको कारणले गर्दा होला।

हाम्रो घर नजिकै भएकोले म प्रायः उहाँको घरमा गइरहन्थेँ। एक हिसाबले भन्नुपर्दा मेरो बाल्यकालको अधिकांश समय त्यही घरमा बितेको थियो। रगतको नाता नभएतापनि अनि आर्थिक, सामाजिक तथा वर्गीय हिसाबले थुप्रै असमानता भएतापनि उहाँको परिवार र हाम्रो परिवारबीच अत्यन्तै आत्मीय सम्बन्ध थियो जुन अझै पनि छ। सो सम्बन्ध गाँसिनु र हालसम्म कायम रहनुमा उहाँको उदार र सहयोगी व्यवहारको ठूलो भूमिका रहेको छ।

त्यसो त मलाई उहाँको राजनीतिक जीवनको बारेमा खासै ज्ञान छैन। तै पनि उहाँको घरमा जाँदा भेटिने क्रान्तिकारी विचारधारका पुस्तकहरु अनि चर्चित राजनीतिक व्यक्तिहरुबाट प्रभावित भएर राखिएका उहाँका छोराछोरीहरुको नाम देख्दा उहाँ साँच्चै राजनीतिसँग एकदमै नजिक हुनुहुन्थ्यो भन्ने लाग्छ। व्यक्तिगत रुपमा भन्नुपर्दा उहाँ एकदमै सरल व्यक्ति हुनुहुन्थ्यो। सांसद जस्तो गरिमामय पदमा पुगेर पनि उहाँ सामान्य जीवन बिताउनु हुन्थ्यो। अरु साधारण कृषकहरु जस्तै रोपाइँका बेला खेतमा धान रोप्न जानुहुन्थ्यो, हामीले जस्तै दाल, भात, तरकारी खानुहुन्थ्यो अनि खानापछि परिवारका सदस्यहरुसँग टि.भी. हेर्दै रमाइलो पनि गर्नुहुन्थ्यो। मेरो नजरमा त उहाँ हामी आम मानिस जस्तै हुनुहुन्थ्यो। त्यसैले त त्यो दिन सबैको मुखबाट उहाँलाई 'ठूलो मान्छे'का रुपमा व्याख्या गरिँदा मेरो बालमस्तिष्क धर्मराएको थियो। न ठूलो, न सानो, उहाँ त हाम्रो लागि 'आस्काजी बा' मात्र हो भन्ने लाग्थ्यो। तर आज उहाँको राजनैतिक जीवन र उपलब्धीहरुका बारेमा थाहा पाइसकेपछि भने उहाँ जस्तो 'ठूलो मान्छे'को नजिकमा रहेर आफ्नो बाल्यकाल बिताउन पाएकोमा आफूलाई निकै भाग्यमानी ठान्छु।

पत्रकारको कलमबाट.....

# लोभ-लालचबाट मुक्त सांसद बासुकला सम्झिँदा



कुमार रञ्जित

२०५१ सालको कार्तिक २९ गतेका दिन भएको बहुदलीय प्रजातन्त्र पुनर्स्थापनापछिको दोस्रो आम निर्वाचनमा भक्तपुर क्षेत्र नम्बर २ बाट निर्वाचित भएर प्रतिनिधिसभामा जनप्रतिनिधि सांसदको भूमिका निर्वाह गर्नुभएका नेपाल मजदूर किसान पार्टीका आशाकाजी बासुकला अकस्मात् ०५७ महाअष्टमीका दिन ५१ वर्षको उमेरमा बित्नुभयो ।

नेपालको बहुदलीय प्रजातन्त्र सबैभन्दा बदनाम रहेको त्यस संसदीय अवधिमा एक इमान्दार र कर्तव्यनिष्ठ सांसदको भूमिकामा उहाँले आफ्नो प्रत्येक पाइलामा बदनामीको हिलो छिटाबाट बच्ने प्रयास गर्नुभयो, यो नै उहाँको सांसदका रुपमा ठूलो सफलता र स्मरण गर्न लायक कुरा हो भन्नु पर्दछ ।

पञ्चायती व्यवस्थाको अन्तिम समयमा विघटित भक्तपुर नगर पञ्चायतका प्रधानपञ्च र जन साहित्यकारका हैसियतबाट लोकले चिनिसकेका उहाँसित मेरो प्रत्यक्ष सम्बन्ध ०५१ सालमा प्रतिनिधिसभाको आठौं अधिवेशनका क्रममा संसदको क्यान्टिनमा चिया पिउँदै शुरु भएको हो । एउटै टेबुलमा चिया पिउँदै उहाँले मलाई पहिलो भेटमै भन्नुभएको थियो- म यो व्यवस्थाबाट केही लिउँला वा जनताले केही पाउला भनेर आएको होइन, त्यसमा मेरो विश्वास नै छैन ।

प्रतिनिधिसभा अन्तर्गत विकास समितिका प्रत्येक कृयाकलापमा संलग्न रहेर काम गर्ने क्रममा उहाँ संसद र सञ्चार जगत्को सम्बन्ध सुदृढ, समन्वित र सुमधूर तुल्याउनका लागि गठन गरिएको संयुक्त समितिमा रहेर पनि सक्रिय हुनुभयो । त्यस समितिमा उहाँका साथै प्रतिनिधिसभाका तर्फबाट कमलप्रसाद कोइराला, बलदेव प्रसाद मजगैया, मिर्जा दिलसाद वेग, रघुजी पन्त र शिवराज पन्तहरु पनि रहनुभएको थियो भने राष्ट्रियसभाबाट ओमकारप्रसाद श्रेष्ठ, सुवासचन्द्र नेम्वाङ र बाबुराम रानाहरु रहनुभएको थियो । उक्त समितिले नै संसदलाई आजको अवस्थासम्म पारदर्शी तुल्याउन ठूलो भूमिका खेलेको थियो ।

०५१ को चैत्र २५ गतेदेखि २९ गतेसम्म राष्ट्रियसभाका उपाध्यक्ष डी. के. शाहीको नेतृत्वमा गएको प्रतिनिधि मण्डलमा समावेश भएर उत्तर कोरियाको भ्रमण गर्नुभएको नै उहाँको एउटै मात्र संसदीय विदेश भ्रमण भयो ।

किसानका समस्यालाई प्रमुख प्राथमिकता दिएर संसदमा आवाज उठाउने क्रममा उहाँले ०५३ कार्तिक १३ गते धान बाली र तरकारी बालीमा किराले खाएर कृषि उत्पादनमा ऱ्हास आएर जनताको जीवनस्तर कष्टकर भयो भनी जरुरी सार्वजनिक महत्वको प्रस्ताव राख्नुभयो । यो पनि उहाँको एकमात्र संसदीय प्रस्ताव भयो ।

०५४ साल असोज २४ गते लोकेन्द्र बहादुर चन्दको नेतृत्वमा एमाले समेत सम्मिलित सरकारले संसदमा जबर्जस्ती ल्याएको भारतसित भएको विद्युत् व्यापार सन्धीलाई असफल तुल्याउनुमा उहाँले अविस्मरणीय भूमिका निभाउनु भयो । संसदका गतिविधिमा सांसद बासुकलाले खेल्नुभएको उक्त भूमिकालाई सबैभन्दा ऐतिहासिक मान्नुपर्ने हुन्छ । उक्त सन्धीलाई सरकारले संसदमा ल्याउने बित्तिकै त्यतिबेला संसदमा प्रमुख प्रतिपक्षी नेपाली कांग्रेसका सांसद मणि लामाले शुरु गर्नुभएको विरोधका आवाजलाई सत्तापक्षकै हिरण्यलाल श्रेष्ठ, भीम बहादुर रावल, हिमाञ्चल भट्टराई, शंकर पोखरेल र हेमराज राईहरुले साथ दिनुभयो भने नेपाली कांग्रेसका अमर राज कैनी, रमेश रिजाल र डा. रामशरण महतहरुले एउटै स्वरमा कडा प्रतिवाद गर्नुभयो । सरकार धर्मसंकटमा परेर आफैले ल्याएको प्रस्ताव फिर्ता लानुपरेको त्यतिबेला सांसद बासुकलाले संसदमा गणपूरक संख्या नपुगेको कुरामा ध्यानाकर्षण गरेपछि सभामुख रामचन्द्र पौडेलले प्रस्तावलाई

निर्णयार्थ प्रस्तुत गर्न मिलेन भन्दै फिर्ता पठाईदिनुभएको थियो। त्यसअघि सांसद बासुकलाले यस पंक्तिकारसित सल्लाह गर्नु हुँदा महाकाली सन्धीमा विरोधमा मत दिनुभएको तपाईले विद्युत व्यापार सन्धीमा चूप लागेर बस्नु हुन्न भनेर सल्लाह दिएको थिएँ । उहाँलाई यही कुरामा तात्कालिन सत्तापक्षका सांसद हिरण्यलाल श्रेष्ठले पनि जोड दिएर सन्धी असफल गराउने कार्यमा नेतृत्व गर्नुभयो ।



लोभ-लालचं मुक्तम्ह सांसद वासुकला लुमंकेबलय्

उहाँले सांसदको कार्यकालमा पनि सरकारकातर्फबाट ठूलो दमन र यातना भोग्नुपऱ्यो । चन्द सरकारकै पालामा उहाँलाई सिंहदरवार अगाडि धर्ना दिने क्रममा प्रहरीले घाइते हुने गरी लाठीले प्रहार गऱ्यो । त्यसले गर्दा उहाँको पेटमा नराम्रो चोट लाग्न पुग्यो । त्यस घाउलाई उहाँले संसदमा सभामुखका अगाडि प्रदर्शन गर्नुभयो, जुन त्यतिबेला चर्चित हुन पुग्यो । त्यसताका उप-प्रधानमन्त्री तथा गृहमन्त्री बामदेव गौतमले त्यस्तो व्यवहार भएकोमा क्षमा माग्नु भयो। त्यतिबेला क्षतिपूर्ति विधेयक आइसकेको हुनाले यस पंक्तिकारले सुझाव दिएको थिएँ- तपाईले कानून बमोजिम क्षतिपूर्ति माग्नुपर्दछ। यसमा उहाँले भन्नुभयो- क्षतिपूर्ति मागेर के हुन्छ, पैसा अलि दिने त होला नि। म पैसाका लागि राजनीतिमा आएकै होइन। यस्तोमा म नाजवाफ भएँ।

उहाँको निधनपछि सबैभन्दा पहिले तत्कालिन नेकपा (माले) का महासचिव बामदेव गौतमले नै सबैभन्दा पहिले श्रद्धाञ्जली वक्तव्य गर्नुभएको यहाँ सम्झन लायक छ।

बामदेव गौतमसित उहाँको मित्रता पछि झन् प्रगाढ भएको देखिन्छ। काभ्रेको भकुण्डेवेशी गाविसमा भएको नौ बाम पार्टीको सभामा प्रहरीले हस्तक्षेप गरेर गौतमलाई मार्ने षड्यन्त्र हुँदा प्रहरीसित भिडेर चोट पाएकाहरु मध्ये उहाँ पनि एक हुनुहुन्थ्यो।

नेपाली कांग्रेसका खुम बहादुर खड्का समूहले समय-समयमा सत्ता समिकरणका लागि फकाउने कोशिस गर्दा उहाँले सधैं भन्ने गर्नुहुन्थ्यो- म पार्टीको निर्णय बिना केही गर्ने होइन। म विनोद शाह र भक्त बहादुर रोकाय जस्तो होइन। यसै क्रममा शाह र रोकायहरुसित उहाँले पछि जम्काभेट हुँदा पनि बोल्न छाड्नु भयो। प्रजातन्त्रमा पनि यस्तो हुन्छ र ? भनेर सोध्दा उहाँले भन्ने गर्नुहुन्थ्यो- किन बोल्नु, राजनीति पैसामा बेच्नेहरुसित ?

साँच्चै सांसद बासुकलां पैसाको लोभ कहिल्यै पर्नुभएन। त्यसपछि उहाँ निर्वाचनमा उम्मेदवार पनि बन्नुभएन। सांसदबाट विदा भैसकेपछि एकपटक पेन्सनको कुरा हुँदा उहाँले भन्नुभयो- त्यस्तो लोभमा म अल्झिन्न।

यसरी लोभ लालचबाट मुक्त सांसद बासुकलाले पजेरो र प्राडोको लहर आउँदा पनि सधैं काठमाडौंदेखि भक्तपुरसम्म चल्ने एक्सप्रेस सार्वजनिक मिनी बसमा डण्डी समाएर यात्रा गर्नुभयो। उहाँबाट भक्तपुरले मात्रै होइन प्रत्येक राजनीतिक प्राणीहरुले सिक्नु पर्दछ।

(लेखक संसदीय अनुसन्धान तथा सूचना केन्द्रका साथमा कार्यरत् हुनुहुन्थ्यो)

१४ कौलाथ्व ११२० (२०५७ आश्विन २६ बिहीबार)

सन्ध्या टाइम्स दैनिकमा प्रकाशित र हालै अनुदित

# मेरो हेराइमा आशाकाजी बासुकला



**कृष्ण प्रसाद वैद्य**

आशाकाजी बासुकलाको जन्म वि.सं. २००६ सालमा भक्तपुर नगरपालिका वडा नं ९ को मध्यम वर्गीय किसान परिवारमा भएको थियो । उहाँले सानो उमेरदेखि नै अध्ययनमा मेहनत गर्दै बि.ए. सम्म शिक्षा हासिल गर्नुभएको थियो । उहाँ टोल छिमेक, साथीभाईलाई मीठो बोली वचन, नरम, राम्रो व्यवहार गर्ने बानी भएकोले ०४४ सालमा अत्यधिक मतबाट भक्तपुर नगरपालिकाको प्रधानपञ्चमा विजयी हुनुभएको थियो । त्यस्तै ०५१ सालको प्रतिनिधिसभाको मध्यावधि निर्वाचनमा भक्तपुर क्षेत्र नं २ बाट सांसद पदका लागि उम्मेदवारी दिई अत्यधिक मतले विजयी भएको थियो । प्रधानपञ्च र सांसद पदमा रहँदा उहाँले कुनै किसिमको लोभ लालच नगरी निरन्तर समाजसेवामा लागिरहनुभयो । त्यसरी नै पदमा रहेको समयमा र नरहेको अवस्थामा पनि उहाँले घरछिमेक साथीभाईका लागि आफूले सकेको सहयोग निरन्तर गरिरहनुभएको भक्तपुरका जनताले उचित मूल्याकंन गरिरहेको छ नै । त्यसरी नै भक्तपुर नगरपालिका वडा नं १५ स्थित मिबाछेँ टोलमा पनि उहाँको सल्लाह, सुझाव र सहयोगले ढल, खानेपानी, विद्युत, ईटा छपाईको काम समेत भएको थियो । टोलवासीलाई समाजका लागि सहयोग गर्नुपर्छ भन्ने भावना जगाउन उहाँले सल्लाह सुझाव र प्रेरणाले मेरो स्वर्गीय पिताको सम्झनामा मन्दिर बनाउन जग्गा मिबाछेँ टोल सुधार समितिलाई हस्तान्तरण गरिदिएको छु र मन्दिर बनाउन मेरो परिवार, टोलवासी र उहाँको सहयोगमा गणेश मन्दिर समेत बनेको छ । यसरी उहाँको निधनपछि मिबाछेँ टोलवासीले कर्तव्य निष्ठावान् व्यक्ति गुमिएको महसूस गरिरहेका छौं ।

# थिमिदेखि बलम्बुसम्म आशाकाजी दाइ



**लक्ष्मीनारायण राजलवट**
(पूर्व वडाध्यक्ष)

आशाकाजी दाई २०४४ सालको स्थानीय चुनावमा पार्टीकातर्फबाट प्रधानपञ्चको उम्मेदवार भएर अत्यधिक मतले जित्नुभयो। १७ वडाका वडाध्यक्षमा ज्ञान बहादुर दाई जित्नुभयो भने नगर सभासद्मा साथीहरुसँगै म पनि आशाकाजी दाइसँग नजिकबाट काम गर्न पाएँ। आशाकाजी दाइ हँसिलो हुनुहुन्थ्यो। गाईचा म्ये लेख्न सिपालु प्रधानपञ्च भएर पनि सर्वसाधारण जनतासँग घुलमिल भएर काम गर्न सक्ने आशाकाजी दाइ ०४५ सालमा भक्तपुर नगर पंचायतको नगर सभा गर्न तयारी भैसकेको अवस्थामा ०४५ भाद्र ५ गते बिहान ५ बजे महाभूकम्प आएकाले धनजन धेरै क्षति भएको हुँदा तत्काल नगर पंचायत वोर्ड बैठकमा बसेर राहत वितरण गरियो। राज्यस्तरबाट षडयन्त्र गरेर रचिएको ०४५ सालको भक्तपुर काण्डको कारण २० महिना जेलमा बसेर ०४७ सालमा जेलबाट छुटेपछि नेपाल मजदूर किसान पार्टी तात्कालीन (नेपाल मजदुर किसान संगठन) नगर समितिमा उहाँकै संयोजकत्वमा सँगै काम गर्दा आशाकाजी दाइ क्रियाशील भएर उत्साहका साथ पार्टी संगठनको काममा लाग्नु हुन्थ्यो। मलाई पनि सिकाउनु हुन्थ्यो। नगरको पश्चिमतिर स्कूलहरुको कमी भएको हुँदा हिमालयन ग्लोरी इङ्गलिश स्कूल १७ वडा भार्वाचोमा सार्नुभयो र त्यसका लागि निकै मेहनत गर्नुभएको थियो। त्यस्तै जनताका छोराछोरीलाई शिक्षा दिनुपर्छ भनी पांगा, बलम्बुसम्म गएर साथीहरुलाई स्कूल खोल्न लगाउनु भयो। सांसद हुँदा पनि पार्टीको काममा खटिरहने र जनताका घरदैलोमा गएर समस्याहरु बुझेर काम गर्ने उहाँको राम्रो सद्भाव छ। उदाहरणका लागि उहाँ फूर्सद भयो कि मध्यपुर थिमि गएर त्यहाँका जनताहरुसँग पौवा, पाटी, पेटीमा बसेर संगठनको र त्यहाँको विकास निर्माण कार्य सम्बन्धी छलफल गर्नुहुन्थ्यो। थिमिका धेरैजसो किसान दाजुभाइहरु उहाँको कुरा सुनिरहनु हुन्थ्यो र मख्ख पर्नु हुन्थ्यो।

नेपालभाषा साहित्य तःमुँज्या स्थापनाकालदेखि २० औं वर्षसम्म निरन्तर (०४५ सालको भक्तपुर काण्डबाट २० महिना कारागार थुनामा बसेको बाहेक) अटूट रुपमा २० औं (उहाँको निधनको दुइ दिनपछि) भक्तपुर १७ तेखापुखुसम्म लाग्नु भएको र निर्देशन दिनु भएर आफैं खटिनु भएको थियो।

# आयौं तिम्रा सन्तान हामी !



विद्यालयदेखि संसदसम्म राजनीति गर्दा
झ्यालखानामा थुनिनु पर्दा
समाजका लागि समय दिनु पर्दा
कयौं पीडा सह्यौ बुबा !

सन्तानलाई समाजमा चिन्हाउन
पढाएर, लेखाएर ज्ञानी बनाउन
आफ्नो खुट्टामा आफैं उभ्याउन
कयौं कोशिस गर्‍यौ बुबा !

स्वदेशको माटो चिनाउन
स्वाभिमानी र आदर्शवादी बनाउन
परिश्रमी र सत्यवादी बनाउन
कयौं आदर्श सिकायौ बुबा !

नियतिले टाढा भए पनि
मन र मस्तिष्क भरी सम्झना बोकेर
आफ्नो बाटो खोज्दै गर्दा पनि
कयौं स्मरणमा रोयौं बुबा !

तिमीलाई तिर्नुपर्ने ऋण तिर्न
तिमीले दिएको लक्ष्य पूरा गर्न
तिमीले छाडेका जिम्मेवारी बहन गर्न
कयौं परीक्षा दिन सिक्यौं बुबा !

अन्ततः पुग्यौं तिम्रा सन्तान हामी
आफ्नै खुट्टामा आफैं उभियौं
सक्षम भयौं, समाजमा हिंड्यौं
तैपनि, कयौं तिम्रो आकांक्षा पूरा गर्न बाँकी छ बुबा !

**छोरी जुनु मैयाँ**
२०७३ मंसीर २ गते, समय : दिउँसो २:३०

# बुबाको सम्झनामा



**ज्योती किरण बासुकला शिल्पकार**
(जेठी सुपुत्री)

म सानी छँदा मेरो बुबा तात्कालिन बासु नि.मा.वि. (हाल बासु उच्च मा.वि) मा शिक्षक हुनु भएकाले मेरो पहिलो सिकाई घरबाटै शुरु भएको थियो। बुबाले घरमा नै मलाई अक्षर चिनाई दिनु भएको हुँदा अभिभावकका साथै उहाँ नै मेरो शिक्षा दीक्षाको पहिलो शिक्षक हुनुहुन्थ्यो। त्यसबेला अक्षर चिनाउने र विद्यालय जाने बानी पार्न आधा कक्षामा भर्ना गरी शिक्षा शुरु गरी एकवर्षको पढाइपछि मात्र कक्षा १ मा स्तरोन्नति गरिन्थ्यो। त्यसैले आधारभूत सिकाई भइसकेपछि मलाई आधा कक्षामा बासु नि.मा.वि. मा भर्ना गरिदिनुभयो।

"अर्काको घरमा जाने छोरी मान्छेलाई विद्यालयमा पठाउन/पढाउन आवश्यक छैन" भन्ने तात्कालिन अवस्थामा शिक्षक हुनुभएको नाताले बुबाले मलाई पढाउनु भएको थियो। "बासु नि.मा.वि." मा नै मलाई किन पढाउनु भएको भन्ने मेरो प्रश्न/जिज्ञाशा सुनी बुबाले त्यसबेलाको बासु नि.मा.वि. को स्थापनाको वृत्तान्त सुनाउनुभयो। उहाँका अनुसार हाम्रो जन्मथलोमा प्रायः सबै किसान मात्र हुँदा शिक्षा दीक्षा नभई निरक्षर भएको र दैनिक कामकाज (बालीको भर्पाइ, कार्यालय, अड्डा अदालतमा लेखापढी गर्ने कार्य आदि) मा समस्या भइरहने भएकाले टोलका सबै शिक्षित/शिक्षकहरु र शिक्षाप्रेमीहरु मिलेर सोही विद्यालयको स्थापना गरेर हाम्रो जन्मथलोमा शिक्षाको ज्योति छर्नुभएको थियो। विद्यालय स्थापनामा विशेष गरी बासुकलाहरु अग्रसर भएको र उनीहरुको बढी मिहिनेत/योगदान भएको तथा बासुकलाहरुको बाहुल्य भएको टोल भएको हुँदा सो विद्यालयको नाम "बासु निम्न माध्यमिक विद्यालय" राखेर सानो ब्यासीमा भएको पाटीबाट सञ्चालनमा ल्याइएको थियो। अग्रजहरुको यस्तो अतुलनीय योगदानबाट स्थापना भई संचालनमा आएर स्थानीयलाई शिक्षित गराइरहेको विद्यालयको नाम "बासु... " ले सधैँ मेरा अग्रजहरुको सम्झना भएको देख्दा उहाँहरुको दूरदर्शिताप्रति नमन सहित कृतज्ञता सदा जागृत हुने गर्दछ।

निरन्तर रुपमा एक कक्षा हुँदै सात कक्षासम्म म बासु नि.मा.वि.मा पढिरहेकी थिएँ। उक्त बासु नि.मा.वि.मा सात कक्षासम्म मात्र पढाई हुने हुँदा त्यसपछि आठ कक्षामा कता पढ्ने द्विविधा एकातिर थियो भने अर्कोतिर "विवाह गराई अर्काको घरमा पठाउने छोरी" लाई अब फेरि पढाउनु पर्दैन भन्ने सामाजिक तानाबानाको तनाव थियो। बुबा लगायत अन्य शिक्षित तथा शिक्षाप्रेमी अग्रजहरुको अग्रसरताबाट ठूलो ब्यासीमा स्थापित अर्को संस्थागत बिहानी "प्रभात माध्यमिक विद्यालय" सञ्चालनमा आइसकेतापनि दिउँसो पढ्ने तथा नाम चलेको र नजिकको सरकारी विद्यालयमा पढ्ने मेरो इच्छा मध्यनजर गरी मलाई शारदा माध्यमिक विद्यालयमा पढाउनु भएको थियो। सोही विद्यालयबाट ०४२ सालमा मैले प्रथम श्रेणीमा प्रवेशिका एस.एल.सी. परीक्षामा पास गरेकी थिएँ (सो बेला सो विद्यालयबाट प्रथम श्रेणीमा पास गरेका जम्मा ८ जना केटा र ४ जना केटी थिए।) त्यस बेला प्रथम श्रेणीमा उत्तीर्ण हुनु, अझ केटीहरुका लागि विशेष गर्वको विषय थियो। म प्रवेशिका परीक्षामा प्रथम श्रेणीमा पास हुँदा मेरो बुवा त खुशीले गद्गद् त हुनुभएको त थियो नै, अझ खुशी त मेरी आमा र बज्यै हुनुभएको थियो। सायद "अर्काको घरमा जाने छोरी मान्छेलाई विद्यालयमा पठाई पढाउनु आवश्यक छैन" भन्नेहरुलाई उहाँहरुको मीठो जवाफ थियो, त्यो खुशी। यसले मलाई गौरन्वानित गर्नुका साथै अझ अगाडि उच्च शिक्षा पढ्ने हौसला र प्रेरणा दिएको थियो।

०४३ सालमा मेरी बज्यै (रत्नदेवी बासुकला) लाई दीर्घ रोग "दम" ले निकै च्याप्न थालेको थियो। उहाँको

रेखदेख र घरमा गरिने औषधि उपचार, म जेठी सन्तान भएकाले, मेरो जिम्मामा थियो । उहाँका उपचारको सिलसिलामा अस्पताल लाने, डाक्टरलाई भेटेर औषधिमुलोको ज्ञान लिएर उपचार कार्यमा संलग्न भइरहँदा ममा नर्सिङ पढेर दिनदुःखीको सेवा गर्ने इच्छा जागृत भइरहेको थियो । सोही कुरा सुनाएर मलाई नर्सिङ पढाई दिनु हुन बुवालाई अनुरोध गरेकी थिएँ । बज्यैलाई मैले गरेको सेवा सुश्रुषाबाट प्रभावित भएर मेरो आत्मविश्वासमा जनताको सेवा गर्छे भन्ने अभिलाषा सहित "छोरी बिग्री नर्स पढेर, छोरा बिग्रियो कमर्श पढेर" भन्ने तात्कालिन समाजमा बुबाले अर्को एक चुनौती लिई मलाई नर्सिङ पढ्न स्वीकृति दिनुभएको थियो ।

विधिको विधान, म नर्सिङ पढ्न त्रि.वि., नर्सिङ क्याम्पस महाराजगञ्जमा पढाई शुरु नगर्दै "तिमी काठमाडौं गएर पढ्न गएपछि मेरो हेरचाह कसले गर्ला" भनी रुने मेरी बज्यै २०४३ कार्तिक २७ गते दशैंपछिको द्वादशीमा स्वर्गवास हुनुभयो । नर्स भएर उहाँको सेवा सुश्रुषा र हेरचाह गर्ने मेरो अभिलाषा सधैं अधूरो रहेकाले त्यतिबेला म निकै द्ःखित र बिचलित बनेकी थिएँ । तथापि बज्येकै इच्छा, बुबाको विश्वास, अभिलाषा र आमाको प्रेरणाबाट विभिन्न आरोह अवरोह तथा बिघ्न बाधा बाबजुद ०४६ सालमा मैले नर्सिङ क्याम्पस महाराजगञ्जबाट प्रथम श्रेणीमा नर्सिङ उत्तीर्ण गरेकी थिएँ । त्यसैबेला मेरा भाइ बहिनीहरु लगायत मेरी आमा, बाजे अनि बुबा अत्यन्त खुशी हुनुभएको थियो । तर दुर्भाग्य, त्यसबेला भक्तपुरमा तात्कालिन राज्यद्वारा घटाइएको ह्योजू काण्डको जाली मुद्दामा बुबा सेन्ट्रल जेलमा थुनामा रहेकाले मैलै प्रथम श्रेणीमा नसिङ उत्तीर्ण गरेको खुशी बुबाले परिवारजनसँग सँगै खुशी मनाउन पाउनु भएन । तथापि हाल त्रि.वि., शिक्षण अस्पतालमा नर्सिङ अधिकृतको रुपमा नर्सिङ पेशामा सेवा गर्दै समाजसेवा गरिरहेको र परिवारजन सहित नातागोतालाई पनि सेवा गर्न पाई यो गौरन्वान्वित हुने सौभाग्य मेरो बुवाकै प्रेरणा, विश्वास र देनले गर्दा सम्भव भएको थियो र छ ।

बुबाबाटै माया स्नेह पाएर मैले नर्सिङ पेशा सफलतापूर्वक अंगाल्न सकिरहेकी छु । हाल नर्स र नर्सिङ पेशाको महत्व बुझेर हरेक घरमा नर्स छोरी वा नर्स बुहारीको आवश्यकता/महत्व भएको तथा सामाजिक परिवर्तन भएको समाजमा आफू पनि एक नर्स भई गौरव गर्न पाएको अनुभूति हुँदा सदा सर्वदा मेरो बुवाप्रति नमन सहितको कृतज्ञता सहित नतमस्तक हुन्छु । अझ उहाँकै कठिन परिश्रम, संघर्ष र प्रेरणाले हामी सबै सन्तान, विशेष गरी हामी पाँच छोरीहरुले असल शिक्षा दीक्षा पाई समाजमा आफ्नो पहिचान सहित जीवनयापन गर्न सफल भइरहेका छौं । सोबाट उत्प्रेरित भई जन्मथलोका प्रायः सबै छोरीहरुले पढ्न पाएको देख्दा शिक्षाप्रेमी र परिवर्तनका संवाहक मेरो बुवा "आशाकाजी बासुकला" की जेठी छोरीको रुपमा जन्म पाएकोमा आफूलाई निकै भाग्यमानी ठानेकी छु ।

मलाई स्मरण भएसम्म मेरो बुवा जीवनभर राजनीतिमा सक्रिय हुनुभएको थियो र प्रायः जेलमा परिरहनु हुन्थ्यो । (हाम्रो बाल्यकाल प्रायः बुबाको अभावमा बितेको थियो र मेरा बाजेले नै बुबाको संरक्षकत्व प्रदान गर्नुहुन्थ्यो । ०३७ सालको जनमत संग्रह होस वा ०४२ सालको सत्याग्रह उहाँ तात्कालिन नेपाल क्रान्तिकारी शिक्षक संगठनको सक्रिय सदस्य भएकाले जेलनेलमा परिरहुन्थ्यो ।

०४३ सालमा भएको स्थानीय चुनावमा स्थायी शिक्षक पदबाट राजिनामा दिई नेपाल मजदुर किसान संगठनको उम्मेदवारका रुपमा तात्कालिन भक्तपुर नगर पंचायतको प्रधानपंच पदमा जनताको मतबाट निर्वाचित हुनुभएको थियो । सोही पदमा कार्यरत रहँदा ०४५ सालको भूकम्पबाट प्रभावित जनतालाई राहत वितरण गर्ने बहानामा तात्कालिन पंचायत व्यवस्थाबाट ०४५ भाद्र ९ गते अति चर्चित ह्योजु काण्ड घटाइएको थियो । भक्तपुरमा सो घटना हुँदा सोही दिन एमनेष्टी इन्टरनेशनलको काठमाडौंमा भइरहको भूकम्प सम्बन्धी तात्कालिन प्रधानपंचहरुको बैठकमा बहालवाला प्रधानपंचको रुपमा मेरो बुवा सहभागी भइरहनु भएको थियो । सोही राती राज्यपक्षबाट आपतकालिन बैठक छ भनेर भक्तपुर प्रहरी कार्यालयमा लगिएको थियो । तर त्यसपछि बुबालाई कता लगियो, कता राखिएको थियो, केही पत्तो थिएन । घरमा बाजे, आमा अनि सबै साना भाइबहिनीहरुको डर र त्रासमा रुवावासी थियो । म जेठो सन्तान भएकीले, के गरौं कता जाऔं, कसलाई गुहारौं केही अत्तोपत्तो थिएन र जता हेरेपनि अन्योल र अँध्यारो कुहिरो मात्र देखिन्थ्यो । बल्ल २ दिनपछि हनुमानढोकामा बुवालाई भेट्न पाएँ र म लगायत हामी परिवारजनमा सास आएको थियो । त्यसपछि सेन्ट्रल जेलमा चलान

गरिएको खबर पार्यौं । त्यहाँ बुबालाई प्रायः कपडा, खाना, मट्टितेल जस्ता दैनिक आवश्यकताका सरसामान लिएर भेट्न जान्थैं । एकातिर परिवारमा संरक्षकत्वको निर्वाह र बुबाको रिहाइको प्रयासको लागि हितैषी र सहयोगी साथी संगीहरुको साथ लिई अड्डा अदालत धाइरहनु पर्दा सामाजिक लाञ्छना सुनिरहनु पर्ने थियो भने अर्कोतिर परिवारजनलाई सहयोग गर्नुको साटो नचाहिने वाहियात मानसिक/सामाजिक तनाव दिइरहेको त्यो बेला निकै उद्वेलित र विचलित भएका थियौं हामी परिवारजन सबै । यसरी नै दुःखमा २० महिना बितेको थियो । सो अवधिमा बाजेले बारम्बार 'मलाई कसले दागबत्ती दिन्छ' भनी दुःख र चिन्ता व्यक्त गर्दा हामी नाति नातिनाहरुले दिउँला भनी सान्त्वना दिंदा मनमा भक्कानो उठ्थ्यो । जनताको अपार समर्थन र अन्य शुभेच्छुकहरु तथा सहयोगी वकिलहरुको अथाह परिश्रमबाट तात्कालिन राज्यले थोपरेको झुठा मुद्दा फिर्ता लिई रिहा गर्न बाध्य भए र ०४७ बैशाख ५ गते ने.म.कि.स.का अन्य कार्यकर्ता सहित मेरो बुबा पनि रिहा हुनु भएको थियो । सो दिन हामी परिवारजन अत्यन्त खुशी भएका थियौं ।

तत्पश्चात् ०५१ सालमा भएको तात्कालिन प्रतिनिधिसभाको मध्यावधि चुनावमा हाम्रा बुबा भक्तपुरको निर्वाचन क्षेत्र नं. २ बाट संसदमा जनताको मतबाट निर्वाचित हुनुभएको थियो । संसदको कार्य अवधिमा बुबाले गर्नुभएको विभिन्न उदाहरणीय कार्यहरु मध्ये नेमकिपाको कार्य क्षेत्र र प्रभाव विभिन्न जिल्लाहरुमा विस्तारित गर्नुभएको थियो । साथै समाजमा पनि अग्रगामी परिवर्तन गर्नुभएकोले समाजमा परिवर्तनका संवाहकको रुपमा समाजले सदा स्मरण गर्दै आईरहेका थिए र छन् । विद्यमान समाजको तानाबाना बावजूद बहालवाला संसद सदस्य रहेकै अवस्थामा ०५३ साल माघमा आमा बुबाले मेरो नेवार समाजभित्रकै अन्तरजातिय विवाह गरी दिनुभएको थियो । सो अवस्थामा अति नजिकको नातेदारबाट तत्काल नाता तोडिएता पनि आफ्नो निर्णयमा अडिग रही सामाजिक परिवर्तनको एकजना अग्रणी हुनुभएको थियो । यसको परिणाम स्वरुप बुवा र आमाको उदाहरण दिई मेरो जन्मथलोमा हाल आमाबुवाको स्वीकृतीमा सहज रुपमा अन्तरजातीय विवाह पनि हुन थालेको छ । बुबाका यी स्मरणीय कार्यहरुले गर्दा आजसम्म पनि मेरो माइती थर बासुकला भनेपछि "तिमी आशाकाजी बासुकलाको छोरी हो" भनेर सोध्छन् जो कसैले । यसैमा म उहाँको छोरी हुन पाएछु भनेर दंग र प्रफुल्ल हुन्छु । यसैले गर्दा उहाँले हामीलाई बाल्यकालमा सम्पति हैन इज्जत कमाउनु पर्छ भनेको कुरा आजै भने जस्तो आभास् हुन्छ र उहाँको उद्देश्य सफल भएको पाउँछु ।

०५७ सालको भाद्रतिर बुबाले निकै आन्तरिक कुराहरु आमाको अगाडि मलाई र मेरो श्रीमान्‌लाई बरोबर व्यक्त गर्न थाल्नुभएको थियो । हामी असमञ्जस्यतामा पर्थ्यौं र के भएको भनी विचार विमर्श गरी सान्त्वना दिन्थ्यौं । सोही सालको दशैं अगाडि बुबालाई सामान्य लाग्ने रुघाखोकीले च्याप्दै लगेको थियो र सोको परवाह नगरी रातबिरात पार्टीको कार्यमा लागेकोमा आमाको दुखेसो बढ्दै गएको थियो । अलि बढी नै भएपछि ०५७ कै आश्विन १८ गते फूलपातिका दिन स्थानीय डाक्टरलाई माइतीघरमा नै लगेर बुबाको स्वास्थ्य जाँच (मेडिकल चेकअप) गराएकी थिएँ र भोलिपल्ट एक्सरे लिने गरी औषधिमुलो गरिएको थियो । तर छाती दुख्यो भनी बुबाले त्यतिबेलासम्म पनि केही संकेत दिने वा भन्नुभएको थिएन । ०५७ आश्विन १९ गते बिहान ९ बजे छोरा अजरले बाजेलाई भेट्ने भनी साह्रै दुःख दिएकाले छोरा अजरसँगै बुबाको छातीको एक्स रे लिन लाउन गएका श्रीमान्‌ले बुवा सिकिस्त भयो भनी एक्कासी १० बजे आत्तिएर फोन गरी त्रिपुरासुन्दरी स्थानमा रहेको मोडेल क्लिनिकमा तुरुन्त आउन वोलाउँदा मेरो हंसले ठाउँ छोडेको थियो । एकपल पनि एकजुग लागि रहेको व्याकुल मनलाई सम्हालेर तुरुन्त सो क्लिनिकमा गएँ र बुबाको गम्भीर अवस्था देखेर के भयो भनी मन एकदमै रोएको थियो । श्रीमानले एम्बुलेसको व्यवस्था गरिसकेकोले आमा, भाइ राजकिरण र मैले बुबालाई एम्वुलेन्समा राखर म कार्यरत रहेको त्रि.वि. शिक्षण अस्पतालमा लग्यौं । चाबहिलमा पुगेपछि "ज्योति, मेरो छाती फेरि दुख्यो, अस्पताल अझै पुगेन" भनी सोध्नुभयो (यही बाक्य उहाँको अन्तिम बोली हुन गयो । सकेको उपचार र ढाडस दिंदै शिक्षण अस्पतालको इमर्जेन्सी वार्डको बेडमा राख्दा राख्दै बुबाको टाउको यसो ढल्केको मात्र थियो, आया पनि भन्न नपाई बुवाले यो सांसरिक मायाजालको संसार छोडेर जानुभयो । हामी सबै टुहुरा भयौं र चारैतिर अँध्यारो छाउन थाल्यो । त्यसपछि ८६ वर्षका बुढो बाजेलाई कसले भन्ने पिर, आमालाई सम्हाल्ने चिन्ता, भाइबहिनीहरुको लालन पालन र मार्ग निर्देशनको अभिभारा सबै

एकैचोटी बज्रपात भयो मै माथि । आफ्नो पीडा त कता हो कता रुनसम्म पाइन्न । महाष्टमीका दिन नेवारहरुको कूछि भ्वय्, यता बुबाको अन्येष्टीको मलामी, कस्तो दिन दशा र अभागी दिन अहिले पनि सधैं यो दिन हाम्रो लागि विरक्त दिन सम्भेर बुवाको स्मृतिमा हामी सबै सन्तानहरु रुन्छौं । अभ "मेरो श्राद्ध गर्नु पर्दैन" भन्ने बुबाले चाहे जस्तै गरी उहाँको कहिल्यै श्राद्धसम्म गर्न पाउँदैनौं । मात्र जलदान मात्र गरी उहाँलाई हामीले सधैं सम्भन्छौं । सो दिन भक्तपुरको दूधपाटीबाट हनुमानघाटसम्म करीव तीन चार घण्टाको अविछिन्न शवयात्रामा जनता जनार्दनको धैर्य, समवेदना, सान्त्वना सहितको व्यापक/असंख्य मलामी पाउनु भएको थियो, मेरो आदरणीय बुबाले । "आफ्नो कर्मले धन हैन जन कमाउनु पर्छ" बुबाले भने जस्तै बुबाले साँच्चै यतिका "जन" जनता जनार्दनको व्यापक मलामी कमाउनु भएको रहेछ । "मर्नु त आशाकाजी जस्तै व्यापक जनताको मलामी सहित मर्नु पर्छ" भन्ने जन उक्ति त्यसवेला देखि जनजिव्रोमा बसेको थियो । तर अर्कोतिर बुबाको यसरी अपर्भत् अल्पआयुमै स्वर्गवास भएकाले ०४५ सालको चर्चित ह्योजु काण्डको बेला बुबा जेल पर्दा बाजेले चिन्ता व्यक्त गर्ने बेला मैले सान्त्वना दिएँ जस्तै २०६९ चैत्र २९ गते बाजेको स्वर्गारोहण हुँदा बाजेलाई नातिले नै दागबत्ती दिनुपर्ने भएको थियो । विधिको विधान विचित्रको छः एकातिर बुबाले आफूले चाहे जस्तै पाउनु भयो भने अर्कोतिर बाजेले चिन्ता व्यक्त गरे जस्तै भयो । "दैवको लिला अपरम्पार" भने जस्तै हामी सन्तानहरुले दैवको यी लीलाहरु निरीह भएर भोग्नु परेको थियो र परिरहेको छ ।

# बुबाको डर र हाम्रो घर



**जुनेली किरण बासुकला मगजु**
**(माइली सुपुत्री)**

हामी धेरै सन्तान भएकाले उहाँलाई लुगा किनी दिन पनि धौ धौ पर्दथ्यो । उहाँ राजनीतिज्ञ र समाजसेवी भएकाले घरको भन्दा बढी समय बाहिर खर्चिनु हुन्थ्यो । जाडो महिनामा बुबासँग मोजा किनी दिनुस् भन्दा बिर्सेर हो या पैसा नभएर हो, मोजा किन्न गएको त हाँडी पसलमा परेछ । हाँडी पसलमा त मोजा नै छैन भन्नुहुन्थ्यो । म सानो बेला बुबाले भनेको कुरा पत्याउँथे । मैले भाइबहिनीको हेरचाह गर्नुपर्ने भएकाले म आमासँग खेत जान्थे । आमाबाट भाइबहिनी हेरेको बापत १,२ सुक्का पनि पाउँथें । त्यति पैसा पाउने भएर म दंग परेर खेतमा जान्थें । त्यही भएर मलाई ८ वर्ष पुगेपछि मात्र आफ्नै टोलको बालबोध शान्ति स्कूलमा कक्षा १ मा मलाई भर्ना गराइयो । म लगायत मेरा साथीहरु सबै उमेर बढी भएका कारण १ कक्षाबाट ३ कक्षामा चढें । स्कूलमा होमवर्क गरेन भने शिक्षकहरुले गाली गर्नुहुन्थ्यो । मेरो बज्यैले मेरै घरको छिमेकी शिव सरलाई तरकारी दिएर मेरी नातिनीलाई पास गरिदिनु भन्नुहुन्थ्यो । आमाले खेतमा भाइबहिनी हेरेमा पैसा दिन्छु भन्ने अर्कोतिर स्कूलमा गाली गरेकाले स्कूल जानु भन्दा त खेत गयो भने पैसा भए पनि पाउँथें भनेर खेत जान्थें । छालिङमा भएको घरमा कुखुरा पालन व्यवसाय गरेको हुनाले दाना खुवाउने काम पनि गर्थें । म स्कूल नगई खेत गएकीले बुबाले मलाई गाली गर्नुहुन्थ्यो । तर आमाको कुरा सुनेपछि बुबाले केही भन्नु हुन्नथ्यो । मैले बालबोध शान्तिमा कक्षा ५ सम्म अध्ययन गरें ।

कक्षा ६ देखि शारदा मा.वि.मा अध्ययन गरें । किशोरावस्थामा होली खेल्ने रहर थियो । तर बुबाले होली खेल्छन् भनेर हामी सबै सन्तानलाई बिहान उठ्ने बितिकै छालिङको घरमा लानुहुन्थ्यो । त्यस दिन खेतमै खाना खुवाउनुहुन्थ्यो र अँध्यारो भएपछि मात्र घर जाउँ भन्नुहुन्थ्यो । ०४५ सालमा बुबा जेल परेपछि चिउरा कुटेर र रक्सी पारेर घर खर्च जुटाउन आमालाई सहयोग पनि गर्थें । घरमा मेरो नाम लिएर धेरै ब्लफ कल आउने भएर अरु भाइ बहिनीलाई भन्दा मलाई बढी निगरानीमा राख्नुहुन्थ्यो । भाइबहिनीहरुले भन्दा मैले बढी गाली खानुपर्थ्यो । एकदिन बाहिर के कुरा सुन्नु भएछ, मलाई लुगै फाँट्ने गरी पिट्नुभएको सम्झना छ । एकपटक मैले छिमेकी साथीको दाइको बिहेमा साथीहरुसँग जन्ती जाने रहर गरें । जन्ती जानका लागि साथीहरुसँगै मैले लुगाहरुको जोरजाम गरें । तर बुबा म जन्ती जान्छ भनेर घर बाहिर ढुकेरै बस्नुभयो । साथीहरु जन्ती गएको बार्दलीबाट बाहिर हेरेर आँखाबाट आँशु झार्दै हेरिरहेको थिएँ । घर अगाडिको छिमेकीको फलकमा बसिरहनु भएका बुबाले इशारामा हात, खुट्टा उचाल्दै भित्र जाउ भन्नुभयो । म डराएर भित्र पसें । हामी बुबासँग असाध्यै डराउँथ्यौं । हामी दिदी बहिनी झगडा गरिरहेका हुन्थ्यौं । बाहिरबाटै बुबाले थाहा पाएको हुन्थ्यो । तर बुबा आएको थाहा पाएपछि सबै डराएर चूप बस्थ्यौं । मैले अरु भाइबहिनीले भन्दा बढी गाली खान्थें ।

मैले १९ वर्षको उमेरमा एस.एल.सी. पास गरें । एस.एल.सी पास गरेपछि बहिनी जुनुलाई काठमाडौंमा पढाइयो, म पनि काठमाडौंस्थित पद्मकन्या क्याम्पसमा पढ्छु भन्दा तिमीले काठमाडौंमा पढ्यौ भने बिग्रिन्छे भनेर भक्तपुर क्याम्पसमा भर्ना गरिदिनु भयो । त्यसैबेला मलाई बिहेका लागि माग्न पनि आए । मलाई काठमाडौंमा पढ्न नदिएकाले क्याम्पस जान मन लागेको पनि थिएन र बिहे गर्न राजी भएँ । बिहे गर्नका लागि मेकअपका सामान किन्नका लागि पैसा मागें, तर मलाई बुबाले दुइ सय रुपैयाँ दिनुभयो । दुइसय रुपैयाँले के पुग्थ्यो, तर पनि बुबाको अगाडि बोल्ने आँट थिएन । बिहेमा जन्ती लगेको दिन इनाचो टोलमा पुगेपछि अब त मलाई बुबाले गाली गर्नु हुन्न होला भनेर मनमनै सोचेको अहिलेसम्म पनि सम्झना छ । बिहेपछि माइती आउँदा बुबाले मेरी माइली छोरी आइन् भनेर एकदमै खुशी भएर मासु किनेर खुवाउनु हुन्थ्यो । बिहे गरेको दुइ वर्षपछि छोरो भएपछि मेरो माइली छोरीको घर बस्यो भनेर खुबै खुशी हुनुभएको थियो ।

# विद्यार्थी छोरीको स्मरणमा राजनीति गर्ने बुबा



**डा. जुनु मैया बासुकला रञ्जितकार**
(साहिंली सुपुत्री)

म दश वर्षसम्म बज्यैसँग हुर्किएकी भएर उहाँको माया ममता हालसम्म सम्झना भैरहन्छ। दश वर्षकी हुँदा बज्यैको दुःखद् निधन भयो। त्यतिबेलासम्म बुबा शिक्षक हुनुहुन्थ्यो। बज्यैले दिउँसो घरमा कोही नहुने भएकाले हामी छोराछोरीका लागि खाजाको व्यवस्था गर्नुहुन्थ्यो। बज्यै बितेको ६ महीना नपुग्दै बुबा भक्तपुर नगर पञ्चायतको प्रधानपञ्च निर्वाचित हुनुभयो। त्यसबेलादेखि बुबाले हाम्रो निम्ति शिक्षक हुँदा जस्तो समय दिन सक्नु भएन। यता बुबा प्रधानपञ्च भएकाले भक्तपुर नगरका जनताको सेवामा व्यस्त, उता बाजे र आमा हामीलाई पालनपोषण गर्न खेती कार्यमा व्यस्त हुने भएकाले हामी छोराछोरी अभिभावकबाट प्राप्त हुने व्यावहारिक शिक्षाबाट टाढा थियौँ। स्कूल जाने र घरको दैनिकी कार्य हामी छोराछोरीकै जिम्मामा थियो। ठूली दिदी नर्सिङ अध्ययन गरिरहेकीले होस्टेलमै बस्ने। माइली दिदी बहिनीहरु स्याहार्नुपर्ने भएपछि पढाइमा त्यति ध्यान दिन नसक्ने हुनुभयो। यस्तोमा घरमा भात पकाउने र सरसफाइ गर्ने काम मेरो जिम्मामा थियो। भाइ बहिनीसँग स्कूल सँगै जाने र आउने भएकाले दिउँसो हामी बच्चाहरु खानेकुरा एउटै थालमा राखेर ठूलो भाई र बहिनीहरु पालैपालो मुख आँ गरेर खाने मलाई, अहिलेसम्म सम्झना छ।

२०४५ साल भदौ ५ गते ५ बज्न ५ मिनेट बाँकी रहँदा गएको भूकम्पले अन्य स्थानमा भन्दा भक्तपुरमा बढी क्षति भएको थियो। ९ गतेको दिन कर्णप्रसाद ह्योजुलाई कुटेको कुरा हल्ला सुनियो। किन कुट्यो र कसले कुट्यो भन्ने मलाई केही थाहा थिएन। त्यसदिन बुबा काठमाडौँबाट साँझ अँध्यारो भएपछि घर फर्कनुभयो। दिउँसोको घटनाबारे घरमा कुराकानी त गर्नुभएको थियो, तर त्यसबेला मैले केही बुझ्न सकेको थिइनँ। त्यसै राती १ बजे माइली दिदीलाई पनि नउठाइकन आमाले मलाई उठाउनु भयो। बुबालाई पुलिसहरुले समाएर लग्यो, ३० जनाजति सिपाहीँहरु छन् भनेर सुनाउनु भयो। राती आमा छट्पटाएर गोविन्द दुवाललाई फोन गर्न भन्नुभयो। तर मैले पनि आत्तिएर गोविन्द दुवालज्यूको घरको नम्बर भन्ठानी ६१०९३७ मा फोन गरेँ। रातको समयमा फोन आएको भएर त्यस नम्बरको व्यक्तिले मसँग सम्पूर्ण कुरा सोधिसकेपछि यो नम्बर गोविन्द दुवालको घर होइन भनेर फोन राखिदियो। त्यसपछि आमा र म छट्पटिएर बसिरहेका थियौँ। ३ बजेतिर ज्ञान बहादुर न्याइँच्याइँका छोरा र भतिजा हाम्रो घर आइपुग्नुभयो। उहाँहरुले फलानो फलानो सबैलाई पुलिसले सोधपुछका लागि लगेको छ, पीर लिनु पर्दैन भन्नुभयो। उहाँहरु आउनुभएको केही समयपछि २ जना पुलिस घरको झ्याल मुनि फलकमा बसेर 'माथि को हुनुहुन्छ' भनेर मधूर स्वरबाट बोलायो। उहाँहरुले 'हामी हौं' भनेपछि 'तल आउनुस्' भनेर उहाँहरु दुबैलाई समाएर लानुभयो। उहाँहरु घरबाट केही पर मात्र पुगेपछि छिमेकीको पसलको कोकको गाडी पछाडिबाट ३० जना जति प्रहरीहरु ती दाइहरुको पछाडि लाग्यो। उहाँहरुलाई पुऱ्याएर ती प्रहरीहरु पुनः हाम्रै घरमुनि आए।

त्यसदिनदेखि हामीलाई धेरै असहज भयो। कतै गयो भने हामीलाई 'ज्यानमाराका सन्तान' भनिन्थ्यो, अर्कोतिर पढाइको लागि आर्थिक अवस्थाले थिचिएको अवस्था थियो। खानका लागि बाजे र आमाले खेती कार्यले गर्दा सामान्य खाना खान समस्या थिएन, तर लुगाफाटा र पढाईका लागि पैसाको अभाव थियो। त्यस्तो समयमा लुगाफाटा नहुँदा हामी कहीँ कतै भोज भतेर जान नसक्दा आफन्तले त्यस्तो पीडामा कुरा काटेर व्यंग्य गरेको स्मरण अहिलेसम्म ताजै छ। ठूली दिदी नर्सिङ होस्टेलमा भएकीले पैसाको जोहो कसरी गरिन् थाहा भएन। तर घरमा हामीलाई लुगाफाटा भन्दा पढाईको पीरले गर्दा पैसाको आवश्यक भएकाले आमाले माइली दिदीलाई चिउरा कुट्न लगाउनु हुन्थ्यो। दिदी अलि ठूली भएकीले

रक्सी बेच्न जान्न भनेकीले मलाई रक्सी पारेर बेच्न पठाउनु हुन्थ्यो । रक्सी बेच्न त मलाई पनि लाज लाग्थ्यो, तर विवशताले त्यो लाज पनि पचाएर भट्टी पसलमा रक्सी बेच्न गएको अहिलेसम्म सम्झना छ । साथै धागो काटेर र कागजको थैली बनाएर पनि केही रकमको जोहो गरेको स्मरण ताजै छ ।

२० महीना जेल बसेर मुक्त हुनुभएपछि बुबाले छालिङस्थित घरमा कुखुरापालन गर्नुभयो । बुबा दिनभरी राजनैतिक कार्यमा व्यस्त हुने, राती साढे नौ बजे घरमा खाना खाएर खेतमा साइकल चढेर सुत्न जानु हुन्थ्यो । आमा कुखुरा हेरचाह र खेती कार्य गर्न खेतमै सुत्नु हुन्थ्यो । घरमा बाजे मात्र आउनुहुन्थ्यो । हामी नातिनातिनाहरु मात्र हुने भएकाले बाजेले यो घर त मचार्छैं (बच्चाहरुको घर) भन्नुहुथ्यो । रातको समयमा बाजे नै हाम्रो संरक्षक हुनुहुन्थ्यो । आमा बुबा दुबैजना व्यस्त हुने भएकाले हाम्रो चाहना के हो उहाँहरु दुबैलाई थाहा थिएन र त्यसबेला हामीले पाउनुपर्ने व्यवहारिक शिक्षा उहाँहरुले दिने समय नै थिएन । मलाई आजसम्म स्मरण छ कि साथीहरुले जस्तै स्कूलको युनिफर्ममा रातो पेटी, सेतो मोजा र कालो जुता लाउने रहर त्यो विद्यार्थी जीवनमा कहिल्यै पूरा हुन पाएन । स्कूल युनिफर्ममा आइरन नलगाएको लाउनु पर्दा साथीहरु बीच विभेद थियो । स्कूलमा महिनावारी शुल्क तिर्न बुबासँग लिनुपर्ने भएकाले जहिले पनि जाँचको पहिलो दिनमा १० बजे बुबा घर आउनु भएपछि ३ महिनाको पैसा लिएर फी तिरेर ११ बजेको परीक्षामा पुग्थें । जाँचको पहिलो दिनमा बुबा १० बजे आउने हो कि होइन भनेर मानसिक पीडाले मेरो परीक्षालाई तयारी भन्दा पनि त्यस कुराले पिरोलिने भएकाले र घरका भाइबहिनीलाई हेरचाह गर्नुपर्ने भएकाले पनि मेरो पढाई सानैदेखि कमजोर हुँदै गएको थियो । बुबासँग स्कूलमा छात्रवृत्तिको व्यवस्था छ, निवेदन दिउँ भनेर सोध्दा बुबाले तिमीहरुले निवेदन दिनु पर्दैन भन्ने जवाफ दिनुहुन्थ्यो ।

बाजेले खेती कार्यको जिम्मा लिइरहनु भएको र आफू छोरा भएर पनि बुबालाई साथ दिन नसक्दा बुबालाई बाजे खुशी पार्नुपर्ने बाध्यता थियो । बाजे हिउँद महीनामा खेती कार्यबाट केही समय फूर्सद पाउने भएकाले त्यस समयमा बाजे घरको भऱ्याङ कहिले यता कहिले उता राख्ने वा आफ्ना नातिहरुका लागि भनेर घर बनाउन धान र पराल बेचेको पैसा प्रयोग गर्नुहुन्थ्यो । बुबाले बाजेलाई पनि खुशी पार्नु पर्ने भएकाले साथ दिनुहुन्थ्यो । हामीले पैसा माग्दा छैन भन्ने, घर बनाउन पैसा छ त, भन्दा बुबाले भनुहुन्थ्यो- मैले घर बनाएको हो र बैंकले घर बनाएको हो, यो सधैं सुन्ने गरिएको जवाफ हो । बुबालाई त भन्ने आँट थिएन, तर आमालाई कहिलेकाहीँ घुर्क्याएर भन्थें किन धेरै छोराछोरी जन्माउनु भएको ? एकातिर बुबाले राम्रो अंक ल्याउनु भन्नु हुन्थ्यो भने अर्कोतिर आमालाई म पास भए भनेर खुशी प्रकट गर्दा आमा भन्नुहुन्थ्यो, त्यो पढाइ के काम, मलाई खेतमा सघाउन आउने होइन, अब पैसा माग्ने होला, पढाइ सकेपछि आम्दानी जति लोग्नेको घरमा दिने भनेर रुँदै सुनाउनुहुन्थ्यो । हामी छोराछोरी पास भएको बेला आमाको सधैं खुशीको सट्टा घुर्की सुन्नुपर्थ्यो । आमालाई आफन्तले हामीले पढेर खेतमा काममा सहयोग नदिएको सुनाउँदा आमाको मनमा झन् वेदनाले भरिन्थ्यो ।

०५१ सालमा बुबा सांसद भएपछि अरुको नजरमा हामीले आनन्दपूर्वक पढेको जस्तो लाग्न थालेछ । हामीलाई भने अरुबेला भन्दा बुबा सांसद हुँदा झन् आर्थिक दुरावस्थाले थिचेको थियो । हाम्रा ठूला भाईले आई. एस्सी सिद्धार्थ वनस्थलीमा पढेका थिए । भक्तपुरबाट वनस्थलीसम्म पुग्न गाह्रो भएकाले भाईको लागि भनेर काठमाडौंको ज्याठामा कोठा लिइएको थियो । नाम मात्र भाईको लागि थियो, त्यो कोठा त पार्टीको मिटिङको लागि प्रयोग भयो । भाइ र मेरो काम त पार्टीको मिटिङ हुँदा चिया पकाएर खुवाउने मात्रै भयो । बुबाले राम्रोसँग आई. एस्सी पढेको भाइलाई समय दिन नसकेको, बुबाको सामु भाइले प्रकट गर्न नसक्दा प्रवेशिका परिक्षामा भक्तपुर जिल्ला प्रथम भएको भाइलाई मानसिक पीडा हुँदा केही वर्ष उसले पढाइलाई नै त्याग्न पुगे । ६ महीना कोठामा बसेको भाडा त बुबाले तिर्नुभयो, तर बत्तीको पैसा तिर्न नसकेर अरु नै कसैले तिरेको थियो र कोठा बाध्य भएर छोड्नुपऱ्यो । सांसद हुँदा पार्टीलाई लेबी बुझाएर बुबाको हातमा रू.४ हजार मात्र आउँथ्यो । त्यो पनि प्रत्येक महिना नपाइने, पार्टीको नियमानुसार रकम लिनुपर्ने । कहिलेकाहीँ त ३ महीनामा मात्र पाउने । बुबालाई एकातिर घर बनाउँदाको ऋण तिर्नुपर्ने र घरमा छोराछोरीलाई पढाउन धौधौ परेको अवस्था थियो । मलाई सम्झना छ, पैसाको अभाव भएर ज्यामीलाई पैसा दिन समस्या भएर बुबा आफू सांसद भएर पनि समय मिलाएर १२ दिनसम्म ढलेको धान बाली उठाउन आउनु भएको थियो । स्नातक अध्ययनमा हुँदा बुबाले मलाई भन्नुभयो- तिमीलाई

खर्च आफैं व्यवस्था गर । मलाई फसाद पऱ्यो । श्रमिक स्कूलमा पढाएको ५२० रुपैयाँ र थिमि स्कूलमा एकदिन पढाएको २०० रुपैयाँले बस भाडा पुऱ्याउँथैं । मेरो क्लास साढे १० बजे शुरु भएर ५ बजेर १० मिनेटमा समाप्त हुन्थ्यो । दिउँसो १ बजे १ गिलास चिया खाएर खाजा पनि नखाई स्नातक अध्ययन पूरा गरैं ।

स्नातक तह अध्ययन गर्दा क्याम्पसमा हल्ला चल्यो, जुनु त कोरिया जाने भइछे । म छक्क परैं, किन मलाई सबैले यसो भने ? साथीहरुले मलाई भन्थे, हावा नचली पात चल्छ ? स्नातक अध्ययन गर्दा बुबा सांसद भएकाले क्याम्पस प्रमुखले कोरियामा आफ्ना छोरा मेरै सहपाठीलाई छात्रवृत्तिमा पठाउन मलाई पनि छात्रवृत्ति दिलाएर पठाउन बुबालाई भेट्न घरसम्म आउनुभयो । तर बुबाले भन्नुहुन्थ्यो, तिमीले ८० प्रतिशत अंक ल्याउनु, अहिले नै म साइन गरिदिन्छु । क्याम्पस प्रमुखले धेरै दौडधूप गर्दा पनि केही सीप नलागेपछि क्याम्पस प्रमुखले मलाई भन्नुभयो, तिमी अभागी छ्यौं । एकदिन बुबा मिवाछैंको घरबाट संसद भवन जान र म चोछैंको घरबाट क्याम्पस जान लाग्दा एक्सप्रेस गाडीमा भेट भयो । संयोगले त्यो गाडीमा बुबा र छोरी भन्ने चिन्ने मान्छे कोही थिएन । बुबाले गाडीमै सोध्नुभयो, तिमी कुन लेभलमा पढिरहेछौ ? तिम्रो पढाइ कति बाँकी छ ? यस कुराले मलाई मनमा साह्रै छोएर क्लासमा पुगेपछि मेरा सहमित्रहरुलाई सुनाएँ, हाम्रो त बुबा र छोरीको सम्बन्ध यस्तो थियो ।

स्नातकको पढाइ सकिएपछि बुबाको विषयमा हुँदै नभएका कुराहरु बढी सुन्नुपरेकाले एकदिन बुबालाई आँट गरेर भनैं, बुबा हामी कतै जानुपर्दैन र ? नभएका कुराहरु सुन्नुपर्ने ? तपाईं राजनीति छोड्नुस् । यसको प्रत्युत्तरमा बुबाले भन्नुभयो, नभएका कुराहरु हल्ला गर्छन् म के गरुँ, तिमीहरु जन्मनु भन्दा पहिलेदेखि नै म राजनीतिमा लागेको हुँ, म छोड्न सक्दिनँ, यो मेरो नशा हो । त्यहीबेला बुबाले भन्नु भयो, तिम्रो बाटो तिमी आफैं पहिल्याउ, मेरो नाम लिएर कतै नजानु । यही प्रेरणालाई अनुशरण गर्दै म विश्वविद्यालयमा प्राध्यापन र अनुसन्धान कार्यसम्म आइपुगैं ।

बुबाको देहान्त हुनु भन्दा केही महीना अगाडि पार्टीले उहाँलाई निलम्बनमा पाऱ्यो भन्ने सुनियो, के कारणले हो हामी घर परिवारलाई थाहा थिएन । त्यसबेला बुबाले खाना खान आउनुभएको बेला किन हामीलाई सुनाउनु भयो, त्यो पनि थाहा छैन । 'आफन्त, दाजुभाई र साथीहरुले जे भने पनि मलाई केही छैन तर दाइ (रोहित) ले मलाई केही कुरा भन्नु भएन, किन होला ?' यसो भन्नु हुँदा मलाई सम्झना छ, बुबा पार्टीको केन्द्रीय कोषाध्यक्ष पदमा भएकै अवस्थामा हृदयघात भयो । घाटमा पाइला पनि राख्ने ठाउँ नभएकाले मेरो भतिजो पर्ने पुण्यरामले भने, मर्नेबेला यसरी हजारौं मानिसको उपस्थितिमा आफू पनि मर्न पाए पो । यस अभिव्यक्तिले बुबाको शुभचिन्तकहरु कति थिए, हामी घर परिवारलाई थाहै थिएन । १३ दिनसम्म नातागोता, साथीभाइ, पार्टीका सदस्य, अन्य पार्टीका नेता कार्यकर्ताहरु घरमा समवेदना दिनेको ओइरो लाग्यो । त्यसपछि काका अशोक ह्यौमिखा र दाजु असल बहादुर गोसाईं बाहेक बुबाका आफन्त, आमाका आफन्त, साथीभाइ, पार्टीका सदस्यहरु कसैले पनि हाम्रो दिन कसरी बितिरहेछ हालचाल बुझ्न आएनन् । केही व्यक्तिले दुखेको घाउमा खुसार्नी छर्ने काम समेत गर्न आए । मलाई सम्झना छ, मेरा कलाकर्मी साथी रमेशले भने, जिन्दगी भर राजनीतिमा लागेका नेताका छोराछोरी आज सडकमा छन् । त्यसबेला मभन्दा ठूला दुई दिदीको बिहे भैसकेको र हामी पाँचजना अध्ययनको बीच बाटोमै थियौं । म एकजनाले मात्र स्नातक पूरा गरेको थिएँ ।

मैले बुझे अनुसार बुबाको मनमा धेरै पीडा भए पनि बाहिर उहाँले कहिल्यै व्यक्त गर्नु भएन । आफ्नो पीडालाई लुकाएर अरुको सामु हाँसोमा कुरा गर्नुहुन्थ्यो । जसले गर्दा अरुको नजरमा बुबा आनन्दपूर्वक राजनीतिमा लागेको जस्तो देखिनु हुन्थ्यो । तर वास्तविकता हामीलाई मात्रै थाहा थियो ।

# बुबा मेरो प्रेरणाको स्रोत



**ई. राजकिरण बासुकला**
(ज्येष्ठ सुपुत्र)

म सानो छँदा बुबा हाम्रो घर नजिककै बासु स्कूलमा शिक्षक हुनुहुन्थ्यो । बुबालाई सबैले 'आशाकाजी सर' भनेर घरमा भेट्न आउँथे । म बुबासँग बासु स्कूलमा पटक पटक गएको र यालाछेँको चियापसलमा सबै शिक्षकहरु जमघट हुने सम्झना सधैँ आइरहन्छ । बुबा आफैँ शिक्षक भएकाले घरमा हामी सबै दिदीहरु, बहिनीहरु र भाइलाई अध्ययन गर्न निकै प्रोत्साहन दिनुहुन्थ्यो । हामीलाई अध्ययनका निमित्त वातावरण मिलाइ दिनुहुन्थ्यो । उहाँ सधैँ भन्ने गर्नुहुन्थ्यो, हामीले कम्तीमा पनि स्नातकसम्म र सके त्यो भन्दा माथिसम्म अध्ययन गर्नुपर्छ । बुबाले हामीलाई सधैँ भन्नुहुन्थ्यो कि तिमीहरु नबिराउनु, नडराउनु र कसैसँग नझुक्नु । उहाँले राजनैतिक गतिविधि र घरायसी कामले गर्दा आफूले स्नातकसम्म पनि धेरै वर्ष लगाएर उत्तीर्ण गर्नुभएकोले हामीलाई कुनै घरायसी बाधा अड्चन नपरोस् भनेर हामी सबैलाई अध्ययनमा निरन्तरता दिनुपर्नेमा जोड दिइरहनुहुन्थ्यो ।

घरमा बुबाले जतिसुकै दुःख भोग्नु परे पनि मलाई त्यस्तै कुनै दुःखको आभाष नै दिनु भएन । बुबा जेल पर्नु हुँदा पनि आमा र बाजेले कुनै पनि दुःखको आभाष दिनु भएन । मेरा निम्ति तीनैजना अभिभावकहरु मेरो भविष्यबारे चिन्तित हुनुहुन्थ्यो । म तीनै जनाको सपना पूरा गर्नका लागि निरन्तर लागिरहेको छु । म जहाँ पुगेको छु, उहाँहरु तीनैजनाको समर्थनले पुगेको हुँ ।

बुबा राजनीतिमा सक्रिय हुनुभएकाले समाजमै बढी समय दिनुपर्ने हुँदा परिवारमा कमै मात्र समय दिनुहुन्थ्यो । उहाँ घरमा रहनु हुँदा पनि विभिन्न राजनैतिक व्यक्ति लगायत सर्वसाधारणलाई उत्तिकै महत्व दिएर समय दिनुहुन्थ्यो । विभिन्न समस्या लिएर आउने आमजनमानसका समस्या हल गर्न आफूले सकेसम्म प्रयास गरिदिनुहुन्थ्यो । टोल, छिमेक र अन्य सबै बुबाको यही खूबीकै कारण निकै प्रभावित हुन्थे । बुबाले आफ्नो समय राजनैतिक व्यक्तित्वको उत्तरदायित्व, कर्तव्य, जिम्मेवारी सबै इमान्दारीपूर्वक निभाउनुहुन्थ्यो ।

बुबा सांस्कृतिक कार्यमा पनि त्यत्तिकै सक्रिय हुनुहुन्थ्यो । उहाँले विशेष गरी गाइजात्राको समयमा गाइने गाइँचा म्ये (व्यंग्य गीत) हरु तयार गर्नुहुन्थ्यो । विभिन्न व्यक्ति उहाँलाई भेट्न आउनुहुन्थ्यो र उहाँले त्यतिकै रुचिका साथ गाइँचा म्येहरु तयार गरेर पठाइदिनुहुन्थ्यो । उहाँको यस्तो गतिविधिकै कारण हाम्रा छिमेकीले उहाँलाई 'गाइँचा' भनेर उपनाम समेत दिए ।

उहाँले फूर्सदका बेला विभिन्न राजनीति सम्बन्धी किताबहरु अध्ययन गरिरहनुहुन्थ्यो र हामीलाई पनि पढ्न उत्साहित गर्नुहुन्थ्यो । उहाँले घरमा हुँदा बेलाबेलामा हामीलाई घरमा विभिन्न राजनैतिक कुराहरु पनि सुनाउनुहुन्थ्यो । उहाँले विभिन्न जिल्लामा राजनैतिक कार्यक्रमका सिलसिलामा भएका विभिन्न व्यक्तिहरुका बारेमा साथै आफूले देखेका भोगेका आफ्ना अनुभवहरु पनि सुनाउनुहुन्थ्यो ।

०५४ सालतिर बुबाकै निर्देशनअनुसार करीब ६ महिना नेमकिपाको केन्द्रीय पार्टी कार्यालयमा बसेर केही राजनैतिक कुराहरु सिक्ने अवसर पाएको थिएँ । त्यतिबेला 'श्रमिक' साप्ताहिक पत्रिकाका लागि अंग्रेजी समाचारहरु नेपाली भाषामा अनुवाद गर्ने काम सिक्दै केही अंकहरुमा काम गरेको थिएँ । त्यसपछि आफूलाई पढाइमा निरन्तरता दिने क्रममा राजनीतिमा खासै सक्रिय नभए पनि ०५५, ०५७ र ०६५ सालको स्व.वि.यु. निर्वाचनमा ने.क्रा.वि.सं. को उम्मेदवार पनि भएको थिएँ ।

०५७ साल असोज १९ गते बुबाले अप्रत्याशित र अकल्पनिय रुपमा यो संसारमा हामीलाई छाडेर सँधैंका लागि टाढा जानुभयो । उक्त घटना हामीलाई पत्याउन निकै गाह्रो भएको थियो । बुबा आफ्नो राजनैतिक कामका सिलसिलामा घरमा

थोरै मात्र समय बिताउने हुँदा लामो समयसम्म पनि बुबा कुनै दिन फर्किनुहुन्छ जस्तो लागिरहन्थ्यो । तर बुबाको अभाव भने सधैं खट्कीरहन्थ्यो । बुबा बितेको समय दुइ दिदीको विवाह भैसकेको थियो । हामी ५ जना दिदी, म, दुइ बहिनी र भाइ कलेज स्कूलमा अध्ययन गरिरहेको अवस्था थियो । बुबाको सपनालाई पूरा गर्न हजूरबुबा, आमा र दिदीहरुले अध्ययनका लागि विशेष सहयोग गर्नुभयो । घरको म जेठो छोरो भएकोले कसैले मलाइ अब जागिर गरेर घर परिवारको जिम्मेवारी सम्हाल्नुपर्छ भने त कोही अब बुबा जस्तै सक्रिय राजनीतिमा लाग्नुपर्छ पनि भन्थे । तर म बुबा बितेकै वर्ष बुबाकै सपना साकार पार्न ख्वप इन्जिनीयरिङ कलेजमा बि.ई. मा भर्ना भएँ । त्यतिबेला घरको आर्थिक अवस्था र समय समयमा बाहिरी तत्वको विभिन्न दबाबले मेरो अध्ययनमा धेरै असर पर्‍यो । विभिन्न तनावका बीच मैले जसोतसो इन्जिनीयरिङमा स्नातक उत्तीर्ण गरेँ ।

बुबाको अभाव भए पनि हजूरबुबाको अभिभावकत्वले मलाई राहत मिलेको थियो । ०६२ सालमा पुल्चोक क्याम्पसमा स्नातकोत्तर पढ्न सरकारी छात्रवृत्तिमा नाम निस्केपछि मलाई उच्च शिक्षा अध्ययन गर्न निकै राहतको महसुस भयो । साथै पुल्चोक कलेजमै एम.एस.सी. होस्टेल पनि पाएपछि थप हौसला पाएँ र स्नातकोत्तर अध्ययन तनावरहित तरिकाले अध्ययन गर्न पाएँ र विशिष्ट श्रेणीमा उतीर्ण भएँ । त्यसपछि म विभिन्न जिल्लामा गएर इन्जिनीयरिङ काम गर्न थाले ।

०६९ साल चैत्र २९ गते हजुरबुबाको निधन हुँदा म सोलुखुम्बुमा थिएँ । हजुरबुबाको अनुहार पनि हेर्न नपाई बितेको खबर निकै पिरोलिरहन्छ । बुबाको निधन भन्दा पनि हजुबुबाको निधनले मलाई घरको थप जिम्मेवारीहरु सुम्पेको आभाष भयो । हजूरबुबाले सुम्पेर गएको जिम्मेवारी मैले पूरा गर्नुपर्छ भन्ने लागिरहन्छ ।

मेरो बुबा मेरो लागि गुरु हुनुहुन्थ्यो । उहाँले प्रेरणा नदिएको भएँ म आजको यो स्थितिमा पुग्दिँन्थें । बुबाकै प्रेरणाबाट हामी दिदीहरु, बहिनीहरु, भाइ र म लगायत सबै जना आ-आफ्नो बाटो पहिल्याइसकेको वर्तमान अवस्थामा हामीले बुबाको निमित्त केही गर्नुपर्छ भन्ने सोच राखेर आशाकाजी बासुकला स्मृति प्रतिष्ठान गठन गर्‍यौं । यस प्रतिष्ठान मार्फत् बुबाको इच्छालाई निरन्तरता दिन सामाजिक कार्यहरु गर्ने हाम्रो लक्ष्य रहेको छ । सबैभन्दा पहिला बुबाकै लागि केही काम गरौं भन्ने भावनाले उहाँकै नाममा एउटा स्मृति ग्रन्थ निकाल्ने निर्णय भएकाले यस स्मृति ग्रन्थले एउटा आशाको किरणको मार्ग प्रदर्शनको अपेक्षा राख्दै बुबाको चीर शान्तिको कामना गर्दछु ।

# मेरा शिक्षक बुबा, मेरा अभिभावक



**जेनी किरण बासुकला राजलवट**
(काइँली सुपुत्री)

संसारमा सबै प्राणीलाई आफ्ना आमा र बुबा महान् नै हुने गर्दछ। आमा-बुबाले नै आफ्ना छोराछोरीको प्रारम्भिक लालन पालन, शिक्षादीक्षा प्रदान गरेको हुन्छ। मेरा बुबा आशाकाजी बासुकला पनि मेरा लागि उतिकै महान् व्यक्ति हुनुहुन्थ्यो। उहाँ एक सफल राजनीतिज्ञ तथा समाजसेवीका साथै आफ्ना सन्तानका लागि मात्र होइन समाज उत्थान गरी परिवर्तन चाहने अग्रज व्यक्ति पनि हुनुहुन्थ्यो। शिक्षण पेशाबाट नै उहाँले समाजसेवा गर्दै समाज विकासका साथै सफल राजनीतिज्ञ बन्न सफल हुनुभएको थियो। उहाँले समुदायको नेतृत्वमा भक्तपुर व्यासीमा प्रभात इङ्गलिस स्कुल स्थापना गर्नुभएको थियो। जुन स्कूलबाटै मैले शिक्षा आरम्भ गर्ने मौका पाएँ। यसरी उहाँले घरपरिवार मात्र होइन टोल, समाज तथा विभिन्न जिल्लामा शिक्षा प्रदान गर्न अन्तिम क्षणसम्म पनि निरन्तरता कायम गर्नुभएको थियो। उहाँले घरको समस्या भन्दा समाजको समस्यालाई प्राथमिकता दिनुहुन्थ्यो। घरमा छाना चुहियो भन्दा संसद भवनको छाना त चुहिएको छ, यो त के हो भनी हाँसी मजाक गर्नुहुन्थ्यो। हामीले घरमा कुनै घरायसी समस्या र अभाव देखायो भने यो राष्ट्रको समस्या यस्तै हो भन्नुहुन्थ्यो। मैले उहाँबाट इमान्दारिता र अनुशासित गुण लगायत आत्मनिर्भर बन्नुपर्दछ भन्ने ज्ञान सिकेँ। जुन हरेक व्यक्ति, समाज र राष्ट्रले सिक्नुपर्ने गुण हो।

म सानो छँदा बुबाले नेपाल भारत सम्बन्ध किताब पढ्नुभएको देखेको थिएँ। अहिले आएर हामी कति भारत पीडित छौं भन्ने कुरा गत वर्षको भारतीय नाकाबन्दीबाट प्रस्ट भैसकेको छ। उहाँले त्यसैले होला बारम्बार हामीले अरुको कुरामा लोभ गर्नुहुन्न र काममा मेहनती हुनुपर्दछ भन्ने गर्नुहुन्थ्यो। हामीले अध्ययन गर्न अल्छी गर्यौं भने जीवन आफ्नो हो आफ्नो लागि आफैले संघर्ष गर्नुपर्दछ भन्नुहुन्थ्यो।

नेपाल मजदुर किसान पार्टीको 'एक घर एक स्नातक' नारा उहाँले आफू स्नातक भैसकेपछि ल्याउनुभएको उहाँको योजना हो। जुन योजना अहिले भक्तपुर जिल्लामा व्यापक रुपमा पूरा भएको देखिन्छ। हाम्रो घरपरिवारमा पनि उहाँको विचार र योजनालाई सम्मान गर्दै एक दिदी बाहेक सबैले स्नातक अध्ययन पूरा गरिसकेको छौं। त्यही पीडाले उहाँ दिदीले आफ्ना सन्तानहरुलाई कम्तिमा पनि स्नातकसम्म पढ्नु पर्छ भनी प्रेरित गरिरहनु भएको छ। राजनीतिक जीवनमा निरन्तर रुपमा लाग्नुभएका बुबाले धेरै वर्ष जेल जीवन बिताउनुभयो। राजनैतिक संगठन बिस्तार गर्न प्रायः विभिन्न जिल्लामा जानुहुन्थ्यो। त्यसैले बुबालाई घरको समस्या, समस्या जस्तै लाग्दैनथ्यो। सबै घरायसी काम र अर्थोपार्जन आमा र हजुरबुबाले जिम्मा लिनुभएको थियो।

उहाँले खानेकुरामा अति सरल र लगाउने लुगा पनि साधारण थियो। उहाँको संगठनप्रति बढी माया थियो। आफन्त तथा छिमेकी साथीभाइले यो संगठनमा लागेर के गर्नु, न त पैसा राम्रो कमाइयो न त आफ्नो पद नै सधै रहिरह्‌यो, भएको सरकारी जागिर पनि छाडिदिनुभयो भन्दा त्यसको जवाफमा उहाँले 'म मर्न तयार छु, म पैसाको लोभी छैन तर संगठन छाड्न सक्दिनँ' भन्नुहुन्थ्यो। उहाँभित्रको संगठन प्रतिको इमान्दारिता देखि आफ्नो कर्मपथमा डटेर लाग्न प्रेरणा मिलिरहेको छ।

उहाँले राजनैतिक जीवनमा धेरै कार्यकताहरुलाई आफ्नो संगठन बिस्तार गर्न प्रशिक्षण दिनुभयो। उहाँको नेतृत्व शैलीले संगठनमा धेरै व्यक्तिहरु प्रभावित भएको पाइन्छ। तर हाम्रो कमजोरी भनौं वा उहाँको कमजोरी भनौं परिवारमा त्यो नेतृत्व शैली हामी कसैले अँगाल्न सकेनौं। बुबा संगठन विस्तारमा जतिसुकै बाधा, अड्चन, तनाव भएपनि घरमा आउनुहुँदा

सबैसँग हाँसी मजाक मूडमै पाउन्थ्यौं । बुबाको राम्रो खुबी भन्नु नै जतिसुकै रिस उठेपनि रिस देखाउनु हुन्न । हजुरबुबा दिनभरीको खेतको कामबाट थकान हुँदा वा कुनै घरको समस्या भन्नुहुँदा उहाँ हास्य तरिकाले नै हजुरबुबासँग व्यवहार गर्नुहुन्थ्यो । बुबाको कुराले हजुरबुबा दिनभरी थकान बिर्सेर आफ्नो दिनचर्या काममा व्यस्त हुनुहुन्थ्यो । फूपुहरु माझ पनि बुबा चाडपर्वमा, बिहे भोजमा रमाइलो कुरा गरी बिताउनुहुन्थ्यो ।

मलाई जहिले पनि सम्झना छ,बुबा घर आउनुहुँदा गीत गनुगुनाउनु हुन्थ्यो । तुरुन्तै गीतको भाकामा ढाल्नु हुन्थ्यो । एउटा छोटो गीत उल्लेख गर्न चाहन्छु ।

"माई डटर जेनी
छ छमा अति ज्ञानी
झः झः लाक तिसां तियो
अन्ति जोने मानी"

भक्तपुर जिल्लामा अंग्रेजी शिक्षकको कमी भएकोले उहाँले अंग्रेजी विषयलाई निकै जोड दिनुहुन्थ्यो । म उहाँको सल्लाह मार्फत एस एल सी उत्तीर्ण भएपछि अंग्रजी शिक्षिका बन्न सानोठिमी क्याम्पस अध्ययन गरेँ । तर अफसोच, म स्नातक प्रथम (बीएड) वर्ष अध्ययन गरिरहँदा २०५७ असोज महिनामा कालले टपक्क टिपेर लग्यो । अहिले मैले अंग्रेजी विषयमा एमएड गरेर अंग्रेजी शिक्षिका रुपमा परिचित छु । म यो अवस्थासम्म रहनुमा उहाँकै देन छ ।

त्यसैले मलाइ उहाँको समाजप्रतिको योगदान अहिले पनि स्मरणीय छ । बुबा बित्नु भएको १६ वर्ष भयो तर हामीलाई अहिले पनि जिउँदै हुनुहुन्छ जस्तो लाग्छ । मृत्युपश्चात् पनि सपनामा बारम्बार भेट गर्न आउनुहुन्थ्यो र मलाई त सरकारले षडयन्त्र रची फसाएको छ, अहिले अरुको सामु देखापर्नु हुन्न, तिमीहरु भेट्न मात्रै आएको हो, समाजमा संघर्ष गरी बाँच्न सिक भन्नुहुन्थ्यो । त्यसैले मलाई लाग्छ अहिले उहाँ हामी सामु नभएपनि उहाँको विचार, समाजमा जनताको भावना उजागर गरिरहेको जस्तो लाग्छ ।

# बुबा हुँदा र नहुँदाको अनुभूति



**ई. रोजा किरण बासुकला कर्माचार्य**
(कान्छी सुपुत्री)

छोरी मलाई भागी भागी नसताऊ
कानमा आई सुटुक्क बताऊ
तिमीलाई बाबाको माया कति लाग्छ रे ?

माथिका यी हरफहरु नेपाली चलचित्र 'स्वर्ग' को भए पनि हाम्रा बुबाले घरमा आउँदा मेरा लागि गुनगुनाउने कर्णप्रिय गीत हो। त्यसो त बुबा पुरानो हिन्दी फिल्मका गीतहरु बेला बेला गुनगुनाउनु हुन्थ्यो। घरमा प्रवेश गरेपछि भऱ्याङ उक्लँदै विशेष गरी मलाई इंगित गर्दै बुबाले आफैले बनाउनु भएको छोटो गीत गुनगुनाउँदै हामी भएको कोठातिर आउनु हुन्थ्यो।

My Daughter रोजा
छ छम्ह अति हे सोभ्का।

१६ वर्षको किशोरावस्थासम्म मैले थोरै समय मात्रै बुबासँग बिताउन पाएकी छु। बुबाको राजनैतिक जीवनले गर्दा देश र समाजका लागि अहोरात्र खटिनु भएकाले होला, उहाँले घर परिवारको निम्ति समय निकै कम दिनुहुन्थ्यो। "घर परिवारको केही मतलब छैन" भनी हजुरबुबा र आमाको सधैं गुनासो हुन्थ्यो। वहाँहरुलाई चित्त बुभ्काउन कहिले काहीं खेतको काममा समय मिलाएर सहयोग गर्नु हुन्थ्यो। शनिबारको दिन आमा र हजुरबालाई खेतको काममा सघाउन लगाउनु हुन्थ्यो। आमा बुबा बस्ने घर र हजुरबा लगायत हामी सन्तानहरु बस्ने घर अलग्गै भएकोले पनि हामीले थोरै समय मात्र बुबासँग बिताउन पायौं। हामी सानो छँदा आमा बुबा छालिङको घरमा बस्नु हुन्थ्यो, हामी चाहीँ चोछेँस्थित घरमा। अलग घरमा बसे पनि खानपिन चोछेँकै घरमा हुन्थ्यो तर बुबासँगै खाना खाने समय मुस्किलले जुर्थ्यो। बुबाको खाना खाने समयको ठेगान नै हुँदैनथ्यो। हामी सबै स्कूल गइसकेपछि ११-१२ बजेतिर घरमा खाना खान आउनु हुन्थ्यो। कहिलेकाहीँ व्यस्त भएर बिहानको खाना खान आउनै भ्याइनँ भनेर गुनासो गर्नुहुन्थ्यो। बेलुका पनि अबेला मात्रै हामी सबैले खाइसकेपछि आउनु हुन्थ्यो। कतिपय अवस्थामा हामी निदाइसक्ने भएकाले कति दिनसम्म पनि बुबालाई देख्न पाउँदैनथ्यौं। बुबा चाँडै घरमा खाना खान, छोराछोरीको हालखबर बुभ्न आउनु हुन्थ्यो, चाडै घर आउने दिनमा छोराछोरीसँग टी.भी. हेर्दै सँगै खाना खानुहुन्थ्यो। चोछेँको घरमा टि.भी.मा सधैं समाचार हेर्नुहुन्थ्यो।

मलाई अभ्क पनि याद छ, म धेरै सानो छँदा राती अबेरसम्म पनि छालिङको घरमा आमा बुबालाई कुरेर बस्नुहुन्थ्यो। सानो भएकाले होला आमा बुबासँग बस्न मन लाग्थ्यो। त्यतिखेर म भन्दा डेढ वर्ष कान्छो भाइलाई आमाले काखमा बोक्नु हुन्थ्यो। भाइ निदाएपछि मात्रै मैले आमाको काखमा बस्न मुस्किलले पालो पाउथें। दिनभरी आमा खेतको कामले यसै पनि थाक्नु हुन्थ्यो। त्यसमाथि हामी सानाहरुले सताउने अनि बुबालाई राती अबेरसम्म कुर्नु पर्ने। कतिपय अवस्थामा आमा थाकेर एक निन्द्रा सुतेर बिउँभिँदा पनि बुबा घरमा नआई पुग्दा भस्किनु हुन्थ्यो। घडी हेर्दै टोलाउनु हुन्थ्यो। बुबाले कहिले गीत गुनगुनाउँदै वा कहिले आफू चढेर आएको साइकलको घण्टीले आफू आइपुगेको संकेत गर्नु हुन्थ्यो। बुबा ढिला घर आएकोमा आमा भर्केर रिसाउनु हुन्थ्यो। कहिलेकाहीँ टर्च लाइटको बत्तीले आमातिर तेर्स्याउँदै जिस्काउनु पनि हुन्थ्यो।

उमेरले सानी भएकाले होला बुबा प्रधानपञ्च हुँदाको बखतको मलाई खासै सम्भना छैन। ०४५ सालको भूकम्प आउँदा बुबाले हामी स-साना छोराछोरीलाई पालैपालो एक-एक गरी बोकेर हरेक भऱ्याङमा १-२ पाइलामै ओर्लिइ

हामीलाई घरबाट बाहिर निकालेर सुरक्षित बनाउनु भएको थियो । षडयन्त्रपूर्ण ह्योजु काण्ड पश्चात् बुबा जेल पर्नु भए पनि हामी स-साना छोराछोरीलाई थाहा दिइएको थिएन । बुबालाई धेरै दिन नदेखेको जस्तो लागेको थियो । आमा र दिदीहरु बुवालाई भेट्न खाना बोकेर काठमाडौं जाने भन्नु हुन्थ्यो । हामी पनि जाने भनेर पछ्याउँदा कहिले काहीं लानु हुन्थ्यो । सानोमा बस चढेर काठमाडौं जाने अनि बुबालाई भेट्ने भनेपछि बाटोभरी रमाउँदै जान्थ्यौं । बुबा त्यतिखेर के कारणले जेल पर्नुभयो त्यो बाल मस्तिष्कले बुझ्ने कुरो थिएन । निकै बेर कुरेपछि बुबालाई भेट्न पाइन्थ्यो । आमा रुनु हुन्थ्यो । बुबा हाँसी हाँसी कुरा गर्नुहुन्थ्यो । हामीलाई पढाइको बारेमा सोध्नु हुन्थ्यो । कक्षामा कहिले तृतीय भएँ कहिले प्रथम भएँ भनेर सुनाउँदा बुबाले खुशी भएर स्याबासी दिनु हुन्थ्यो । जाने बेलामा भाइ र मलाई हातमा नयाँ नयाँ नोट दिनु हुन्थ्यो रू. एकको, दुईको र पाँचको । एक पटक त बुबाले मलाई रू. सय पनि दिनु भयो । बुबालाई हामीले कहिले आउने भनेर सोध्दा बुबाले भोली भन्नु हुन्थ्यो । हामी बाटोभरी बुबाले पैसा दिनु भयो भनेर रमाई रमाई बस चढेर घर फर्कन्थ्यौं । घर पुगेपछि आमाले हामीसँग भएको ठूलो नोट माग्दै यो ठूलो नोट तिमीहरुलाई के काम ? हराउला नि, चाहियो भने दिउँला भनेर रू. सयको नोट लिनु भएको थियो । एकछिन त नरमाइलो लाग्थ्यो बुबाले दिनु भएको नोट आमाले लिनु भयो भनेर, तर केही भन्दैनथ्यौं । सायद बुबाले दिनु भएको त्यस नोटमा बुबाको माया मिसिएको थियो ।

०४६ सालको जनआन्दोलन पश्चात् बुबा जेलबाट छुट्नुभयो । गालाभरी फूलमाला सहित घरमा स्वागत गरियो । घरमा बुबालाई सगुन दिन आउने आफन्तहरुको घुइँचो थियो । आउने बित्तिकै बुबाले भाइलाई खोज्नु भयो । भाइलाई बोकेर काखमा लिनु भयो । भाइको टाउको र पिठ्युमा हात राखेर मादल झैं गरी मादलको ताल मुखले बजाउनु भएको थियो । त्यसपछि भक्तपुरका विभिन्न स्थानमा भएका आमसभाहरुमा बुबा जानुभयो । टोलका साथीहरुसँगै खेल्दै टौमढीमा पुग्दा टाढैबाट बुबालाई त्यत्रो भीडका सामु पाँचतले मन्दिरमा फूलमाला सहित आसिन भएको देखें । के सम्बन्धी आमसभा थियो, त्यो मेरो बाल मस्तिष्कले बुझ्ने कुरो थिएन ।

बुबा शिक्षाप्रेमी भएकाले उहाँकै अगुवाइमा ठाउँ ठाउँमा स्कूल स्थापना गर्नुभएको थियो । त्यतिखेर बोर्डिङ्ग स्कूल औंलामा गन्न सकिन्थ्यो । जुनु दिदीको पालादेखि बुबाले आफूले खोलेको बोर्डिङ्ग स्कूलमा पढाउनु भएको थियो । हाम्रो शिक्षाको जग प्रभात इङ्गलिस स्कूलमा हाली दिनुभयो । घरमा पढ्ने वातावरण थियो । सबै जना बसेर पढ्थ्यौं, होमवर्क गर्थ्यौं । नजानेको कुरा दाइ, दिदीसँग सोधेर सिकिन्थ्यो । मीन पचासको विदामा समेत हामी अर्को कक्षाको पढाइको तयारी गरी पढाइमै व्यस्त हुन्थ्यौं । दाइ, दिदीले सिकाउनु हुन्थ्यो । घरमा शैक्षिक सामग्रीको कमी थिएन । बुबाले गोलमढीमा खोल्नु भएको आशा पुस्तक केन्द्रबाट शैक्षिक सामग्री ल्याइन्थ्यो । क्यारम बोर्ड, चेस, चेकर जस्ता Indoor Games हरु हामी पालैपालो खेल्थ्यौं । घरमा बुबाले पढ्ने वातावरण दिनु भएर होला सायद म एक कक्षादेखि कक्षामा सधैं प्रथम भएँ । प्रभात स्कूलमा पढ्दा घरमा सबैलाई बुबाले राम्रोसँग पढ्न हौसला दिनुहुन्थ्यो । दिदीहरुको पढाईमा चित्त नबुझ्दा बेला बेला बुबाले घुमाउरो पारामा गाली गर्नु हुन्थ्यो, “चोलेचा ज्वेकः छ्वे मपिन्ता आखः बोंक छोया” अर्थात् पाठापाठी चराउन पठाउनु पर्ने सन्तानलाई पढ्न पठाइएछ भनेर । दिदीहरुलाई गाली गरेको सुनेर होला म सधैं पढ्नका लागि सतर्क हुन्थे । घरमा बुबा भऱ्याङमा उक्लँदै गरेको जुत्ताको आवाज आउने बित्तिकै हामी खेलेर बसे पनि पुस्तक समाउन सुरसार कस्थ्यौं । पढ्दै गरेको देख्नु भयो भने खुशी हुनुहुन्थ्यो । टि.भी. हेरेर बस्यो भने गाली गर्नु हुन्थ्यो । दिदीहरुलाई सधैं प्रथम श्रेणीको अंक ल्याई पढ्न झक्झक्याउनु हुन्थ्यो । मलाई Hand writing मा सुधार गरेर उत्कृष्ट प्रतिशतमा पढ्न सधैं हौसला बढाउनु हुन्थ्यो । कक्षामा सधैं प्रथम हुँदा बुबा मसँग खुशी हुनुहुन्थ्यो । म पढेको स्कूलमा बुबा सञ्चालक समितिको अध्यक्ष हुनु भएकोले हाम्रो पढाइबारे, स्कूलका गतिविधिबाट पूर्ण जानकार हुनुहुन्थ्यो । कसै कसैले बुबा स्कूलको सञ्चालक समितिको अध्यक्ष भएर छोरीलाई शिक्षकहरुले कक्षामा प्रथम बनाएको भनेको कुरा सुन्दा आभाष हुन्थ्यो । बुबाले दिदीहरुलाई प्रवेशिका परिक्षामा प्रथम श्रेणीमा उत्तीर्ण भएन भनेर बेला बेला गुनासो गर्नु हुन्थ्यो । दाइले ०५० सालको प्रवेशिका परिक्षामा प्रथम श्रेणीमा उत्तीर्ण भइ जिल्ला प्रथम हुँदा बुबाको खुशीको सीमा थिएन । काठमाडौंमा साइन्स पढ्न पठाउनु भयो । काठमाडौंमा एक कोठा भाडामा लिई जुनु दिदी र दाइलाई काठमाडौंमै पढ्ने व्यवस्था मिलाउनु

भएको थियो। पछि दिदी र दाइले पढाइमा सन्तोषजनक नतिजा नल्याउँदा बुबालाई चित्त बुझेको थिएन।

बुबाले आशा पुस्तक केन्द्र छोडेपछि बिस्तारै हामीलाई शैक्षिक सामाग्री ल्याइदिनका लागि बुबालाई सम्झाउनु पर्थ्यो। व्यस्त राजनैतिक जीवनले गर्दा बुबाले छोराछोरीले मागेको कुरो ल्याउन भुल्नु हुन्थ्यो। धेरै पटक सम्झाएपछि ल्याउनु हुन्थ्यो। त्यही भएर होला कुनै पुस्तक वा कपि कलम चाहिनु भन्दा ४/५ दिन अगाडि देखि नै बुबालाई सो सामग्री चाहियो भनेर सम्झाउनु पर्थ्यो। बुबाले सम्झेर ल्याउनु भएको दिन खुशी हुनुपर्थ्यो किनकि प्रायः जसो खाली हात आउनु हुन्थ्यो। अनि कुनै न कुनै बहाना सुनाउँदै ल्याउन नपाएको कथा सुनाउनु हुन्थ्यो। स्कूलको शुल्क नियमित रुपमा बुझाउनु हुन्थेन। सायद धेरै सन्तानको बुबाले पढाई शुल्क धान्नु पर्ने अनि नियमित आम्दानीको स्रोत नभएको तथा व्यस्त राजनैतिक जीवनले गर्दा पनि होला, धेरै पटक सम्झाएपछि २-३ महिनाको शुल्क एकैचोटी बुझाउनु हुन्थ्यो। घरमा अन्य फजुल खर्च केही पनि हुँदैनथ्यो। घरमा आमा र हजुरबा सधैँ खेतीपातीमा व्यस्त भएर खानलाई भने समस्या थिएन। स्कूलको ड्रेस बाहेक बुबाले अरु लुगा किन्दिनु हुन्थेन। ज्योति दिदीले टिचिङ्ग हस्पितलमा जागीर शुरु गरेपछि हरेक वर्ष दशैंमा नयाँ लुगा किनिदिनु हुन्थ्यो। जेनी दिदीले एसएलसीको रिजल्ट आएपछि मार्कसिट लिन जाँदा स्कूलले सबै पैसा नबुझाएको कारण मार्कसिट नदिएकोले धेरै रुनु भएपछि बुबाले स्कूलमा गई पैसा बुझाएपछि मात्रै दिदीले स्कूलको मार्कसिट र सर्टिफिकेट पाउनु भएको थियो। धेरै सन्तानको जिम्मेवारी र व्यस्त राजनैतिक जीवनले बुबाले समयमै शुल्क नबुझाउँदा हामीले धेरै पटक बुबालाई गुनासो गर्थ्यौं, पटक पटक सम्झाउनु पर्थ्यो।

बुबा राजनीतिमा लागेको आमालाई पटक्कै मन पर्दैनथ्यो। सरकारी स्कूलको जागीर छोडेर पूरै राजनीतिमा लागेपछि परिवारमा आम्दानीको नियमित स्रोत नभएर आर्थिक अभाव शुरु भएको थियो। आमाले सधैं त्यही गुनासो गर्नु हुन्थ्यो। जुनु दिदीले बुबालाई पढ्न चाहीँ पठाउने तर आवश्यक खर्च नदिने भनेर पटक-पटक गुनासो गर्दै बुबासँग झगडा पनि गर्नु हुन्थ्यो। छोराछोरी पढाई भन्दा अन्त नलागोस् भन्ने बुबाको चाहना थियो। घरमा छोरीहरु धेरै भएर होला होलीको दिनमा हामीलाई कहिल्यै चोर्छेंको घरमा बस्न दिनु हुन्थेन। बिहानै हामी सबै जनालाई छालिङको घरमा जान निर्देशन दिनु हुन्थ्यो। खेतको काममा सघाउन लगाउनु हुन्थ्यो। जुनेली दिदी अटेर गरेर साथीहरुसँग होली खेल्न बस्नु हुन्थ्यो। पछि घर बाहिर होली खेली फोहोर भएको देख्दा दिदीलाई गाली गर्नु हुन्थ्यो। जुनेली दिदी अरु दिदी भन्दा पृथक हुनुहुन्थ्यो। पढाइमा अलि कमजोर हुनुहुन्थ्यो। एसएलसीमा विज्ञान विषयमा फेल हुँदा बुबालाई चित्त बुझेको थिएन। अर्को वर्षको प्रयासमा बल्लतल्ल पास गरेपछि खुशी हुनुभयो। एसएलसी पास भएपछि दिदीलाई साथीहरुसँगै काठमाडौंमा पद्म कन्या क्याम्पसमा पढ्ने रहर थियो। साथीहरुको लहैलहैमा लाग्ने र पढाइमा कम रुची राख्ने भएकोले बुबाले काठमाडौंमा पढ्न नपठाउने भन्नुभयो। अनि भक्तपुर बहुमुखी क्याम्पसमा भर्ना गरी दिनु भयो। एका बिहानै उठेर दिदी पढ्न जानु हुन्थ्यो। दिउँसो यता उता लाग्ला, बिग्रेला भनेर दिदीलाई छालिङ्गस्थित साइनिङ्ग इङ्गलिस स्कूलमा नर्सरी, केजीमा पढाउन लगाउनु भयो। दिदीले घरमा आईकम दोस्रो वर्ष पढिरहेको समयमा घरमा जुनेली दिदीको बिहेको प्रस्ताव आयो। ठूली दिदीको बिहे नभई माइली दिदीको बिहे गर्ने/नगर्ने विषयमा छलफल भयो। ठूलो दिदीले त्यतिखेर बिहे नगर्ने भन्नु भएको थियो। केटापक्षको निरन्तर दबावले गर्दा बिहे गरिदिने निष्कर्षमा पुग्यो। दिदीको बिहेकै दिनमा बुबाले मिबार्छेंको जग्गामा घर बनाउन जग हाल्नु भएछ। घरमा कसैलाई थाहा थिएन। बिहेको कार्यक्रमपछि आमाले सो कुरा थाहा पाएपछि बुबासँग झगडा गर्नु भएको थियो। दिदीको बिहेको ऋण हुँदाहुँदै फेरि घर बनाएर अर्को ऋणको बोझ थप्नु भयो भन्नेमा आपत्ति थियो। त्यतिबेला हामीलाई थप घरको आवश्यकतै थिएन। बुबाले त्यो घर सहितको जग्गा बासु स्कूलको भवन निर्माणका लागि प्रयोग गरिएको भन्नुभयो। बासु स्कूलमा मा.वि. तहको अध्यापन शुरु भयो। बुबाले त्यो घर मैले रहरले बनाएको नभई स्कूलको अनुरोधमा बनाएको भन्नु हुन्थ्यो। त्यो घर बनाउँदा जेनी दिदी ज्यामिहरुलाई खाजा खुवाउन खाजा बोकेर स्कूल जानु हुन्थ्यो। खाजा त्यहीँ पुऱ्याएर त्यही स्कुलमै अध्ययनरत भएकाले त्यही भवनमा पढ्नु हुन्थ्यो। खाजा समयमा ज्यामिहरुलाई खाजा खुवाउन सघाई खाजा खाइवरी फेरि कक्षामा जानुहुन्थ्यो।

०५१ सालको मध्यावधि निर्वाचनमा बुबा भक्तपुर क्षेत्र नं. २ बाट सांसद पदका लागि उम्मेदवार बन्नु भयो।

ज्योति दिदी र सुजना दिदी गाडीमा बसेर माइकिङ्ग गर्दै भोट माग्नको लागि चुनाव प्रचार प्रसारमा लाग्नु भएको थियो। अप्रत्यासित रुपमा बुबाले जित्नुभयो। आमालाई चुनावमा बुबा उठेको मन नपरेकोले सो दिन पनि चुनावको नतिजालाई पर्वाह नगरी खेतीपातीमै व्यस्त हुनुहुन्थ्यो। चुनाव जितेकोमा विजय ऱ्याली मनाउन ठाउँ ठाउँमा तयारी शुरु भएको थियो। बुबालाई बधाई दिने शुभचिन्तक तथा सगुन दिन आउने आफन्तको भीड घर अगाडि जम्मा हुँदा पनि आमा आइपुग्नु भएको थिएन। आमाले सगुन दिएपछि मात्र अरुले सगुन दिने कुरा भएपछि आमालाई लिन पठाइयो। आमा आउनु भएपछि बुबालाई सगुन दिनुभयो र अरु आफन्तले पनि सगुन दिनुभयो। त्यतिबेला निधारभरी रातो टिका र दही अनि गलाभरी फूलमालाले बुबाको अनुहार मुस्किलले चिनिन्थ्यो।

सांसद भएपछि त बुबा झनै व्यस्त हुनुभयो। घरमा हुँदाको समय पनि फोनमा र मान्छे भेटघाटमा व्यस्त हुनुहुन्थ्यो। घरमा भेटघाटका लागि आउने मानिसको जुत्ता/चप्पल थुप्रिन्थे। बेलाबेला काठमाडौं उपत्यका बाहिर पनि जिल्ला भ्रमणमा जानु हुन्थ्यो। त्यताको अनुभव सुनाएर हामीलाई त्यहाँका जनताले दुःख पाएको भन्नु हुन्थ्यो। त्यस हिसाबमा हामीलाई स्वर्गमा राखेको पाएँ भन्नु हुन्थ्यो। बेला बेला विदेश भ्रमणमा पनि जानु हुन्थ्यो। हामी बुबालाई छोड्न एयरपोर्टमा जान्थ्यौं। बुबा भीआईपी कक्षबाट जानुहुन्थ्यो। त्यतिबेला एयरपोर्टको छतमा जान दिइन्थ्यो। हामी छतमा पुगेर बुबा उड्ने हवाइजहाज नउडेसम्म पर्खेर बस्थ्यौं। हवाइजहाज चढ्दै गर्दा बुबाले हात हल्लाउँदै जानु हुन्थ्यो। हवाइजहाज उडेपछि मात्रै हामी घर फर्कन्थ्यौं। विदेश भ्रमणबाट फर्केर बुबाले त्यहाँको विकास र प्रविधिबारे बेला बेला सुनाउनु हुन्थ्यो। त्यस हिसाबले हामी धेरै पछि परेका रहेछौं भनी सुनाउनु हुन्थ्यो। अंग्रेजी फरर बोल्न नजानेर गाह्रो भएकाले हामीलाई राम्रोसँग अंग्रेजी बोल्न जान्नुपर्छ भन्नु हुन्थ्यो।

०५२ सालमा बुबाले मेरो पहिलो विदेश भ्रमणको तय गर्नु भएको थियो। उत्तर कोरियामा १६ वर्ष मुनिका बालबालिकाहरुको १५ दिने इन्टरनेशनल चिल्ड्रेन एक्सचेञ्ज प्रोग्रामको लागि म लगायत भक्तपुरका पाँच जना र काठमाडौं, ललितपुर र काभ्रे जिल्लाका गरी १६ जना बालबालिका एक जना शिक्षक र एक जना शिक्षिकाको नेतृत्वमा हामी १८ जना बैंकक, बेजिङ हुँदै उत्तर कोरियाको २३ दिने भ्रमणमा गयौं। खासमा शुरुमा त्यो कार्यक्रममा दाईलाई पठाउने कुरो भएको थियो। दाइ त्यतिखेर १६ वर्ष नाघिसकेकोले दाइलाई नपठाउने कुरो भयो। पछि जेनी दिदीलाई पठाउने कुरो भएपनि दिदी त्यतिखेर कक्षा १० मा अध्ययनरत् भएकीले एसएलसीमा असर पर्ला कि भनेर नपठाउने कुरो भएपछि मलाई पठाउने प्रकृया शुरु भयो। स्कूलमा पढिरहँदा बुबा मलाई लिन आउनु हुन्थ्यो। नाबालक भएकाले त्यसबेला बुबासँगको नाता सिफारिस लिन गइयो। बुबाको संरक्षकत्वमा शीतल निवासस्थित तत्कालीन परराष्ट्र मन्त्रालयमा पासपोर्ट बनाइयो। सम्बन्धित एम्बेसीहरुमा भिसाको लागि आवेदन दिने क्रममा तत्कालिन प्रतिनिधिसभा प्राङ्गणमा पुग्ने मौका पाएकी थिएँ। उता कोरियाका लागि प्रस्थान गर्नुपूर्व प्रधानमन्त्री कार्यालयमा प्रवेश गर्न पाएकी थिएँ। विदेश भ्रमणमा जाने चिल्ड्रेन डिलिगेट्सको टोलीलाई तात्कालीन प्रधानमन्त्री मनमोहन अधिकारीज्यूले पुष्पगुच्छा र नेपालको झण्डा सहित हामीलाई विदाई गर्नु भएको थियो। त्यतिखेर म ११ वर्षकी थिएँ। यात्राका क्रममा बोक्नु पर्ने आवश्यक पासपोर्ट ट्राभलर्स चेक, डलर आदि सबै एण्डिना दिदीले हामी भक्तपुरका पाँच जना प्रतिनिधिहरुको बोक्नु हुन्थ्यो। त्यस भ्रमणमा मैले चीन र उत्तर कोरिया घुम्ने अवसर पाएँ। करिब ५० वटा जति देशका सहभागीहरु उत्तर कोरियामा सो कार्यक्रमका लागि जम्मा भएका थिए। विभिन्न देशलाई नेपालबारे विभिन्न कार्यक्रममा राष्ट्रिय गान, लोक नृत्य, नेपाली सामाग्री, नेपाली भेषभूषा प्रदर्शन आदि मार्फत् चिनाइयो। त्यहाँ बस्दा विभिन्न बाल कार्यक्रममा सहभागी भई रमाइलो भएपनि घरको याद आउँथ्यो। पहिलो पटक घर छोडेको र सानै भएर पनि होला सायद न्याम्रो लाग्थ्यो। कहिले फर्किने भनेर दिन गनेर बस्थें। त्यहाँ बस्दा एउटा अंग्रेजी म्यागेजिनमा विभिन्न इन्टरनेशनल इभेन्टको बारेमा पढ्दा पार्लियामेन्टरी डिलिगेट्सको भ्रमणको सामुहिक फोटोमा बुबाको फोटो मात्र देख्दा पनि निकै खुशी लागेको थियो। मैले हामी नेपाली बालबालिकाको लागि तोकिएका दोभाषे (Interpreter) लाई हत्त न पत्त मेरो बुबा भनेर देखाएँ। उनले पत्रिकाको अर्को अंकमा हाम्रो पनि ग्रुप फोटो आउँछ कार्यक्रमको इन्टरनेशनल चिल्ड्रेन डिलिगेट्सको भ्रमण बारे भने। बुबालाई सो कुरा सुनाउन निकै आतुर थिएँ। बुबाले भने

भ्रैं विदेशमा बस्दा अंग्रेजी भाषाको महत्व निकै बुझें। बोर्डिङ्ग स्कूलमा पढेकाले आफ्नो क्षमताले भ्याएसम्म अंग्रेजी भाषा प्रयोग गरी विभिन्न देशका बालबालिकासँग कुराकानी गर्थ्यौं। कतिलाई त अंग्रेजी भाषा आउँदैनथ्यो। अंग्रेजी नआउने कोरियनहरु हामी केटाकेटीहरु सानैमा अंग्रेजी बोलेको देखेर छक्क पर्थे। फर्किंदा ठूलो दिदीका साथमा बुबा एयरपोर्टमा लिन आउनु भएको थियो। बुबाले मेरो विदेश भ्रमणको लागि आफूसँग पैसा नभए पनि त्यो बेला हवाई खर्च र पकेट खर्चको लागि छिमेकी काकाहरुसँग ४० हजार खर्च सापटी लिएर मलाई सानै उमेरमा विदेश पठाउनु भएको थाहा पाएँ। पैसा नभई नभई त्यत्रो खर्च गरेर किन पठाउनु भएछ जस्तो लाग्थ्यो। आफू सांसद जस्तो गरिमामय पदमा बसेर छोरीलाई विदेश पठाउन सक्नु/नसक्नु बुबाको पदीय इज्जतको सवाल थियो। करीब एक महिनाको विदेश भ्रमणले मेरो पढाइमा असर परेको थियो। तर मैले साथीहरुको सहयोगमा छुटेको पढाई पनि पढ्न थालें। सधैं कक्षामा प्रथम भएपनि त्यस साल पढाई छुटेको कारण पछि परें। छ कक्षाको अन्तिम परिक्षासम्मको नतिजामा जम्मा चार अंकले मात्रै म दोस्रो भएँ। छुटेको पढाईलाई समेत पढेर मेहनेत गरेको देखेर बुबा खुशी नै हुनुहुन्थ्यो। अर्को साल कक्षा सातमा म फेरि कक्षामा प्रथम भएँ।

एसएलसी पछि जेनी दिदी सानो थिमि क्याम्पसमा आई इड पढ्दै हुनुहुन्थ्यो। फूर्सदको बेला सानो थिमि वरपर घुम्दा एस.ओ.एस. हर्मन माइनर स्कूल (हाल उच्च मा.वि.) मा पुग्नु भएछ। दिदीले सो स्कूल बारे बेला बेला बुबासँग कुरा गर्नु हुन्थ्यो। पछि मलाई बुबाले सो स्कूलमा कक्षा आठमा पढ्नको लागि फाराम भराई लिखित परिक्षा दिन पठाउनु भयो। छनोट भएपछि त्यहीं स्कुलमा भर्ना गरियो। एक्लै बस चढेर कहिल्यै यात्रा नगरेकी म दिनहुँ लोकल बस चढेर पढाइको लागि यात्रा गर्थे। शुरुमा १-२ महिना नयाँ अनुभव सहितको वातावरणमा घुलमिल हुन समय लाग्यो। बुबाले सो स्कूलमा छोरीलाई पढ्न पठाउँदा आमालाई मन परेको थिएन। घरमा बुबा नभेट्ने बेला आमासँग यात्राखर्च माग्नु पर्थ्यो। दिनहुँ बस खर्च दिनु पर्ने गरी किन स्कूल परिवर्तन गरी टाढा पठाएको त्यो पनि छोरीलाई भन्ने गुनासो आमाको हुन्थ्यो। बुबाको जवाफ हुन्थ्यो, त्यहाँ मासिक शुल्क तिर्नु पर्दैन। एस.ओ.एस.को अनुदानमा त्यसबेला कक्षा आठसम्म मासिक शुल्क बुझाउनु पर्दैनथ्यो। पछि कक्षा नौ देखि मा.वि.तहमा मासिक शुल्क बुझाउनु पर्थ्यो। आमाले पैसा तिर्नु पर्दैन भन्दै छोरीलाई त्यहाँ पठायौ आखिर तिर्नु पर्ने रैछ भन्नु हुन्थ्यो। आमाको त्यस्तो गुनासोलाई बुबाले मतलब गर्नु हुन्थेन। आफ्नो स्कूल नभएर होला अनि लेट फी को पनि व्यवस्था भएर पनि होला। त्यहाँ चाहीँ बुबाले नियमित शुल्क बुझाउन लगाउनु हुन्थ्यो। सो स्कूलमा अंग्रेजी माध्यमकै पढाई हुने कक्षामा प्रतिस्पर्धात्मक वातावरणमा पढियो। नयाँ स्कूलमा कक्षामा प्रथम हुन नसकेपनि १० कक्षासम्म पुग्दा कक्षामा चौथो स्थानसम्म पुगिसकेको थिएँ। बुबाले मलाई सधैं एसएलसीमा विशिष्ट श्रेणीमा नतिजा ल्याउनुपर्छ भनेर हौसला बढाउनु हुन्थ्यो। १० कक्षा पढ्दापढ्दै माइग्रेनको समस्या शुरु भएपछि मैले पढाइको लागि प्रेसर नदिन तर मैले सक्ने गर्छु भनेर बुबालाई अनुरोध गरें। धेरै Expectation सहितको प्रेसरले गर्दा दाइले बुबाले सोचेजस्तो सन्तोषजनक रुपमा I.Sc. पढ्न सक्नु भएको थिएन। प्रवेशिका परीक्षामा एक प्रतिशतले मात्र विशिष्ट श्रेणी नआउँदा बुबालाई अलि चित्त बुझेको थिएन। एसएलसी पछिको समय बुबाले पढाइमा निरन्तरता हुने गरी ख्वप कलेजमा Pre-ISc पढ्न पठाउनु भयो। दिउँसो फूर्सदको समयमा साथीहरुसँगै सिलाई सिक्न जाने कुरा गर्दा बुबाले पर्दैन भन्नु हुन्थ्यो। पढाईमा मात्रै ध्यान दिनु भन्नु हुन्थ्यो। भाइले त्यो बेला प्रभात स्कूलमा पढिरहँदा कम्प्युटर विषयको पुस्तक किनी दिन आग्रह गर्दा किताब मात्रै किन कम्प्युटर नै किनी दिउँला भनी जवाफ दिनु हुन्थ्यो। कहिले भनेर सोध्दा पैसा भएपछि भन्नुहुन्थ्यो। प्रथम श्रेणीमा प्रवेशिका उत्तीर्ण गरेकाले विज्ञान विषय पढाउने भन्नु हुन्थ्यो। विज्ञान विषय पढ्न चाहने विद्यार्थीहरुका लागि त्यसबेला St.Xavier's Campus उत्कृष्ट क्याम्पस थियो। मलाई त्यहाँ फाराम भरी प्रवेश परीक्षा दिन लगाउनु भयो। प्रवेश परीक्षामा नाम निस्केपछि बुबाले खुशी भई अन्तर्वार्तामा पनि नाम निकाल्नु पर्छ भन्नु भयो। नभन्दै अन्तर्वार्तामा पनि नाम निकालेपछि बुबा अत्याधिक खुशी हुनुभयो। पछि Parents Interview को लागि बुबासँगै क्याम्पसमा गयौं र बुबाले अन्तर्वार्ता दिनु भयो। तीन दिन भित्र भर्ना गर्ने कुरा भयो। करिब २० हजार बुझाउनु पर्ने थियो। बुबासँग त्यति पैसा थिएन। ज्योति दिदीले आफूसँग भएको केही रकम दिनु भयो मेरो कलेजमा भर्ना गर्नका लागि नपुग पैसा बुबाले छिमेकी काकाहरुसँग सापटी लिई तोकिएको शुल्क समयमै खुशी साथ भर्ना गरी दिनुभयो।

मैले बुबालाई त्यति खुशी हुनु भएको कहिल्यै देखेको थिइनँ। एसएलसीमा जिल्ला प्रथम भएका दाइलाई त्यस क्याम्पसमा पढाउने ठूलो रहर थियो, दाइको त्यहाँ नाम ननिस्केको र मैले बुबाको इच्छा पूरा गरेकोले बुबा विशेष खुशी हुनुहुन्थ्यो। अघिपछि पढाइखर्च बाहेक अन्य केही खर्च नदिने बुबाले त्यहाँ नाम निकालेको दिनमा बुबाले मलाई ५० रुपैयाँ दिएर यो पैसाले साथीहरुलाई जे खुवाउन मन लाग्छ खुवाउ समेत भन्नु भएको थियो। असाध्यै अचम्म लागेको थियो। बुबाले भने झैं चारजना साथीहरुलाई थिमिको एभरेष्ट मःमः पसलमा रू.१० को प्रति प्लेट मःमः खुवाएको थिएँ।

St.Xaviers Campus मा Board Topper हरु लगायत देशभरी विज्ञान विषय पढ्ने उत्कृष्ट विद्यार्थीहरु माझ एकदम प्रतिस्पर्धात्मक वातावरणमा पढ्ने अवसर पाएँ। अग्रिम रुपमा तीन-तीन महिनाको शुल्क बुझाउनु पर्थ्यो। समयमा नबुझाए विलम्ब शुल्क समेत बुझाउनु पर्थ्यो। सो विषयमा सम्झाउने गर्थे बुबालाई समयमै शुल्क तिर्नु हुन्थ्यो। राम्रोसँग I.Sc. पढ्न प्रोत्साहन दिनु हुन्थ्यो। कलेज पढ्दै गर्दा एकदिन लोकल बसमा फर्कंदै गर्दा सोही बसमा बुबा दूधपाटीमा चढ्नु भयो। बस अलि कोचिएको थियो। बुबालाई चिन्नेहरुले नमस्कार गर्दै सिट मिलाइदिन खोजेका थिए। बुबाले पर्दैन भनी म पनि आम जनता जस्तै बसमा यात्रा गर्दैछु भन्नुभयो। बसको भीडभाडमा यत्रो ठूलो नेता पनि बसमा किन भन्ने प्रश्नमा बुबाले सार्वजनिक यातायातमा जनताको वास्तविक अवस्था समस्या बुझ्न आफू पनि जनता झैं बस चढेको भन्नु भयो। अनि सोध्नु भयो बसमा सधैं यस्तै भीड हुन्छ ? अफिस टाइममा त सधैं यस्तै हो भन्ने जवाफ आयो। यसरी जनता माझ जनताको समस्या बुझ्न प्रत्यक्ष रुपमा प्रस्तुत भएको पहिलो पटक देखें। ब्यासी पुगेपछि मलाई बसबाट ओर्लेर घर जाऊ भन्नु भयो। बुबा त्यही बसमै यात्रा गर्दै जानुभयो। हामी स्कूल/कलेज घर र घर-स्कूल बाहेक अन्य कतै नजाने भएकोले बुबासँगको भेट घरमै मात्र सीमित हुन्थ्यो। टोलमा बच्चादेखि बुढाबुढीसँग ख्याल ठट्टा गरी कुराकानी गर्नु हुन्थ्यो। बुबाले जनतामाझ कसरी बोल्नु हुन्थ्यो त्यसबारे हामीलाई खासै ज्ञान छैन। घरमा राजनैतिक पुस्तकहरु भए पनि ती पुस्तकको कभर पेज भन्दा भित्र हाम्रो कहिल्यै आँखा पर्दैनथ्यो र बुबाले पनि हामीलाई ती पुस्तकहरु पढ्न कहिल्यै जोड दिनु हुन्थेन। कोर्स बुक राम्रोसँग पढ्न सधै हौसला दिनु हुन्थ्यो।

त्यतिखेरसम्म बुबाले मिबाछैंको घरमा एकतला पनि थप्नु भयो। हामी सबैलाई त्यत्रो ऋण लिएर किन घरमा तल्ला थप्नु भएको होला जस्तो लाग्थ्यो। आमा पनि रिसाउनु हुन्थ्यो, घर व्यवहार चलाउने मतलब छैन तला थप्नु भयो भनेर गुनासो गर्नु हुन्थ्यो। बुबाले आमालाई दुई फ्लायट भाडामा दिने हो, बाँकी दुई फ्लायट हामी सपरिवार बस्नलाई हो। आमा चोछैंको घर छोड्न नै मान्नु हुन्थेन। थपेको तलामा पनि बहालमा दिनुपर्छ भन्नु हुन्थ्यो। बुबाले नयाँ घरमा सपरिवार सर्ने भनेर हजुरबालाई पनि फकाउनु हुन्थ्यो। शुरुमा त आफू वर्षौंदेखि बस्दै आएको चोछैंको घर नछोड्ने भनेर मान्नु भएको थिएन। बुबाले धेरै सम्झाए बुझाएपछि हजुर बुबा मान्नु भयो। अब आउने दशैं मनाएर सरौला। बुबाको काम, कुरामा आमाको सपोर्ट नभएको देखेर बुबाले सधैं "मलाई घरबाहिर समाजमा जनताले कति मान सम्मान गर्छन्, घरमा चाहिं श्रीमतीले कहिल्यै मलाई मान्दैन।" भनेर आमालाई गुनासो पनि गर्नुहुन्थ्यो।

बुबालाई उच्च रक्तचाप बाहेक अरु कुनै रोग लागेको हामीलाई थाहा थिएन। ज्योति दिदी नर्स हुनु भएकोले नियमित रुपमा दिदीले रक्तचाप परिक्षण गरी डाक्टरलाई जचाँई औषधि दिनु हुन्थ्यो। उच्च रक्तचाप भएकोले दिदीले नून कम हालेर बुबालाई खाना दिनु भन्नुहुन्थ्यो। बुबालाई नून नहालेको तरकारी छुट्याएर राख्थ्यौं। दिदीको अथक प्रयासबाट उच्च रक्तचाप पनि धेरै नियन्त्रणमा आइसकेको थियो। ०५७ सालको दशैं विदाको बखत बुबा रुघाखोकीले ग्रस्त भई ज्वरो आएको थियो। दिदीले बुबालाई जँचाई औषधी सेवन गर्न लगाउनु भएको थियो। ज्वरो आएर बुबा चोछैंको घरमा आउन नसकेकोले बुबाले घरमा फोन गरी खाना बोकेर मिबाछैंको घरमा ल्याउन लगाउनु भयो। महासप्तमीको दिन थियो, म बिहानको खाना हटकेशमा बोकेर चोछैंबाट मिबाछैं पुगें। दिनभरी बुबाको सेवा पनि गर्न र दशैंको होमवर्क पनि गर्ने मनसायले होमवर्कको सामाग्री साथमा लिएर गएको थिएँ। त्यस दिन बुबाले खाना पनि कम खानु भयो। बुबालाई खाना खुवाइसकेपछि Maths को होमवर्क गर्दै थिएँ। बेला बेला बुबाले बोलाउनु हुन्थ्यो। बुबालाई तातो पानी दिएँ, Horlicks बनाइ दिएँ, चिया बनाई बिस्कुटसँग खान दिएँ। यसबीचमा बुबा सोफामा पल्टेर टिभी हेर्दै मसँग धेरै कुरा गर्नु भएको थियो।

विशेष गरी पारिवारिक विषयमै लामो कुराकानी गर्नु भएको थियो । सायद बुबासँग घरमा यति धेरै कुराकानी गर्ने अवसर कहिल्यै जुटेको थिएन । साँझ परेपछि बुबाले मलाई घर जाऊ भन्नु भयो अनि आमालाई मिबाछैं बोलाउन फोन गर्न लगाउनु भयो । बुबाले भने झैं आमा आउनु भएपछि म चोछैंको घरमा गएँ ।

भोलिपल्ट महाअष्टमीको दिनमा बिहानै चिया खाएपछि बुबाको सेवा गर्न म मिबाछैंको घरमा गएँ । बुबा ज्वरोले अलि बढी गलेको पाएँ । जेठो भिनाजु बुबालाई जचाउन लिन आउनु भएको थियो अजरसँग । दिदी उतै Clinic मा सिधै आउने भनेकोले बुबालाई मोटरसाइकलमा राखेर लाने कुरा भयो । जाने बेलामा बुबाले मलाई मिबाछैंको साँचोको झुप्पा सुम्पेर घरको ख्याल राख्नु भन्नु भयो । बुबा नआउञ्जेल खाना खान कुरेर बस्नु भन्नुभयो । बाइकमा चढ्नै लाग्दा मलाई त साह्रै जाडो भयो ज्याकेट लिएर आउन भन्नुभयो । हत्तपत्त दौडेर पहेँलो रंगको ज्याकेट बुबालाई दिई घरमा उक्लें । उक्लँदा हातमा रहेको चाबीको झुप्पा बुबाको कोठा बाहिर खस्यो । Key Ring मा गणेशमान सिंहको फोटो सहितको भाग टुटेछ । बुबाले गाली गर्नु हुन्छ कि जस्तो लाग्यो एकछिन त Key Ring टुटेकोमा । बुबालाई कुर्दै बसें । बुबा त आउनु भएन । रिपोर्ट लिन त समय नलाग्नु पर्ने जस्तो लागेको थियो । नर्स दिदी नै त्यहीँ भएपछि जँचाउन समय त नलाग्नुपर्ने जस्तो लागेको थियो । बुबाले खाना खानलाई कुरेर बस्नु भनेकोले कुरेरै बसैं टिभी हेर्दै । चोछैंबाट दिदीले फोन गर्नुभयो, घरमा खाना खानको लागि । मैले बुबा आउनु भएपछि खाउँला भने । बुबाले घरको चाबी छोड्नु भएको छ भनें । खाना पठाई दिनु भने । त्यस दिन घरबाट खाना पनि आएन । बुबा पनि आउनु भएन । धेरै भोक लागिसकेको थियो । दिदीले बुबा त्रि.वि.शिक्षण अस्पताल जानु भएको छ, परिक्षको लागि समय लाग्न सक्छ, खाना खान आउ भनेपछि चोछैंको घरमा गएँ । खाना खाइसकेपछि जुनु दिदीले मिबाछैं जान दिनु भएन । बुबा आउनु भएको छैन, दाइ र ज्योति दिदी पनि सँगै गएकाले सँगै फर्कन्छन् भनेर । त्यस दिन घरमा अर्कै वातावरण भएको महसुस गरें । बिस्तारै घरमा र घर बाहिर मान्छे आउने क्रम बढेको थियो । मलाई अचम्म लागेको थियो । दशैंको समयमा घरमा धेरै मान्छे देखेर । कसैले केही भनेको थिएन । सबैले बुबाको बारे सोध्नु भयो, अस्पताल जानु भएको छ भन्यौं । पछि एक्कासी जुनेली दिदी रुँदै आउनु भएको देखेँ । दिदीलाई के भएछ भन्ने लाग्यो, पछि छिमेकी भाउजुले बुबा त बित्नु भएछ भन्नु भयो । कति पनि पत्यार लागेन । त्यस्तो सिकिस्त बिरामी त हुनुहुन्थेन । बिहानसम्म रिपोर्ट लिएर जँचाएर आउँछु, खाना सँगै खाउँला, कुरेर बस्नु भनेको सम्झें । पछि जुनु दिदी नै रुँदै आउनु भएको देखेपछि चाहीँ कता कता अर्कै महसूस भयो । बुबाको शव आउँदैछ भन्ने सुन्दा मन नै भारी भयो । पार्टी कार्यालयबाट सिद्धपोखरीदेखि शवयात्रा गर्ने कुरा भएपछि हामी दूधपाटी गयौं । बुबाको लाश आइपुगेको थिएन । एक मनले त्यो खबर झुटो हो, बुबा जीवितै हुनुहुन्छ जस्तो लाग्थ्यो । नभन्दै शब वाहन आइपुग्यो, बुबाको शव बोकेर । अझै पनि आशा थियो, बुबा जुरुक्क उठ्नु हुन्छ कि भनेर । शव यात्रापछि घाटमा पुगेर बुबालाई अन्तिम पटक हेरेर पानी खुवाई घर फर्क्यौं । निकै दुःखद् क्षण थियो त्यो । सबैभन्दा ठूलो डर अब मेरो पढाई अपूरो हुन्छ कि भनेर पनि थियो । आमाले त्यस रात भक्कानेर रुँदै ठूलो स्वरमा सिंह झैं गर्जिंदै हामी तर्फ आएर “जिं बोंके छपुं फुककसिता जिं बोंके” (म पढाउँछु, तिमीहरु सबैलाई) भन्नुहुँदा आफू अशिक्षित भए। पढाइको महत्व कहिल्यै नबुझेको आमाले त्यसो भन्दा निकै आश्चर्य भएको थिएँ ।

बुबा बितेपछि त घरमा बज्रपात नै भयो । मुली नभएको घर आर्थिक संकट झन् झन् बढ्यो । मिबाछैंमा परिवार सर्ने कुरा अनिश्चितकालका लागि टर्न पुग्यो । घर भाडाले घर बनाउँदाको ऋणको ब्याज तिर्नु पर्दथ्यो । दिदीहरुले मलाई पढाइमा पूरै ध्यान दिन र पैसाको चिन्ता नलिन भन्नुहुन्थ्यो । आमा र दिदीहरुको मानसिक र आर्थिक सहयोग नभएको भए मेरो I.Sc. को पढाई सम्पन्न गर्न गाह्रो हुन्थ्यो । प्रथम श्रेणीमा उत्तीर्ण भएँ । घरबाट अझ थप ऋण काँढेरै भए पनि दाइलाई Khwopa Engineering College मा B.E. Civil मा भर्ना गरियो । त्यस्तो अवस्थामा पढाइको लागि मलाई घरमा थप आर्थिक भार थप्न मन थिएन ।

आमाले छोरीको जात अरुको घरमा जानुपर्छ, धेरै पढेर के-काम भन्नु हुन्थ्यो । यति पढे भै गो नि, कतै सानोतिनो जागीर गरे खर्च धान्न नि सजिलो हुन्छ भन्नु हुन्थ्यो । मेरा लागि थप अध्ययन गर्न छात्रवृत्ति बाहेक कुनै विकल्प थिएन । आमालाई मैले मलाई एक पटक मौका दिनुस् पुल्चोक क्याम्पसमा छात्रवृत्तिमा इन्जिनियरिङ्ग पढ्नको लागि प्रवेश परिक्षण

दिन भनैं । आमाले छोरी पनि इन्जिनियर बन्ने हो र ? हुने खाने परिवारको देखासिकी नगर भन्नु भएपनि ज्योति दिदीसँग B.E.Entrance Preparation Course को लागि पैसा मागेर पढ्न थालेँ । मेरो लागि इन्जिनियरिङ्ग पढ्नका लागि त्यो पहिलो र अन्तिम प्रयास थियो । नभन्दै मेरो मेहनत अनुसारको फल मिल्यो । कम्प्यूटर इन्जिनियरिङ्गमा नाम निस्कियो । नाम निस्के पनि कलेजमा तिर्नुपर्ने न्यूनतम सेमेस्टर शुल्क दैनिक यातायात खर्च जुटाउन मुस्किल थियो । ऋणको बोझ ठेग्न नसकेर बाजेको मेहनतले जोडेको जग्गा बेच्नु पर्ने स्थिति समेत आयो । कलेजपछिको समय घरमा टोलका बहिनीहरुलाई गणित विषयमा सघाउन ट्युसन पढाउन थालेँ । पछि जेनी दिदीले शारदा स्कूलमा जागीर खाएपछि अलि सहज भयो । दिदीले मेरो पढाइमा असर परेको देखेर अब ट्युसन पढाउनु पर्दैन राम्रोसँग पढे हुन्छ भन्नु भयो । प्रथम श्रेणीमा स्नातक तहमा उत्तीर्ण गरें ।

इन्जिनियरिङ्गको पढाइपछि Khwopa Engineering College मा पढाउन थालेँ । सूचनामा काम गर्ने रुचि भएर पछि D2Hawkeye Services Pvt. Ltd. मा काम गर्न थालेँ । त्यहाँ काम गर्दागर्दै M.E. अध्ययन गर्ने छात्रवृत्तिका लागि पुल्चोक क्याम्पसको सिफारिसमा कोरियामा आवेदन हालेँ । कोरियन सरकारको छात्रवृत्ति पाई दुई वर्ष कोरियामा अध्ययन गर्न गएँ ।

सरकारी छात्रवृत्तिमा पढेकोले होला सरकारी जागीर खाने सोच बन्यो । कोरियाबाट फर्केर नेपाल दूरसञ्चार प्राधिकरणमा आवेदन दिएँ । छनोट भएपछि त्यहाँ नियुक्त भएदेखि हालसम्म कार्यरत छु । त्यस कार्यालयमा सायद बुबा हुनु भएको भए मेरो सफलताका सिंढीहरु देखेर खुशी हुनुहुन्थ्यो होला । पार्थिव शरीर धर्तीमा नदेखेपनि बेला बेला सपनामा आउनु हुन्छ । लामो समय विदेश यात्रामा भएको र मलाई त्यहाँ विरोधीहरुले फसाई यहाँ आउन नदिएको भन्नुहुन्थ्यो । म आएको कुरा कसैलाई नभन्नु भन्नुहुन्थ्यो ।

परिवार र समाजमा बाँचुञ्जेल बुबाले शिक्षाको लागि झक्झकाइरहनु भयो । आफूले शिक्षा ग्रहण गर्दा पैसाको अभावले गर्नु परेका संघर्षका कथाहरु सुनाउनु हुन्थ्यो । परिवारमा सबैको शिक्षाको जग हाल्नु भयो । घर बाहिर समाजमा हाँस ख्याल ठट्टा गरे पनि रीस चाहीँ आफ्नै मान्छेलाई मात्रै पोख्नु हुन्थ्यो । राम्रो नपढेकाले बुबाले सबैभन्दा बढी गाली जुनेली दिदी र भाइलाई गर्नु भयो । पढ्ने छोराछोरीलाई सधैं माया गर्नु हुन्थ्यो । हजूरआमा बितेपछि बुबाले बारम्बार हजूर आमालाई सम्झिनु भएझैं हामीलाई पनि बुबालाई सम्झिने बनाएर छोड्नु भयो । बुबा बितेपछि शिक्षाको लागि संघर्ष गर्दै धेरै रात सम्झिदै बिताइयो । हजूरबाले बुबालाई राजनीतिमा लाग्दा धन कमाउनु पर्दैन ? भन्दा बुबाले म धन कमाउन हैन जन कमाउन हिंडेको छु भन्नु हुन्थ्यो । नभन्दै बुबाले छोराछोरीका लागि आवश्यक खर्च मुस्किलले जुटाउन सकेपनि जनताको मन जितेर जानुभयो । भक्तपुरका जनता लगायत विभिन्न जिल्लाका मानिसले बासुकला मात्रै सुन्दा पनि बुबालाई सम्झिँदा गर्व लाग्छ । बुबाले साँच्चिकै देश र समाजको लागि अधिकतम समय व्यतित गरेर नाम कमाउनु भएकोमा हाम्रो लागि सधैं शिक्षाको प्रेरणाको श्रोत बन्नुभयो । वहाँको जीवनले गर्दा हामी सबै आ-आफ्नो क्षेत्रमा आत्मनिर्भर हुन सक्षम भएका छौं ।

# बुबा नहुँदाको पीडानुभूति



**राजीव किरण बासुकला**
**(कान्छा सुपुत्र)**

भारतका तात्कालिन प्रधानमन्त्री राजीव गान्धी चर्चामा रहेका बेलामा जन्मेको हुनाले बुबाले मेरो नामै राजीव राखिदिनुभएछ। म सानो छँदा बुबाले माया गर्ने बेला असाध्यै माया गर्ने र गाली गर्ने बेला पनि उत्तिकै गाली गर्नु हुन्थ्यो। मलाई सानो बेला स्कूल जान मन लाग्दैन्थ्यो। म स्कूल जान नमानेपछि बुबाले बोकेरै स्कूल पुऱ्याई दिनुहुन्थ्यो। बच्चा बेला नपढेको भएर बुबाले भन्नुहुन्थ्यो, 'तिमीले एस.एल.सी.सम्म मात्र पढ्ने होला।' कक्षा ४ मै मैले पढाइ छोडको पनि थिएँ। त्यतिबेला हाम्रो भक्तपुर, चोछेँस्थित घरमा चङ्गा उडाउँदा उहाँले मेरो लट्टाई नै लुकाइ दिनुहुन्थ्यो। तर मिबाछेँको घरमा भए केही भन्नुहुन्नथ्यो। सायद चोछेँको घरको छानाबाट खस्ला कि भनेर लट्टाइ लुकाइ दिनुभएको होला। बाल्यकालमा होली खेल्न रहर त थियो, तर बुबाले कहिल्यै पनि होली खेल्न दिनुभएन। म साथीहरुसँग गुच्चा खेलिरहँदा गुच्चा खेलिरहेको स्थानबाटै बुबाले लखेट्नु हुन्थ्यो। बुबा नभएको मौका पारेर गुच्चा खेलिरहन्थेँ। बुबा टाढैबाट आएको साथीहरुले देख्ने बित्तिकै तिम्रो बुबा आयो घर जाऊ भनेर साथीहरुले भन्थे। त्यसपछि गुच्चा नखेलेको भान बुबालाई दिनका लागि घरमा जान्थेँ। हरेक हप्ता शुक्रबारका दिन फिल्म हेर्नका लागि मलाई सि.डि. किन्न पठाउनु हुन्थ्यो र फिल्म हेर्न लगाउनुहुन्थ्यो। बुबाले जहिले पनि राजनैतिक फिल्म हेर्नुहुन्थ्यो र म पनि त्यही फिल्म हेरेर बस्थेँ। यसै क्रममा म सात कक्षामा अध्ययन गरिरहँदा बुबाको देहान्त भयो।

बुबा हुँदै पढाइमा त्यति ध्यान नदिने भएकाले मेरा दिदीहरुले र दाइले मैले एस.एल.सी. मात्र पास गर्ने होला भन्नुहुन्थ्यो। तर बुबाको अभाव भएदेखि मलाई पढाइमा रुचि बढ्दै गएको थियो। मैले एस.एल.सी.मा प्रथम श्रेणीमा पास गर्दा सबै छक्क परेका थिए। एस.एल.सी. पास भएपछि दश जोड दुई पढाउनका लागि प्रभात ईङ्गलिस उच्च मा.वि.का विद्यार्थीका अभिभावकहरुलाई समेत भेला गरिएको थियो। त्यस भेलामा स्कूलका सञ्चालक समितिका अध्यक्षले प्रिन्सिपललाई गाली गरेको देखेर अभिभावकका सामुन्ने त यति धेरै गाली गरे भने अभिभावक नभएका बेला झन् कति गाली गर्दा हुन् भनेर त्यस स्कूलका छात्रछात्राका अभिभावकहरुले यस्ता गाली गर्ने स्कूलमा हाम्रा छोराछोरी नराख्ने भन्दै चारजना बााहेक सबैलाई भक्तपुर जिल्ला बाहिरको स्कूलमा दश जोड दुईमा भर्ना गराई दिए।

दश जोड दुई पढ्न घरमा आर्थिक समस्या थियो। तर साथीहरुकहाँ जाँदा उनीहरुका बुबाले पढ, जति पैसा खर्च हुन्छ, त्यत्ति पैसा दिउँला भन्दा पनि साथीहरुमा पढ्नेतिर त्यति ध्यान दिँदैनथे। त्यस्ता कुरा सुनेर मलाई मात्र यसो भन्ने बुबा भइदिएको भए म कति पढ्थेँ होला जस्तो लाग्दथ्यो। आफ्नो बुबा नभएकाले साथीका बुबासँग ख्यालठट्टा गरेर भए पनि नजिक हुन खोज्दथेँ।

दश जोड दुईको अध्ययन सकिएपछि त्यतिबेला काठमाडौं विश्वविद्यालय अन्तर्गत स्नातक तहमा बि.बि.ए. पढाई हुने भएकाले त्यहाँ पढ्नका लागि मौका परीक्षा दिए। बुबा नभएकाले अभिभावकका रुपमा मैले दाईलाई लगेँ। दाईले पनि भर्खर भर्खरै जागिर पाउनुभएको हुनाले आम्दानी राम्रो अवस्था थिएन। दाईसँग अन्तर्वार्ता लिने क्रममा काठमाडौं विश्वविद्यालयको शुल्क कस्तो छ भनेर सोधियो। दाईले शुल्क अलि महँगो छ भनेपछि मलाई फेल गराइयो। तर पछि दाइले कलेज अनुसारको शुल्क तिर्ने बाचा गरेपछि काठमाडौं विश्वविद्यालयमा भर्ना गराइएँ। घरको आर्थिक अवस्था कमजोर भएकाले धेरै कठिनका साथ बि.बि.ए. अध्ययन पूरा गरेँ।

स्नातक अध्ययनपछि केही समय मैले गोल्छा अर्गनाइजेशनमा काम शुरु गरेँ। त्यहाँ काम गर्ने क्रममा मैले महिनामा १० हजार तलब पाउँथेँ। तर त्यहीँ त्रिभुवन विश्वविद्यालयबाट एम. कम. गर्नेले ३० हजार तलब पाउँथ्यो। तर ३० हजार

तलब पाउनेले राम्रो काम गर्न नजानेको मैले अनुभव गरेँ । त्यस व्यक्तिले यत्तिकै धेरै तलब खाएको देखेर यदि मैले पनि एम.बि.ए. पढेँ भने त यति धेरै तलब पाउने रहेछु भनेर जागीर छोडेरै भएपनि पढ्ने विचार गरेँ । मेरो कामबाट प्रभावित भएर त्यहाँका हाकिमले मलाई बिदा दिन मानेका थिएनन् । म भनेँ यता घरमा पनि कसैलाई नभनीकन मोटरसाइकल बेचेर भारतको बेङ्लोरमा एम.बि.ए. अध्ययनका लागि ५० हजार तिरेँ । यो कुरा सुनेपछि घरमा सबैले मलाई गाली गरे । बैङ्लोरमा दुइवर्ष अध्ययनका लागि करीब १० लाख चाहिने भएर आमा त रुनु नै भयो । ५० हजार तिरिसकेकाले म बाध्यताले नै बैङ्लोर जानुपर्ने भयो । घर धितो राखेर १८ प्रतिशतको व्याजमा अध्ययन गर्न गएँ । घरमा मेरो विषयमा निकै कुराकानी भयो । मलाई दिदीहरुसँग पनि सल्लाह नगरेको र साथीहरुको लहलहै लागेर बैङ्लोर जान लागेकाले दिदीहरुले गाली गर्नुभयो । भारतीय दूतावासबाट भारतका विभिन्न विश्वविद्यालयमा छात्रवृत्ति पाउने कुरा दिदीहरुबाट थाहा पाएँ ।

आमालाई दुइवर्ष त हो नि भनी आश्वासन दिएर १८ प्रतिशतको व्याजमा बैंगलोरमा अध्ययन गर्न गएँ । त्यहाँ पुगेपछि मात्र थाहा पाएँ कि आफ्ना साथीहरु त छात्रवृत्तिमा आएका रहेछन् । म भसङ्ग भएँ । यता आमाको रुवावासीका कारण १८ प्रतिशत व्याज तिर्नुपर्ने देखेर दिदीहरुले पैसा उपलब्ध गराएर बैंकको ऋणबाट मुक्त गरिदिए । वैङलोर बस्दा साथीहरुका बुबाहरुले फोनबाट उनीहरुको हालचाल बुझेको देख्दा पनि मेरा पनि बुबा भएको भए मेरो पनि हालचाल बुझ्थ्यो होला जस्तो लाग्थ्यो । घरको आर्थिक समस्याका कारण मेरो साहिँलो भिनाजुले नेपाल भारत मैत्री संघबाट आंशिक छात्रवृत्तिका लागि सिफारिस पत्र लिनुभयो । त्यो पत्र कान्छी दिदी अफिसको काममा हैदरावाद आउने क्रममा मलाई दिनुभयो । त्यहाँको क्याम्पस प्रमुखले यस्तो छात्रवृत्ति कसैलाई पनि हालसम्म दिइएको छैन, कसैलाई पनि नभन्नु भनी नेपाली रू. करीब १ लाख जतिको छात्रवृत्ति दिए । त्यो रकमले मेरो घरका लागि ठूलो सहयोग गरेको थियो । यसरी मैले घर परिवारलाई तनावमा राखेर बैङ्लोरबाट एम.बि.ए. पूरा गरेँ ।

नेपाल फर्किएपछि जागिरको लागि विभिन्न संघसंस्थामा, कम्पनीहरुमा कोशिस गरेँ । साथीहरुले भन्थे, तिमी त पूर्व सांसदको छोरो हो, तिम्रो नाम त आइहाल्छ । तर सबै ठाउँमा भनसुन गरेका व्यक्तिहरु मात्र लिएको देख्दा त्यति धेरै पैसा खर्च गरेर बेकारमा पढ्न गएको जस्तो पनि लाग्यो । केही महिनासम्म अब के गर्ने भने सोचेँ । कुनै काम गरौँ भने लगानी गर्न पैसा छैन । साथीहरुले भन्थे, तिमी पनि राजनीतिमा लाग । मलाई थाहा थियो कि बुबाको देहान्त हुनुपूर्व केही महीना बुबा निराश भएर मिबार्छेको कोठामै बसिरहनुहुन्थ्यो । मलाई बदाम र सुन्तला किन्न पठाउनु हुन्थ्यो । बदाम र सुन्तला खाएर फिल्म मात्र हेरिरहनुहुन्थ्यो । बुबाको त्यही अवस्था सम्झेर राजनीतिमा सक्रिय हुनको लागि आफ्नो आम्दानीको पृष्ठभूमि राम्रो पार्नु पर्दोरहेछ भन्ने लाग्यो । त्यही भएर मैले व्यापार गर्नुपर्छ भन्ने सोचेँ । त्यसपछि छिमेकी काका हरिप्रसाद सुवालकहाँ गएर काम दिनुस् भन्न पुगेँ । उहाँकै अफिसमा केही महिना काम गरेँ । काका, मैले कुनै काम गर्न लगानी गर्न पैसा छैन भन्दा उहाँले नै बुबाको मुख हेरेर मलाई उपलब्ध गराएको ऋणबाट आशा पोल्ट्री फोर्म दर्ता गरेर कुखुरापालन व्यवसाय शुरु गरेँ । कुखुरापालन गरेको डेढ वर्षपछि भुँइचालोले घर भत्किएर ४ हजार कुखराहरु किचेर त्यस व्यवसायमा पूरै डुब्न पुगेँ । त्यतिकै त बस्नुभएन भनेर ऋणको भार छ भनी अण्डा बिक्री वितरण कार्यमा लागिरहेको छु । सबैले मलाई भन्छन् कि त्यत्तिका धेरै अध्ययन गर्नेले यस्तो व्यवसाय गर्ने हो र ? यो अध्ययन नगरेका व्यक्तिले गर्ने व्यवसाय हो । कतिपयले बुबाको नाम लिएर उनका छोराले अण्डा बेचेर हिँडेका छन् भनेर खिस्सि पनि उडाउँछन् । तर मलाई घर परिवारले दिएको प्रेरणाले यस पेशालाई निरन्तरता दिइरहेको छु । काम र उद्यम ठूलो कुरो हो, कुनै काम ठूलो र कुनै काम सानो भन्ने सोचाइ नै सानो हो भन्ने मलाई लागेको छ ।

घरबाट बिहे गर्ने उमेर भैसक्यो भनेर केटी खोज्ने काम भयो । केटीहरु खोज्ने क्रममा बुबा नभएकै केटीहरु खोजेका हुन्छन् । आमाले मलाई भन्नुहुन्थ्थ्यो, तिम्रो पनि बुबा छैन, तिनको पनि बुबा छैन तिमीहरुको कस्तो मिलेको है । यी वाक्यहरुले मलाई असाध्यै मनमा चीसो पर्छ । यही कारणले मैले सोचेँ कि बुबा नभएको छोरीसँग त म बिहे गर्दै गर्दिनँ । आखिरमा मैले बुबा भएको घरकी छोरीसँग नै बिहे गरेर आफ्नो बुबा नभएको पीडा केही भए पनि कमी महसूस गरेँ । बुबाको अनुपस्थितिमा जीवन संर्घर्ष गर्न गाह्रो हुँदो रहेछ । यो पनि मेरो जीवन संघर्षको ठहर हो ।

# हाम्रा मामा



ई. विनेश मुनंकर्मी

म काठमाडौंमा जन्मे हुर्केकोले भक्तपुरमा गाडी चढेर मामाघर आउँदा धेरै खुशी हुन्थेँ । मामाघर आउँदा मामा एक्लै हुनुभएकाले हामीसँग रमाइलो तरिकाले गफगाफ गर्नुहुन्थ्यो । उहाँले मलाई जहिले पनि अंग्रेजी भाषाबाट साधारण प्रश्नहरु सोध्नु हुन्थ्यो र म पनि अंग्रेजीबाटै जवाफ दिन्थेँ । कहिलेकाहीँ जिस्केर जे पायो त्यही प्रश्न गर्नुहुन्थ्यो, म पनि त्यस्तै जे पायो त्यही उत्तर दिइरहने । मामा र म दुबै रमाइलो मानिरहेका हुन्थ्यौं । मामाको अनुहार र जिउडाल देखेर सबैजना उहाँसँग डराउँथे । तर म उहाँसँग डराउँन्नथेँ । त्यही भएर होला, म उहाँ भाञ्जाहरु मध्ये प्रिय भाञ्जा थिएँ । मेरो बढी बोलिरहने बानी भएता पनि मामाले कहिले पनि बढी कराइस् भनेर गाली गरेको थाहा छैन । तर मैले आमालाई दुःख दिएँ भने मामाले मलाई दुख्ने गरी चिमोटेको स्मरण छ । त्यसैले मैले मामाको हातबाट चिमोटिदेला भनेर धेरै पीर हुन्थ्यो । त्यसैले म मामाको अगाडि सतर्क भएर आमालाई दुःख दिन्नथेँ ।

भक्तपुरमा बसोबास भएपछि मामाघर आउन जान सजिलो भएकाले भाइहरुसँग उमेरको हिसाबले कुरा मिल्ने भएपछि झन् आउने जाने क्रम बढ्दै गयो । म उमेरले युवा अवस्था पुगेपछि मामालाई रीस उठ्ने गरी जे पायो त्यही भने पनि उहाँले मलाई कहिल्यै गाली गर्नुभएन । उहाँले मलाई पिटेको, गाली गरेको र नराम्रो शब्द बोलेको मलाई थाहै छैन । मामा शिक्षक पनि हुनुभएकाले धेरै अनुशासनमा राख्नुहुन्थ्यो । उहाँ मसँग जिस्किने र सिकाउने पनि गर्नुहुन्थ्यो । उहाँले मलाई कहिले पनि काम गराएको छैन र काम अह्राएको पनि थाहा छैन । कुनै समस्या भयो मामा भन्दा त्यसको समाधान पनि तुरुन्तै गर्नुहुन्थ्यो ।

मामा राजनीतिज्ञ भएता पनि मामासँग भेट हुँदा जहिले पनि पढाइको बारे मात्र कुराकानी हुन्थ्यो । कहिल्यै पनि मसँग राजनीतिको कुरा गर्नुभएन । मामा सांसद हुँदा पनि कहिल्यै ठूलो भएर कुरा गर्नुभएन । सांसद हुँदा पनि उहाँलाई भेट्न उहाँ उठ्नु भन्दा पहिल्यै घर गएर कराउन जान्थेँ । तैपनि उहाँले मलाई एक शब्द पनि गाली गर्नु भएन । सांसद हुँदा उहाँले मलाई सिंहदरबार पनि लानुभयो । त्यहाँ जोसँग भेटघाट हुँदा पनि सबैजनासँग यो मेरो भाञ्जा हो, यो फलानो व्यक्ति हो भनेर परिचय गराउनुहुन्थ्यो । म पनि ठूलाबडासँग भेट गर्न पाएकोमा मख्ख हुन्थेँ ।

एकदिन भाइले मलाई मामा बित्नुभयो भन्दा मलाई पत्यार लागेको थिएन । मैले यस्तो कुरा पनि गर्ने हो र भनेर गाली गरेँ । तर मैले भाइलाई अनायासमै गाली गर्न पो पुगेछु । त्यसपछि मामाघर जाँदा शून्य भएको महसूस हुन थाल्यो र मामाघर जाने दिनचर्या पनि कम हुँदै गयो । मलाई लाग्छ मामा भइदिएको भए मैले धेरै कुरा सिक्थेँ होला ।

# मामाघरको हजरबुबाको सम्झना



**जुल्सन मगजु**
(नाति)

मामाघरको बाजेको माहिली छोरीको पहिलो सन्तान उहाँको पनि पहिलो नाति मलाई देख्ने बित्तिकै उहाँ धेरै खुशी हुनुहुन्थ्यो। पुरुष प्रधान समाजमा छोरालाई महत्व दिने परम्परा भएतापनि मेरो हजुरबुबाको पाँचजना छोरीलाई छोराहरु सरह नै शिक्षा प्रदान गर्नुभयो। म सानो छँदा मामाघरमा मलाई सबैले माया गर्ने भए पनि सबैभन्दा बढी माया गर्ने हजुरबुबा नै हुनुहुन्थ्यो। मैले सबैको माया बढी पाउने भएकाले होला म बढी पुल्पुलिएको थिएँ। मलाई अहिलेसम्म पनि सम्झना छ कि बाजेले मलाई काखमा लिनु हुँदा मैले बाजेको चश्मा र टोपी निकालेको देखेर रिसाएर आमाले मलाई पिट्न लाग्नु भयो। तर बाजेले 'नपिट्, अहिले मात्र यस्तो गर्छ, पछि ज्ञानी हुन्छ' भनेर आमाको झापडबाट बचाउनु भयो। मिबार्छेको घरमा पेप्सीको डिलर भाडामा भएकोले पेप्सी खुवाउन लगेको पनि सम्झना छ। बाजे राजनैतिक कार्यमा व्यस्त भए पनि समय निकालेर मलाई दरबार स्क्वायरमा घुमाउन लानुहुन्थ्यो। मामाघरमा मलाई देख्ने बित्तिकै गोजीबाट साँचो निकालेर मेरो पेटमा साँचो राखेर ताल्चाले खोल्यो खोल्यो भनेर भन्नुहुन्थ्यो। म भन्ने दंग परेर खुब हाँस्दथेँ। मेरो जन्मदिनमा मलाई उपहार दिनुभएको मलाई अझैसम्म सम्झना छ।

एकदिन मेरो घरका सबै सदस्य बाजे, बज्यै, बुबा, आमाले मलाई घरमा छोडेर जानुभयो। किन मलाई सबैले घरमै छोड्यो मलाई थाहै थिएन। राती अबेर भएपछि सबैजना घर आउनुभयो। केही दिनपछि मलाई आमाले मामाघर लानुभयो। मामाघर पुग्दा त हजुर आमा, ठूली आमा र सानी आमाहरु सबैजना रोएको देखेर मेरो आँखा पनि रसाएको थियो। तर मैले मामाघरमा बाजेलाई भने देखेको थिएन। मेरो बाबाले पनि कपाल खौरेको थियो। यी सबै दृश्य देखेर म आश्चर्य चकित भएको थिएँ। त्यतिबेला मात्र थाहा पाए कि हजुरबुबा त बित्नु पो भएको रहेछ।

हजुरआमा सबैभन्दा दुःखी हुनुहुन्थ्यो। हजुरआमाले आफ्नो जीवन साथी गुमाउनु परेको र घरको थप जिम्मेवारी बढेको थियो। तर मेरी हजुरआमाले श्रीमान नहुँदा पनि घरको जिम्मेवारी लिई छोरा छोरीलाई कुनै कुरामा कमी राख्नुभएन। हजुरआमा आफ्नो कर्तव्य निभाउन सफल हुनुभयो। हजुरबुबा हामीबीच नभए पनि उहाँको सम्झना सदावहार छ। उहाँले आफ्ना छोराछोरीलाई दिएको शिक्षादीक्षाले गर्दा उहाँकै छोराछोरीको प्रेरणा र सहयोगले म यहाँ अमेरिकासम्म उच्च शिक्षा हासिल गरी उज्ज्वल भविष्य निर्माणका लागि अवसर पाएको छु। मेरो बाजे महान् दूरदर्शी भएको व्यक्ति हुनुहुन्थ्यो जस्तो मलाई लाग्छ।

